भूयश्च सूदवेशं कृत्वा राजाज्ञेति मानुषमांसं संस्कृत्य राज्ञे न्यवेदयत्। असावपि हिरण्यपात्र स्थितं - मांसमादाय वसिष्ठागमनप्रतीक्षोऽभवत् ॥२६॥

आगताय च वसिष्ठाय निवेदितवान्, स चाचियन्तयत्, अहो! राज्ञोऽस्य दौःशील्यम् येनैतन्मांसमस्माकं प्रयच्छति। किमेतद् द्रव्यजातमिति ध्यानपरोऽभूत्, अपश्यच्च तन्मानुषमांसम्। ततश्च क्रोधकलुषीकृतचेता राजानंप्रति शापमुत्ससर्ज, यस्मादभोज्य-मस्मद् विधानां तपस्विनाम् अवगच्छन्नपि भवान् मह्यं ददाति तस्मात्तवैवात्र लोलुपा बुद्धिर्भविष्यतीति ॥२७॥

अनन्तरञ्च तेनापि भगवतैवाभिहितोऽस्मीत्युक्तः किं किं मयैवाभिहितम् इति पुनरपि समाधौ तस्थौ ॥२८॥

समाधिविज्ञानावगतार्थश्चास्यानुग्रहं चकार, नात्यन्तमेतत्, द्वादशाब्दं भवतो भोजनं भविष्यतीति ॥२९॥

असावपि तु प्रगृह्योदकाञ्जलिं मुनिशापप्रदानायोद्यतो 'भगवानस्मद्गुरुः नार्हस्येवं कुलदेवताभूतमाचार्यं शप्तु' मिति स्वपत्न्या मदयन्त्या प्रसादितः। शस्याम्बुदरक्षार्थं तच्छपाम्बु नोर्व्यां न चाकाशे चिक्षेप, तेनैव स्वपादौ सिषेच ॥३०॥

मनुष्यको मासु पकाएर राजालाई सुम्पिदियो। राजाले पनि त्यसलाई सुवर्णको पात्रमा सजाएर त्यो मासु लिएर वसिष्ठ ऋषिको आगमनको प्रतीक्षा गर्न थाले ॥२६॥ त्यसपछि जब वसिष्ठ ऋषि फर्किएर आए, तब उनलाई भोजन गर्नका लागि त्यो मासु दिए। त्यस समयमा वशिष्ठ ऋषिले विचार गरे, अहो ! यी राजाको कस्तो चलाखीपन रहेको छ ? यिनले जानी-जानी मलाई यो मासु भोजनका लागि दिइरहेका छन्। त्यसपश्चात् त्यो मासु केको रहेछ भनेर जान्नका लागि उनी ध्यान गर्न थाले। ध्यानावस्थामा उनले त्यो मनुष्यको मासु भएको थाहा पाए। त्यसपछि क्रोधले अत्यन्त व्याकुल चित्त भएका ऋषिले राजालाई श्राप दिए। "किनकि तिमीले जानी-जानी पनि हामीजस्ता तपस्वीहरूका लागि अत्यन्त अभक्ष्य अर्थात् संसर्गमा ल्याउनै नहुने यो मनुष्यको मासु खानलाई दियौ, यसकारण तिम्रो बुद्धि मनुष्यको मासुको प्राप्तिमा अत्यन्त लालायित हुनेछ अर्थात् तिमी राक्षस हुनेछौ ॥२७॥ त्यसपछि राजाले भने- "हे भगवन्! हजुरले नै यस प्रकारको भोजन बनाउन लगाउने आज्ञा दिनुभएको थियो।" राजाको यस किसिमको कुरा सुनिसकेपछि ऋषि वसिष्ठले भने- "के मैले नै यस किसिमको भोजन तयार गर्ने आज्ञा दिएको थिएँ ?" यसपछि वसिष्ठ फेरि ध्यानस्थ भए। समाधिका माध्यमद्वारा सबै कुराको ज्ञान भएपछि उनले राजामा अनुग्रह अर्थात् निगाहा गर्दै भने- "तिमीले धेरै समयसम्म राक्षस भएर मनुष्यको मासु खानुपर्ने छैन, केवल बाह्र वर्षसम्म मात्र तिमीले मनुष्यको मासुको भोजन गर्नुपर्छ" ॥२८-२९॥ महर्षि वसिष्ठले यसरी भनिसकेपछि राजा पनि हातमा जल लिएर वसिष्ठलाई श्राप दिनका लागि तयार भए। तर आफ्नी पत्नी मदयन्तीद्वारा "भगवन् ! यिनी हाम्रा कुलका गुरु हुन्, यी कुलदेवतास्वरूप आचार्यलाई श्राप दिनु कल्याणदायक हुँदैन। त्यसकारण हजुरले यस प्रकारको अशोभनीय कार्य नगर्नुहोस्" यसरी भनिसकेपछि राजा शान्त भए। त्यसमा अञ्जुलीमा लिइएको श्रापयुक्त

तेन क्रोधशृतेनाम्भसा दग्धच्छायौ तत्पादौ कल्माषतामुपगतौ ॥३१॥

ततश्च स कल्माषपादसंज्ञामवाप, वसिष्ठशापाच्च षष्ठे काले राक्षसभाव-मुपेत्याटव्यां पर्य्यट न्ननेकशो मानुषान-भक्षयत् ॥३२॥

एकदा तु कञ्चिन्मुनिमृतुकाले भार्यया सह सङ्गतं ददर्श ॥३३॥

तयोश्च तमतिभीषणं राक्षसमवलोक्य त्रासात् प्रधावितयोर्दम्यपत्योर्ब्राह्मणं जग्राह ॥३४॥

ततः सा ब्राह्मणी बहुशस्तं याचितवती–प्रसीद इक्ष्वाकुकुलतिलकभूतस्त्वं महाराजो मित्रसहः, न राक्षसः। नार्हसि स्त्रीधर्मसुखाभिज्ञो मय्यकृतार्थायामिमं मद्भर्त्तारमत्तुम्; इत्येवं बहुप्रकारं तस्यां विलपन्त्यां व्याघ्रः पशुमिव तं ब्राह्मणमभक्षयत् ॥३५॥

जल पृथ्वी वा आकाशमा फ्याँक्नाले अन्न र मेघ अर्थात् आकाशमा जम्मा भएको जलकण अथवा बादल पूर्ण रूपमा नष्ट हुनेछ भन्ने विचार गरेर राजाले त्यो जल आफ्ना दुवै खुट्टाहरूमा झारिदिए ॥३०॥ त्यो क्रोधबाट पूर्णरूपमा सम्पन्न भएको अग्निबाट अत्यन्त तातेको जल परेपछि उनका दुवै खुट्टा कल्माषवर्ण भएका अर्थात् सेतो कालो मिसिएको रङ्गबाट सम्पन्न भए। यसैकारणले गर्दा पछि यी राजाको नामा कल्माषपाद रहन गयो ॥३१॥ त्यसपश्चात् महर्षि वसिष्ठको श्रापका प्रभावले गर्दा छैटौं काल अर्थात् तेस्रो दिनको अन्त्यको समयमा राजा राक्षस रूप भएर वनमा घुम्दै अर्थात् भ्रमण गर्दै अनेकौं मनुष्यहरूलाई मारेर तिनीहरूको मासुको भोजन गर्न थाले ॥३२॥ ती राक्षसरूपी राजाले एक दिन ऋतुकालमा अर्थात् परसरेको वा रजस्वला भएको सोह्र रातसम्मको बेलमा आफ्नो स्त्रीसँग सम्भोग अर्थात् समागम गरिरहेका ब्राह्मणलाई देखे ॥३३॥ त्यस समयमा अत्यन्त भयानक स्वरूप भएको राक्षसलाई देखेर अत्यन्त भयभीत भएर भागिरहेका ती ब्राह्मण-दम्पतीमध्ये ब्राह्मणलाई राक्षसरूपी राजाले समाए ॥३४॥ त्यस समयमा ती ब्राह्मणीले ती राक्षसरूपी राजासँग अनेकौं किसिमले अनुनय-विनय गरिन्। हे महाराज ! प्रसन्न हुनुहोस्। तपाईं राक्षस नभएर इक्ष्वाकुकुलका कुलतिलकस्वरूप महाराज मित्रसह हुनुहुन्छ। हजुर स्त्रीधर्मका सुखको पूर्ण रूपमा ज्ञाता हुनुहुन्छ, मेरो मनोकामना पूर्ण हुन नपाएका अवस्थामा अर्थात् मलाई पूर्ण रूपमा सम्भोग वा समागमको सुख प्राप्ति नभएका अवस्थामा मेरो पतिलाई खाइदिनु तपाईंका लागि उचित हुँदैन। यसप्रकार ती ब्राह्मणीद्वारा अत्यन्त कामुक भएर धेरै विलापअलाप गरिएको कुरामा ध्यानै नदिई ती राक्षसरूपी राजाले जसरी बाघले पशुलाई खान्छ त्यसरी नै ती ब्राह्मणलाई पनि खाइदिए ॥३५॥ त्यसपश्चात् अत्यन्त कामुक अवस्थामा रहेकी ब्राह्मणी अत्यन्तै क्रोधित भएर ती राक्षसरूपी राजालाई श्राप दिइन्-

ततश्चातिकोपसमन्विता ब्राह्मणी तं राजानं 'यस्मादेवं मय्यतृप्तायां त्वयायं मत्पतिर्भक्षितः, तस्मात् त्वमप्यन्तंकामोपभोगप्रवृत्तः प्राप्स्यसि' इति शशापाग्निं च प्रविवेश ॥३६॥

ततस्तस्य द्वादशाब्दपर्यये विमुक्तशापस्य स्त्रीविषयाभिलाषिणो मदयन्ती स्मारयामास। ततश्च परमसौ स्त्रीसम्भोगं तत्याज ॥३७॥

वसिष्ठश्च अपुत्रिणा राज्ञा पुत्रार्थमभ्यर्थितो मदयन्त्यां गर्भाधानं चकार। यदा च सप्त-वर्षाण्यसौ गर्भो न जज्ञे, ततस्तं गर्भमश्मना देवी जघान। पुत्रश्चाजायत। तस्य चाश्मक एव नामाभवत्। अश्मकस्य मूलको नाम पुत्रोऽभवत्। योऽसौ निःक्षत्रेऽस्मिन् क्ष्मातले क्रियमाणे स्त्रीभिर्विवस्त्राभिः परिवार्य्य रक्षितः। ततस्तं नारीकवचमुदाहरन्ति। मूलकाद् दशरथः, तस्मादिलिविलः, ततश्च विश्वसहः, तस्माच्च खट्वाङ्गो दिलीपः। योऽसौ देवासुराणां सङ्ग्रामे देवताभिरभ्यर्थितोऽसुरान् जघान। स्वर्गे च कृतप्रियैर्देवैर्वरार्थं चोदितः प्राह,– यद्यवश्यं वरो ग्राह्यस्तन्ममायुः कथ्यतामिति। अनन्तरञ्चैतै-रुक्तम्एकमुहूर्तप्रमाणं तवायुः। इत्यु-

ममा उत्पन्न भएको कामवासना तृप्त हुनुभन्दा पहिला नै अर्थात् म कामवासनाको रसास्वाद गर्दै बीचमा मात्र पुगेको अवस्थामा तिमीले मेरो पतिलाई खाइदियौ। त्यसकारण जब तिमी पनि स्त्रीसँग सम्भोग अर्थात् समागम गर्ने कार्यमा लाग्नेछौ, त्यसै समयमा तिम्रो पनि मृत्यु हुनेछ। यस प्रकारको श्राप दिएर ती ब्राह्मणीले अग्निमा प्रवेश गरिन् ॥३६॥ त्यसपश्चात् बाह्र वर्षको अन्त्यमा श्रापमुक्त भइसकेपछि राजा कल्माषपाद एक दिन अत्यन्त कामुक भएर आफ्नी स्त्रीसँग सम्भोग वा समागमका लागि उत्तेजित भएका अवस्थामा उनकी रानी मदयन्तीले उनलाई ब्राह्मणीका श्रापको स्मरण गराइदिइन्। त्यस समयदेखि राजाले स्त्रीसँग सम्भोग अर्थात् समागम गर्ने कार्य पूर्ण रूपमा परित्याग गरिदिए ॥३७॥ त्यसपश्चात् पुत्रहीन राजाद्वारा प्रार्थना गरिएपछि महर्षि वसिष्ठले मदयन्तीका गर्भाशयमा गर्भस्थापना गराइदिए। तर त्यो गर्भ सात वर्षसम्म गर्भाशयबाट बाहिर आउन सकेन। त्यसपछि रानी मदयन्तीले त्यो गर्भलाई ढुङ्गाले हिर्काएपछि त्यसबाट एउटा पुत्रले जन्म लियो र त्यो पुत्रको नाम अश्मक भयो। अश्मकको पुत्ररत्नका रूपमा मूलक उत्पन्न भएका थिए। त्यसै समयमा परशुराम पृथ्वीमा रहेका सबै क्षत्रियहरूको पूर्ण रूपमा विनाश गर्ने कार्यमा अत्यन्त तत्परतापूर्वक लागेका थिए। त्यस बेलामा निर्वस्त्र अर्थात् नाङ्गै भएका स्त्रीहरूले चारैतिरबाट घेरेर मूलकको सुरक्षा गरेका थिए। त्यसकारण उनको नाम नारीकवच रहेको थियो। मूलकका पुत्ररत्नका रूपमा दशरथ उत्पन्न भएका थिए। दशरथका पुत्ररत्नका रूपमा इलिविल उत्पन्न भएका थिए र इलिविलका पुत्ररत्नका रूपमा विश्वसह उत्पन्न भएका थिए। यसरी नै विश्वसहका पुत्ररत्नका रूपमा खट्वाङ्ग दिलीप उत्पन्न भएका थिए। तिनै खट्वाङ्ग दिलीपले देवसुर-संग्राम अर्थात् देवता र असुरहरूको युद्धमा देवताहरूले प्रार्थना गरेपछि दैत्यहरूको वध गरेका थिए। त्यस समयमा स्वर्गका देवताहरूले आफ्नो कल्याण गरिदिएको सम्झिएर उनलाई वरदान दिने विचार गरे। त्यसपश्चात्

त्तोऽस्खलितगतिना विमानेन लघिमगुणो मर्त्यलोकमागम्याह,- यथा न ब्राह्मणेभ्यः सकाशादात्मापि मे प्रियतरः, न चापि स्वधर्मोल्लङ्घनं मया कदाचिदप्यनुष्ठितम्, न च सकल देवमानुष-पशु-वृक्षादिकेऽप्य-च्युतव्यतिरेकवती दृष्टिर्ममाभूत्, तथा तमेव देव-मुनिजनानुस्मृतं भगवन्तमस्खलितगतिरद्य प्रापयेयमित्यशेषदेवगुरौ भगवत्यनिर्देश्यवपुषि सत्तामात्रात्मन्यात्मानं परमात्मनि वासुदेवे युयोज, तत्रैव च लयमवाप ॥३८॥

तत्रापि श्रूयते श्लोको गीतः सप्तर्षिभिः पुरा।
खट्वाङ्गेन समो नान्यः कश्चिदुर्व्यां भविष्यति ॥
येन स्वर्गादिहागत्य मुहूर्तं प्राप्य जीवितम्।
त्रयोऽभिसंहिता लोका बुद्ध्या दानेन चैव हि ॥३९॥

खट्वाङ्गतो दीर्घबाहुः पुत्रोऽभवत्। ततो रघुः तस्मादप्यजः अजाद् दशरथः दशरथस्यापि श्रीभगवान् अब्जनाभो जगत्स्थित्यर्थमात्मांशेन्न रामलक्ष्मण-भरत-शत्रुघ्नरूपिणा चतुर्द्धा पुत्रत्वमयासीत् ॥४०॥

खट्वाङ्गले भने- "यदि तपाईंहरू निश्चित रूपमा मलाई वरदान चाहनुहुन्छ भने तपाईंहरू मेरा आयुको निश्चित सीमा वा अवधि बताइदिनुहोस्"। त्यसपछि देवताहरूले भने- "हे राजन्! तपाईंको आयु केवल एकमुहूर्तमात्र अवशिष्ट अर्थात् बाँकी रहेको छ"। देवताहरूले यस्तो भनिसकेपछि खट्वाङ्ग दिलीप कसैद्वारा व्यवधान उत्पन्न गराउन नसक्ने किसिमको गति भएको एक देवरथमा बसेर अत्यन्त शीघ्रतापूर्वक मृत्युलोकमा आइपुगेर भन्न थाले- जसरी ब्राह्मणहरूका तुलना मेरो आत्मा पनि प्रिय रहेको छैन, जसरी मैले कहिल्यै आफ्नो धर्मको उल्लङ्घन गरिन् र जसरी सधैं मेरो दृष्टि देवता, मनुष्य, पशु, वृक्ष आदिमा पनि एक समान अर्थात् एउटै किसिमको रह्यो, त्यसैका प्रभावले आज परमात्मातत्त्वको ज्ञान भएको मैले ती महर्षिहरूले सधैं स्मरण र चिन्तन गरिनुहुने भगवान् श्रीविष्णुलाई प्राप्त गर्न सकूँ, यसो भन्दाभन्दै राजा खट्वाङ्ग, दिलीपले आफ्नो चित्त अर्थात् अन्तरात्मालाई सम्पूर्ण देवताहरूका गुरु, अकल्पनीय स्वरूप हुनुभएका परब्रह्म परमात्मा भगवान् श्रीवासुदेवमा स्थापित गरिदिए र उहाँमा नै विलीन भए ॥३८॥ प्राचीन कालमा सप्तर्षिहरूले खट्वाङ्ग विषयमा यस किसिमको एउटा श्लोक रहेको बताएका छन्। जसमा भनिएको छ- "सम्पूर्ण पृथ्वीमा खट्वाङ्ग समानका अन्य कुनै पनि राजा छैनन्, अर्थात् उनी जस्ता राजा अन्य कोही पनि जन्मिएका छैनन्; जसले एक मुहूर्त मात्र आफ्नो आयु रहेको ज्ञान भएर स्वर्गबाट पृथ्वीलोकमा आएर आफ्नो बुद्धिद्वारा तीनोटै लोकहरूलाई सत्यस्वरूप परब्रह्म परमात्मा भगवान् श्रीवासुदेवमय देखे" ॥३९॥ खट्वाङ्गका पुत्ररत्नका रूपमा दीर्घवाहु उत्पन्न भएका थिए। दीर्घबाहुका पुत्ररत्नका रूपमा रघु र रघुका पुत्ररत्नका रूपमा अज उत्पन्न भएका थिए। त्यसरी नै अजका पुत्ररत्नका रूपमा दरशथ उत्पन्न भएका थिए। दशरथका पुत्ररत्नका रूपमा स्वयं भगवान् पद्मनाभ श्रीविष्णु जगत्को स्थितिका लागि आफ्ना अंशहरूबाट राम, लक्ष्मण, भरत र शत्रुघ्न यी चार रूपहरूबाट अवतीर्ण हुनुभएको थियो ॥४०॥ भगवान् श्रीरामचन्द्रले बाल्यावस्थामा नै विश्वामित्रको यज्ञको रक्षा गर्न जाँदाका अवस्थामा बाटामा ताडका नाम भएकी राक्षस्नीको

रामोऽपि बाल एव विश्ववामित्रयज्ञरक्षणय गच्छंस्ताडकां जघान ॥४१॥

यज्ञे च मारीचमिषुपाताहतं दूरं चिक्षेप, सुबाहुप्रमुखांश्च क्षयमनयत्। सन्दर्शन-मात्रेणैवाहल्यामपापां चकार। जनकगृहे च माहेश्वरं चापमनायासैनैव बभञ्ज, सीताञ्चायोनिजां जनकराजतनयां वीर्यशुल्कां लेभे ॥४२॥

सकलक्षत्रक्षयकारिणमशेषहैहयकुलधूमकेतुभूतञ्च परशुराममपास्तवीर्यबलावलेपं चकार ॥४३॥

पितृवचनाच्चागणितराज्याभिलाषो भ्रातृभार्यासमन्वितो वनं विवेश ॥४४॥

विराध–खर–दूषणादीन् कबन्ध–वालिनौ च जघान। बद्ध्वा चाम्भोनिधिम् अशेषराक्ष–सकुलक्षयं कृत्वा दशाननापहृतां तद्वधापहत-कलङ्कामप्यनलप्रवेश–शुद्धामशेषदेवेश–संस्तूयमानां सीतां जनकराजतनया–मयोध्यामानिन्ये ॥४५॥

भरतोऽपि गन्धर्वविषयसाधना-योग्रगन्धर्वकोटीस्तिस्रो जघान शत्रु!नेनाप्यमि-तबलपराक्रमो मधुपुत्रो लवणो नाम राक्षसेश्वरो निहतो

विनाश गर्नुभएको थियो ॥४१॥ त्यसपछि विश्वामित्रको यज्ञशालामा पुगेर मारीचलाई वाणरूपी वायुद्वारा अत्यन्त व्याकुल पारेर समुद्रमा फ्याँकिदिनुभयो र सुबाहु आदि राक्षसहरूको पनि विनाश गरिदिनुभयो। उहाँले आफ्नो दर्शनबाट मात्र अहल्यालाई सबै पापहरूबाट पूर्ण रूपमा मुक्त गराइदिनुभयो, राजा जनकको राजसभामा अनायासरूपमा श्रीमहादेवको धनुष भाँच्नुभयो र पुरुषार्थबाटै प्राप्त हुने एवं जसको स्वयम्वरका लागि त्यो सभाको आयोजना गरिएको थियो, तिनै राजा जनककी पुत्री श्रीसीतालाई पत्नीका रूपमा ग्रहण गर्नुभयो ॥४२॥ विवाहपश्चात् अयोध्या फर्किंदाका समयमा बाटामा श्रीरामचन्द्र भगवान्ले सबै क्षत्रियहरूको विनाश गराउने तथा अशेष अर्थात् सबका सब वा बँकी नबचेको हैहय कुलका लागि अग्निस्वरूपमा रहेका परशुरामको बल एवं वीर्यको घमण्ड नष्ट गरिदिनुभएको थियो ॥४३॥ त्यसपश्चात् आफ्नो राज्य अयोध्यामा आइसकेपछि आफ्ना पिताश्रीको आज्ञाअनुसार राज्यको अभिलाषा परित्याग गर्दै भगवान् श्रीरामचन्द्रले आफ्ना भाइ लक्ष्मण र पत्नी सीतासहित वनवासका लागि वनमा प्रवेश गर्नुभयो ॥४४॥ वनवासमा रहँदाका अवस्थामा विराध, खर, दूषण आदि राक्षसहरूको तथा कबन्ध र बालीको वध गर्नुभयो। त्यसपछि सागरमा पुल हालेर सम्पूर्ण राक्षस कुलको विनाश गरेर रावणद्वारा अपहरित हुनुभएकी तथा रावणवधबाट निःष्कलङ्क हुनुभएकी तथा अग्निमा प्रवेश गरेर शुद्ध हुनुभएकी एवं सम्पूर्ण देवताहरूद्वारा स्तुति गरिनुभएकी राजा जनककी पुत्री श्रीसीताजीलाई साथमा लिएर भगवान् श्रीरामचन्द्र अयोध्यामा आउनुभयो ॥४५॥ त्यसपश्चात् गन्धर्व राज्य प्राप्त गर्नका लागि भरतजीले तीन करोड गन्धर्वहरूको पूर्ण रूपमा विनाश गरिदिए। शत्रुघ्नले पनि महाबलशाली एवं अत्यन्त पराक्रमी मधुको पुत्र लवण नाम भएको राक्षसको विनाश गरेर अर्थात् त्यसलाई मारेर मथुरा नाम भएको नगरी स्थापना गरे। यसरी आफ्नो अतुलनीय शक्तिद्वारा धेरै दुरात्माहरूको अर्थात्

मथुरा च निवेशिता। इत्येवमाद्यतुलबलपराक्रम–विक्रमणैरति–दुष्टनिवर्हणैरशेषस्यास्य जगतो निष्पादित–स्थितयो राम–लक्ष्मण–शत्रुघ्नाः पुनर्दिवमारूढाः। येऽपि तेषु भगवदंशेष्वनुरागिणः कोशलनगर–जानपदास्तेऽपि तन्मनसस्त–त्सलोकतामवापुः ॥४६॥

रामस्य तु कुश–लवौ पुत्रौ, लक्ष्मणस्याङ्गद–चन्द्रकेतु, तक्ष–पुष्करौ भरतस्य सुबाहु–शूरसेनौ च शत्रुघ्नस्य ॥४७॥

कुशस्यातिथिः अतिथेरपि निषधः पुत्रोऽभवत्। निषधस्यापि तलः, तस्यापिनभः, नभसः पुण्डरीकः, तत्तनयः क्षेमधन्वा, तस्य च देवानीकः। तस्याप्यहीनगुः ततो रुरुः तस्य च परिपात्रः, परिपात्राद्दलः, दलाच्छलः, तस्याप्युक्थः उक्थाद् वज्रनाभः, तस्मात् शङ्खनाभः, ततो व्युत्थिताश्वः, ततश्च विश्वसहो जज्ञे। तस्माद्धिरण्यनाभो यो महायोगीश्व–राज्जैमिनेश्शिष्याद्याज्ञवलयाद्योगशिक्षाभवाप हिरण्यनाभस्य पुत्रः पुष्यः, तस्माद् ध्रुवसन्धिः, ततः सुदर्शनः, तस्मादग्निवर्णः, ततश्च शीघ्रः, ततोऽपि मरुः पुत्रोऽभूत् । योऽसौ योगमास्थायाद्यापि कलापग्राममाश्रितस्तिष्ठति। आगामियुगे सूर्यवंशक्षत्रप्रवर्तयिता भविष्यतीति ।

पापीहरूको हत्या गरेर सम्पूर्ण जगत्को यथायोग्य व्यवस्थापन गरिसकेपछि भगवान् श्रीरामचन्द्र लक्ष्मण, भरत र शत्रुघ्नलाई साथैमा लिएर स्वर्गलोकमा जानुभयो। त्यस समयमा अयोध्यामा निवास गरेका जुन मनुष्यहरूले भगवान्को अंशका चार रूपहरूमा अनुराग अर्थात् प्रेम गरेका थिए, तिनीहरूले भगवान् श्रीरामचन्द्रमा मन लगाएर उनीहरूकै सालोक्य अर्थात् पाँचथरी मुक्तिमध्ये एक, जसमा साधकले आफ्नो इष्टदेवको लोकमा बसोवास गर्न पाउने पद प्राप्त गरे ॥४६॥ पापात्माको विनाश गर्ने भगवान् श्रीरामचन्द्रका कुश र लव नाम भएका दुई पुत्र भए। यसरी नै लक्ष्मणका अङ्गद र चन्द्रकेतु, भरतका तक्ष र पुष्कल तथा शत्रुघ्नका सुबाहु र शुरसेन पुत्रहरू भएका थिए ॥४७॥ कुशका अतिथि, अतिथिका निषध, निषधका अनल, अनलका नभ, नभका पुण्डरीक, पुण्डरीकका क्षेमधन्वा, क्षेमधन्वाका देवानीक, देवानीकका अहीनगु, अहीनगुका रुरु, रुरुका पारिपात्र, पारिपात्रका दल, दलका छल, छलका उक्थ, उक्थका वज्रनाभ, वज्रनाभका शङ्खनाभ, शङ्खनाभका युषिताफ र युषिताश्वका विश्वसह नाम भएका पुत्र भए। विश्वसहका पुत्ररत्नका रूपमा हिण्यनाभ उत्पन्न भएका थिए, जसले जैमिनिका शिष्य महायोगीश्वर याज्ञवल्क्यबाट योगविद्या प्राप्त गरेका थिए। हिरण्यनाभका पुत्ररत्नका रूपमा पुष्य उत्पन्न भए, पुष्यका पुत्ररत्नका रूपमा ध्रुवसन्धि उत्पन्न भएका थिए। त्यसरी नै ध्रुवसन्धिका पुत्ररत्नका रूपमा सुदर्शन उत्पन्न भए र सुदर्शनका पुत्ररत्नका रूपमा अग्निवर्ण उत्पन्न भएका थिए। यस्तै अग्निवर्णका पुत्ररत्नका रूपमा शीघ्र उत्पन्न भए र शीघ्रका पुत्ररत्नका रूपमा मरु उत्पन्न भएका थिए, जो यस समयमा पनि योगधारण गरेर कलापग्राममा निवास गरिरहेका छन् र अब आउने युगमा यिनै सूर्यवंशमा उत्पन्न हुने क्षत्रिहरूका प्रबर्द्धक हुनेछन्। मरुका पुत्ररत्नका रूपमा प्रसुश्रुत उत्पन्न भए। प्रसुश्रुतका पुत्ररत्नका रूपमा

प्रसुश्रुतस्तस्यात्मजः तस्यापि सुगन्धिः, ततश्चामर्षः,

तस्य महस्वान् ततो विश्रुतवान्, ततो बृहद्बलः,

योऽर्जुनतनयेनाभिमन्युना भारतयुद्धे

क्षयमनीयत ॥४८॥

एते हीक्ष्वाकुभूपालाः प्राधान्येन मयोनिदताः ।

एतेषाञ्चरितं श्रृण्वन् सर्वपापैः प्रमुच्यते ॥४९॥

सुगन्धि उत्पन्न भएका थिए। यसरी नै सुगन्धिका पुत्ररत्नका रूपमा अमर्ष उत्पन्न भए र अमर्षका पुत्ररत्नका रूपमा महस्वान् उत्पन्न भएका थिए। महस्वानका पुत्ररत्नका रूपमा विश्रुतवान् उत्पन्न भए र विश्रुत्वान्का पुत्ररत्नका रूपमा बृहद्बल उत्पन्न भएका थिए, जो महाभारतको युद्धमा अर्जुनका पुत्ररत्नका रूपमा उत्पन्न भएका अभिमन्युद्वारा मारिएका थिए ॥४८॥ यसप्रकार मैले इक्ष्वाकुवंशीय मुख्य मुख्य राजाहरूका विषयमा वर्णन गरिदिएँ। यिनीहरूको चरित्रका विषयमा श्रवण गर्नाले मनुष्य सबै पापहरूबाट पूर्ण रूपमा मुक्त हुन्छ ॥४९॥

इति विष्णुमहापुराणे चतुर्थांशे चतुर्थोध्यायः ।

ॐ

## पञ्चमोऽध्यायः

## अध्याय – ५

# निमियज्ञविवरणम्, सीताया उत्पत्तिः, कुशध्वजवंशकथनञ्च

(निमिद्वारा गरिएको यज्ञको विवरण, सीताको उत्पत्ति तथा कुशध्वज वंशको वर्णन)

पराशर उवाच

**इक्ष्वाकुतनयो योऽसौ निमिर्नाम, स तु सहस्रवत्सरं सत्रमारेभे, वसिष्ठञ्च होतारं वरयामास ॥१॥**

**तमाह वसिष्ठः अहमिन्द्रेण पञ्चवर्षशतं यागार्थं प्रथमतरं वृतः, तावत्प्रतिपाल्यताम्, आगतस्तवापि ऋत्विग् भविष्यामि। इत्युक्ते स पृथिवीपतिना न किञ्चिदुक्तः ॥२॥**

**वशिष्ठोऽप्यनेन समन्वीप्सितमित्य-मरपतेर्यागमकरोत् ॥३॥**

**सोऽपि तत्कालमेवान्यैर्गौतमादिभिर्यागमकरोत्। समाप्ते चामरपतेर्यागे त्वरावान् वसिष्ठो निमेः कर्म करिष्यामीत्याजगाम, तत्कर्मकर्तृत्वञ्च तत्र गौतमस्य दृष्ट्वा, अथ स्वपते तस्मै राज्ञे मामप्रत्याख्यायैतदनेन गौतमाय कर्मान्तरमर्पितं यस्मात् विदेहो भविष्यतीति शापं ददौ ॥४॥**

**प्रतिबुद्धश्चासाववनीपतिरपि प्राह,- यस्मान्मामसम्भाष्य अजानत एव शयानस्य शापोत्सर्गमसौ दुष्टगुरुश्चकार, तस्मात् तस्यापि देहः पतितो भविष्यतीति प्रतिशापं दत्वा देहमत्यजत् ॥५॥**

**पराशरजीले भन्नुभयो**–इक्ष्वाकुका जुन निमि नाम भएका पुत्र थिए, उनले एक हजार वर्षमा समाप्त हुने यज्ञको आरम्भ गरे। त्यस यज्ञमा उनले महर्षि वसिष्ठलाई होता अर्थात् यज्ञमा होम गर्ने ब्राह्मण वरण गरेका थिए ॥१॥ वरण गर्दाका समयमा महर्षि वसिष्ठले भने–इन्द्रले पाँच सय वर्षसम्मको यज्ञका लागि मलाई यसभन्दा पहिले नै वरण गरिसकेका छन्। त्यसकारणले त्यस समयसम्म तपाईं मेरो प्रतीक्षा गर्नुहोस्, इन्द्रको यज्ञ सकिएपछि त्यहाँबाट आएर म तपाईंको यज्ञमा ऋत्विक् अर्थात् वैदिक यज्ञ गराउने बनुला। महर्षि वसिष्ठले यसो भन्दा राजा निमिले कुनै जवाफ दिएनन् ॥२॥ वसिष्ठ ऋषिले पनि राजाले आफ्नो कुरा स्वीकार गरेको सम्झिएर इन्द्रको यज्ञ आरम्भ गराइदिए ॥३॥ तर राजा निमिले पनि त्यसै समयमा गौतमादि अन्य ऋषिहरूद्वारा आफ्नो यज्ञ गराउन थाले। त्यसपश्चात् इन्द्रको यज्ञ समाप्त भएपछि राजा निमिको यज्ञ गराउनु पर्नेछ भनेर अत्यन्त शीघ्रतापूर्वक वसिष्ठ ऋषि त्यहाँ आए। तर त्यस यज्ञमा आफूले पाएको होताको दायित्त्व गौतम ऋषिले वहन गरी यज्ञको सबै कार्य सम्पादन गरिरहेको देखेर वशिष्ठ ऋषिले सुतिरहेको राजा निमिलाई श्राप दिदैं भने–'यी राजाले मेरो अपमान गर्दै सम्पूर्ण कर्मको दायित्व गौतमलाई सुम्पिदिए, यसैले यिनी शरीरविहीन होउन् अर्थात् यिनको शरीर नष्ट होस्' ॥४॥ त्यसपश्चात् निद्राबाट बिउँझिएर पछि राजा निमिले भने–'यी दुष्ट गुरुले मसँग कुराकानी नगरी अर्थात् वास्तविकता नबुझिकनै म सुतिरहेको मानिसलाई श्राप दिए, यसैले उनको शरीर पनि पूर्ण रूपमा नष्ट होस् अर्थात् उनको शरीर पनि नरहोस्।' यस प्रकारको श्राप दिएर राजाले शरीर त्याग गरे ॥५॥ त्यस श्राप अर्थात् राजा निमिको श्रापका

तस्माच्छापाच्च मित्रावरुणयोस्तेजसि वसिष्ठतेजः प्रविष्टम्, उर्वशीदर्शनादुद्भूतवीर्यप्रपा- तयोः सकाशाद् तयोः वसिष्ठो देहमपरं लेभे ॥६॥

निमेरपि तच्छरीरमतिमनोहरतैलगन्धादि- भिरुपस्क्रियमाणं नैव क्लेदादिकं दोषमवाप, सद्योमृतमिव तस्थौ ॥७॥

यज्ञसमाप्तौ च भागग्रहणायागतान् देवान् ऋत्विज ऊचुः यजमानाय वरो दीयतामिति। देवैश्छन्दितो निमिराह ॥८॥

भगवन्तोऽखिलसंसारदुःखसङ्घातस्य हन्तारः न ह्येतादृग्जगत्यन्यद् दुःखमस्ति, यच्छीरी- रात्मनोर्वियोगो भवति । तदहमिच्छामि सकललोकलोचनेषु वस्तुम् न पुनः शरीरग्रहणं कर्त्तुम्। इत्युक्ते देवैरसावशेषभूतानां नेत्रेषु आसां कारितः। ततो भूतान्युन्मेषनिमेषं चक्रुः ॥९॥

अपुत्रस्य च तस्य भूभुजः शरीरमराजकभीरवस्ते मुनयोऽरण्यां ममन्थुः ॥१०॥

तत्र कुमारो जज्ञे, जननाज्जनक- संज्ञाञ्चासाववाप ॥११॥

कारणले गर्दा महर्षि वसिष्ठको लिङ्गदेह अर्थात् शरीर नाश भएपछि कर्मभोग गर्ने सूक्ष्म शरीर मित्रावरुण अर्थात् मित्र र वरुण नामका देवताको वीर्यमा समायोजित भयो। त्यसपश्चात् एकदिन उर्वशीलाई देखेकाले मित्रावरुणको वीर्यपतन भयो, त्यसबाट महर्षि वसिष्ठले अर्को शरीर प्राप्त गरे ॥६॥ राजा निमिको शरीर पनि अत्यन्त मनमोहक तेल आदिद्वारा लेपन गरेर राखिएको थियो, जसले गर्दा त्यो दुर्गन्धजस्ता विकारहरू उत्पन्न नभएर तत्कालै मृत्यु भएको शरीरजस्तै आलै रहेको थियो ॥७॥ यज्ञ पूर्ण रूपमा समाप्त भइसकेपछि जब देवताहरू आफ्नो भाग स्वीकार गर्नका लागि आए त्यस समयमा उनीहरूसँग ऋत्विक्हरूले भने–'यजमान अर्थात् ब्राम्हणद्वारा वरदान माग्नका लागि अभिप्रेरित गरिएपछि राजा निमिले उनीहरूसँग भने.....॥८॥ 'हे भगवान्! तपाईंहरूमा सबै प्राणीमात्रको दुःख हरण सामर्थ्य रहेको छ। मेरो मान्यता अनुसार संसारमा शरीर र आत्माको वियोग हुँदाका अवस्थामा जुन किसिमको दुःख हुन्छ, त्यस प्रकारको दुःख अन्य कुनै हुँदैन। यसैले म अब फेरि शरीर ग्रहण गर्न चाहन्न, म सबै मनुष्यहरूका आँखाहरूमा मात्र निवास गर्न चाहन्छु।' राजाले यसो भनेपछि देवताहरूले उनलाई सम्पूर्ण प्राणीमात्रका आँखाहरूमा स्थापित गरिदिए। त्यसै समयदेखि प्राणीमात्रले क्षण क्षणमा आँखा झिम्क्याउन थाले ॥९॥ राजा निमिका कुनै सन्तान थिएनन्, त्यसकारण अराजकता फैलने भयबाट भयभीत भएका ऋषिहरूले राजाको शरीरलाई अरणि (अर्थात् यज्ञको आगो पार्न बनाइने पीपलको बाटोमा उम्रेको शमिको काठको सामान, अधरारणि अर्थात् तल रहने काठमा प्वाल पारी कपास वा कुश राखिन्छ र त्यसैमाथि अर्थात् प्वालमा उत्तरारणि अर्थात् माथि रहने काठमा डोरी बेरेर घारघुर पारी घुमाउँदा रगडिएर आगो निस्कन्छ, यसो गर्दा वैदिक मन्त्र पढिन्छ) मन्थन गरे ॥१०॥ त्यसबाट एक कुमार उत्पन्न भए। यसरी जनकका शरीरबाट उत्पन्न भएकाले यी उत्पन्न भएका कुमारको नाम पनि जनक रहन गयो ॥११॥ यिनका

अभूद् विदेहोऽस्य पितेति वैदेहो मथनान्मिथिरभूत्। तस्योदावसुः पुत्रोऽभूत्। ततो नन्दिवर्द्धनः, तस्मात् सुकेतुः, तस्यापि देवरातः ततश्च बृहदुक्थः, तस्य च महावीर्यः, तस्यापि सत्यधृतिः, ततश्च धृष्टकेतुः, धृष्टकेतोर्हर्य्यश्वः, तस्य च मरुः, मरोः प्रतिबन्धकः, तस्मात् कृतरथः तस्मात् कृतिः, तस्य विबुधः, तस्यापि महाधृतिः, तस्य च कृतिरातः ततो महारोमा, ततः सुवर्णरोमा, तस्यापि पुत्रो ह्रस्वरोमा, ततः सीरध्वजोऽभूत्। तस्य पुत्रार्थं यजनभुवं कृषतः सीरे सीता दुहिता समुत्पन्नासीत्। सीरध्वजस्य भ्राता साङ्काश्याधिपतिः कुशध्वजनामा। सीरध्वजस्यापत्यं भानुमान् ॥१२॥

भानुमतः शतद्युम्नः, तस्य शुचिः, तस्मादूर्ज्जवहो नाम पुत्रो जज्ञे। तस्यापि सत्यध्वजः, ततः कुनिः (ऋूणिः) कुनेरञ्जनः, तत्पुत्रः ऋतुजित्, ततोऽरिष्टनेमिः, तस्मात्

पिताले शरीरत्याग गरेकाले विदेह अर्थात् शरीरविहीन थिए। त्यसकारण यी बालकको नाम वैदेह रहन गयो। यसरी राजा निमिको शरीर मन्थन गरेर उत्पन्न भएका कारणले यिनको एउटा नाम मिथि राखियो। उनका पुत्ररत्नका रूपमा उदावसु उत्पन्न भए र उदावसुका पुत्ररत्नका रूपमा नन्दिवर्धन उत्पन्न भए। यसरी नै नन्दिवर्धनका पुत्ररत्नका रूपमा सुकेतु उत्पन्न भए र उनका पुत्ररत्नका रूपमा देवरात उत्पन्न भए। यसैगरी देवरातका पुत्ररत्नका रूपमा बृहदुक्थ उत्पन्न भए। बृहदुक्थका पुत्ररत्नका रूपमा महावीर्य उत्पन्न भए र उनका पुत्ररत्नका रूपमा सत्यधृति उत्पन्न भए। सत्यधृतिका पुत्ररत्नका रूपमा धृष्टकेतु उत्पन्न भए भने धृष्टकेतुका पुत्ररत्नका रूपमा हर्यश्व उत्पन्न भए। हर्यश्वका पुत्ररत्नका रूपमा मरु उत्पन्न भए एवं मरुका पुत्ररत्नका रूपमा प्रतिबन्धक र प्रतिबन्धकका पुत्ररत्नका रूपमा कृतरथ उत्पन्न भए। यसै किसिमले कृतरथका पुत्ररत्नका रूपमा कृति उत्पन्न भए भने कृतिका पुत्ररत्नका रूपमा महारोमा उत्पन्न भए। यस्तै प्रकारले महारोमाका पुत्ररत्नका रूपमा सुवर्णरोमा उत्पन्न भए एवं सुवर्णरोमाका पुत्ररत्नका रूपमा ह्रस्वरोमा उत्पन्न भए भने ह्रस्वरोमाका पुत्ररत्नका रूपमा सीरध्वज उत्पन्न भएका थिए। उनी पुत्र प्राप्तिको कामनाबाट अभिप्रेरित भएर यज्ञभूमि जोतिरहेका थिए त्यसै समयमा हलामा लगाइएको फालीको अगाडिको भागबाट उनलाई सीता नाम भएकी एक कन्याको प्राप्ति भयो। सीरध्वजका भाइ कुशध्वज साङ्काश्य प्रदेशका अधिपति थिए। सीरध्वजका पुत्ररत्नका रूपमा भानुमान् उत्पन्न भएका थिए ॥१२॥ भानुमान्का पुत्ररत्नका रूपमा शतद्युम्न उत्पन्न भए भने शतद्युम्नका पुत्ररत्नका रूपमा शुचि उत्पन्न भएका थिए। शुचिका पुत्ररत्नका रूपमा ऊर्ज्जवह उत्पन्न भएका थिए एवं उर्ज्जवहका पुत्ररत्नका रूपमा कुनि अर्थात् ऋूणि उत्पन्न भएका थिए। कुनिका पुत्ररत्नका रूपमा अञ्जन उत्पन्न भएका थिए र अञ्जनका पुत्ररत्नका रूपमा ऋतुजित् उत्पन्न भएका थिए। यसरी नै ऋतुजित्का पुत्ररत्नका रूपमा अरिष्टनेमि उत्पन्न भएका थिए भने अरिष्टनेमिका पुत्ररत्नका रूपमा श्रुतायु उत्पन्न भएका थिए। त्यसैगरी श्रुतायुका पुत्ररत्नका रूपमा सूर्या

श्रुतायुः, ततः सूर्य्याश्वः, तस्मात् सञ्जयः (सन्नयः), ततः क्षेमारिः तस्मादनेनाः, तस्मान्मीनरथः (मानरथः), तस्य सत्यरथः, तस्य सात्यरथिः, सात्यरथेरुपगुः तस्मात् श्रुतः (उपगुप्तः), तस्मात् शाश्वतः, तस्मात् सुधन्वा (सुवर्चाः) तस्यापि सुभासः, ततः सुश्रुतः, तस्माज्जयः, जयपुत्रो विजयः तस्य ऋतः, ऋतात् सुनयः, ततो वीतहव्यः, तस्मात् सञ्जयः, तस्माद् (क्षेमाश्वः, तस्मात्) धृतिः, धृतेर्बहुलाश्वः तस्य पुत्रः कृतिः, कृतौ सन्तिष्ठतेऽयं जनक-वंशः ॥१३॥

इत्येते मैथिलाः। प्राचुर्येण एतेषामात्म-विद्याश्रयिणो भूपाला भविष्यन्तीति ॥१४॥

उत्पन्न भएका थिए र सूर्याश्वका पुत्ररत्नका रूपमा सञ्जय उत्पन्न भएका थिए। यसैप्रकारले क्षेमारिका पुत्ररत्नका रूपमा अनेना उत्पन्न भएका थिए र अनेनाका पुत्ररत्नका रूपमा मीनरथ अर्थात् मानरथ उत्पन्न भएका थिए एवं मीनरथका पुत्ररत्नका रूपमा सत्यरथ उत्पन्न भएका थिए भने सत्यरथका पुत्ररत्नका रूपमा सात्यरथि उत्पन्न भएका थिए। यसरी नै सात्यरथिका पुत्ररत्नका रूपमा उपगु उत्पन्न भएका थिए र उपगुका पुत्ररत्नका रूपमा श्रुत उत्पन्न भएका थिए एवं श्रुतका पुत्ररत्नका रूपमा शाश्वत उत्पन्न भएका थिए भने शाश्वतका पुत्ररत्नका रूपमा सुधन्वा अर्थात् सुवर्चा उत्पन्न भएका थिए। यसैगरी सुवर्चाका पुत्ररत्नका रूपमा सुभास उत्पन्न भएका थिए र सुभासका पुत्ररत्नका रूपमा सुश्रुत उत्पन्न भएका थिए एवं सुश्रुतका पुत्ररत्नका रूपमा जय उत्पन्न भएका थिए भने जयका पुत्ररत्नका रूपमा विजय उत्पन्न भएका थिए। विजयका पुत्ररत्नका रूपमा ऋत उत्पन्न भएका थिए र ऋतका पुत्ररत्नका रूपमा सुनय उत्पन्न भएका थिए एवं सुनयका पुत्ररत्नका रूपमा वीतहव्य उत्पन्न भएका थिए भने वीतहव्यका पुत्ररत्नका रूपमा सञ्जय उत्पन्न भएका थिए। यसै किसिमले सञ्जयका पुत्ररत्नका रूपमा क्षेमाश्व उत्पन्न भएका थिए र क्षेमाश्वका पुत्ररत्नका रूपमा धृति उत्पन्न भएका थिए एवं धृतिका पुत्ररत्नका रूपमा बहुलाश्व उत्पन्न भएका थिए भने बहुलाश्वका पुत्ररत्नका रूपमा कृति उत्पन्न भएका थिए। यिनै कृतिसम्म मात्र जनकवंशीय राजाहरू रहेका थिए ॥१३॥ यति मात्र मिथिला नगरीका राजाहरू हुन्। यिनीहरूमध्ये प्रायःसबै राजाहरू आत्मविद्याका ज्ञाता थिए ॥१४॥

इति श्रीविष्णमहापुराणे चतुर्थांशे पञ्चमः अध्यायः

ॐ

## षष्ठोऽध्यायः

## अध्याय – ६

### "चन्द्रवंशकथनम्, ताराहरणम्, अग्नित्रयोत्पत्तिश्च"

(चन्द्र वंशको कथा, ताराको अपहरण तथा तीनोटा अग्निको उत्पत्ति)

मैत्रेय उवाच

सूर्यस्य भगवन्! वंशः कथितो भवता मम।

सोमस्य वंशे त्वखिलान् श्रोतुमिच्छमि पार्थिवान् ॥१॥

कीर्त्यते स्थिरकीर्तीनां येषामद्यापि सन्ततिः

प्रसादसुमुखस्तन्मे ब्रह्मन्नाख्यातुमर्हसि ॥२॥

पराशर उवाच

श्रूयतां मुनिशार्दूल वंशः प्रथिततेजसः।

सोमस्यानुक्रमात् ख्याता यत्रोर्वीपतयोऽभवन् ॥३॥

अयं हि वंशोऽतिबलपराक्रमद्युतिशीलचेष्टवद्भिरति

गुणान्वितैर्नहुषययातिकार्तवीर्यार्जुनादि-

भिर्भूपालैरलङ्कृतः ॥४॥

नाभिसरोजिनीसमुद्भवाब्जयोनेर्ब्रह्मणः पुत्रोऽत्रिः अत्रेः

सोमः, तञ्च

भगवानब्जयोनिरशेषौषधिद्विजनक्षत्राणामाधि-

पत्येऽभ्यषेचयत् ॥५॥ स च राजसूयमकरोत्।

तत्प्रभावादत्युत्कृष्ट्यधिपत्याकृष्ट्यधिपत्याधिष्ठा-

तृत्वाच्चैनं मद आविवेश ॥६॥

**मैत्रेयले भने–** हे भगवान्! हजुरले मलाई सूर्यवंशीय राजाहरूको कथाका विषयमा अत्यन्त विस्तारपूर्वक बताइदिनुभयो। अब म चन्द्रवंशीय राजाहरूको कथाका विषयमा यथार्थ रूपमा सुन्न चाहन्छु अर्थात् तिनीहरूका विषयमा विस्तारपूर्वक जान्न चाहन्छु ॥१॥ हे ब्राह्मणश्रेष्ठ! चन्द्रवंशीय राजाहरूको स्थिर कीर्तिको आज पनि सम्पूर्ण संसारमा अत्यन्त प्रियताका साथ प्रशंसा भइरहेको पाइन्छ। यसकारण हजुर मबाट प्रसन्न भएर ती चन्द्रवंशीय राजाहरूको कथाका विषयमा अत्यन्त विस्तारपूर्वक मलाई बताइदिनुहोस् ॥२॥ **पराशरजीले भन्नुभयो–** हे मुनिश्रेष्ठ मैत्रेय! जुन चन्द्रवंशमा अत्यन्त पराक्रमी राजाहरू उत्पन्न भएका थिए, त्यो चन्द्रवंशको कथाका विषयमा यथार्थमा र विस्तापूर्वक क्रमबद्ध रूपमा सुन ॥३॥ यो चन्द्रवंश अत्यन्त पराक्रमशाली, कान्तिसम्पन्न, सत्यस्वभाव भएका, दानादि क्रियाहरूबाट सम्पन्न भएका, अत्यन्त गुणवान्, नहुष, ययाति, कार्तवीर्यार्जुन इत्यादि राजाहरूबाट अलङ्कृत भइसकेको अर्थात् सुसज्जित भइसकेको छ। चन्द्रवंशको कथाका विषयमा विस्तारपूर्वक बताउने छु, ध्यानपूर्वक सुन ॥४॥ सम्पूर्ण जगत्का उत्पत्तिकर्ता परब्रह्म परमात्मा भगवान् श्रीविष्णुको नाभिकमलबाट उत्पन्न हुनुभएका कमलयोनि ब्रह्माजीका पुत्र अत्रि प्रजापति थिए। अत्रि ऋषिका पुत्ररत्नका रूपमा चन्द्रमा उत्पन्न भए। कमलयोनि भगवान् ब्रह्मजीले चन्द्रमालाई समस्त नक्षत्र, औषधि र ब्राह्मणहरूका अधिपति अर्थात् राजाका रूपमा अभिषेक गरिदिनुभएको अर्थात् विधिपूर्वक मन्त्र पढेर राजपदमा आरूढ गराइदिनु भएको थियो। महर्षि अत्रिका पुत्रले राजसूय यज्ञको अनुष्ठान गरे। यज्ञको समाप्ति भएपश्चात् यज्ञको प्रभाव र सर्वोत्कृष्ट आधिपत्यका अधिष्ठाता अर्थात् अधिपति भएकाले चन्द्रमाका मनमा अहङ्कार उत्पन्न भयो; अर्थात् राजप्रमादले उनको मनलाई आफ्नो नियन्त्रणमा पाऱ्यो ॥५–६॥ त्यसपछि अहङ्कारबाट पूर्ण

मदाबलेपाच्चासौ सकलदेवगुरोर्बृहस्पतेस्तारां नाम पत्नीं जहार ॥७॥ बहुशश्च बृहस्पतिचोदितेन भगवता ब्रह्मणा चोद्यमानः सकलैश्चदेवर्षिभिर्याच्यमानोऽपि न मुमोच। तस्य हि बृहस्पतिद्वेषादुशनाः पार्ष्णिग्राहोऽभवत् ॥८॥ अङ्गिरसश्च सकाशादुपलब्धविद्यो भगवान् रुद्रो बृहस्पतेः साहाय्यमकरोत् ॥९॥ यतश्चोशनाः ततो हि जम्भ–कुजम्भाद्याः समस्ता एव दैत्यदानवनिकाया महान्तमुद्यमं चक्रुः। बृहस्पतेरपि सकलदेवसैन्यसहायः शक्रोऽभवत् ॥१०॥ एवञ्च तयोरतीवोग्रः सङ्ग्रामस्तारानिमित्तस्तार–कामयो नामाभवत्। ततश्च समस्तशस्त्राण्यसुरेषु रुद्रपुरोगमा देवा देवेषु चाशेषदानवा मुमुचुः॥११॥ एवञ्च देवासुराह–वाक्षोभक्षुब्धहृदयमशेषमेव जगद् ब्रह्माणं शरणं जगाम ॥१२॥ ततश्च भगवानप्युशनसं शङ्करमसुरान् देवांश्च निवार्य बृहस्पतेस्तारामदात्। ताञ्चान्तःप्रसवामवलोक्य बृहस्पतिराह ॥१३॥

रूपमा सम्पन्न भएका चन्द्रमाले सम्पूर्ण देवताहरूका गुरु बृहस्पतिकी तारा नाम भएकी पत्नीलाई अपहरण गरेर आफ्नी पत्नी बनाए ॥७॥ त्यसपछि बृहस्पतिले ब्रह्मजीसँग प्रार्थना गरेकाले ब्रह्माले धेरै सम्झाउँदा एवं सम्पूर्ण देवताहरूले विनम्र अनुरोध गर्दा पनि चन्द्रमाले तारालाई परित्याग गरेनन् अर्थात् कसैको अनुरोधको पालना गरेनन्। बृहस्पतिसँग वैरभाव भएका कारणले गर्दा शुक्राचार्यले पनि चन्द्रमालाई पूर्ण रूपमा सहयोग गरेका थिए ॥८॥ त्यसपछि महर्षि अङ्गिराबाट विद्या प्राप्त गरेका कारणले गर्दा भगवान् रुद्रले पूर्ण रूपमा बृहस्पतिलाई सहयोग गर्नुभयो। किनकि देवताहरूका गुरु बृहस्पति महर्षि अङ्गिराका पुत्र हुन् ॥९॥ दैत्यदानवका गुरु शुक्राचार्य चन्द्रमाका पक्षमा रहेका थिए। त्यसकारण जम्भ, कुजम्भ इत्यादि दैत्य एवं दानवहरूले पनि चन्द्रमालाई विजय गराउनका लागि आ–आफ्नो सामर्थ्यले भ्याएसम्मको सहयोग गरे। त्यसरी नै सम्पूर्ण देवताका सेना सहित देवराज इन्द्रले आफ्ना गुरु बृहस्पतिलाई विजयी गराउनका लागि उनलाई सहयोग गर्न थाले ॥१०॥ यसरी ताराका लागि चन्द्रमा र बृहस्पतिका बीचमा अत्यन्त भयानक तारकामय युद्धको आरम्भ भयो। यो युद्ध ताराको प्राप्तिका लागि गरिएको हुनाले यसको नाम तारकायुद्ध भएको हो। त्यसपछि रुद्र आदि देवताहरूले दानव माथि र दानवहरूले देवताहरूमाथि विजय प्राप्त गर्ने लक्ष्य लिएर विभिन्न किसिमका अस्त्र शस्त्रहरूद्वारा प्रहार गर्न थाले ॥११॥ यसरी देवताहरू र दानवहरूका बीचमा भइरहेको अत्यन्त भयानक युद्धबाट क्षुब्ध अर्थात् डराएको हृदय भएर सम्पूर्ण जगत् ब्रह्मजीका शरणमा पऱ्यो ॥१२॥ त्यसपछि कमलयोनि भगवान् ब्रह्मजीले देवताहरू र दानवहरूको युद्धलाई रोकेर बृहस्पतिलाई उनकी पत्नी तारा उपलब्ध गराइदिनुभयो। त्यस समयमा तारा गर्भवती अवस्थामा रहेकी देखेपछि बृहस्पतिले तारासँग भने..... ॥१३॥ 'मेरी पत्नीको

नैष मम क्षेत्रे भवत्यान्यसुतो धार्यस्तदुत्सृजैनमलमतिधाष्ट्येंनेति। सा च तेनैवमुक्ता पतिव्रता भर्तृवचनात् तमीषिकास्तम्बे गर्भमुत्ससर्ज ॥१४॥ स चोत्सृष्टमात्र एवातितेजसा देवानां तेजांस्याचिक्षेप ॥१५॥ बृहस्पतिमिन्दुञ्च तस्य कुमारस्यातिचारुतया साभिलाषौ दृष्ट्वा देवाः समुत्पन्नसन्देहास्तारां पप्रच्छुः– सत्यं कथयास्माकमतिसुभगे! कस्यायमात्मजः, सोमस्याथ बृहस्पतेः? इत्युक्तापि सा तारा ह्रिया न किञ्चिदुवाच ॥१६॥ बहुशोऽप्यभिहिता यदासौ देवेभ्यो नाचचक्षे, ततः कुमारस्तां शप्तुमुद्यतःप्राह दुष्टे अम्ब! कस्मान्मम तातं नाख्यासि, अद्यैव तेऽलीकलज्जावत्याः शास्तिमयमहं करोमि, यथा नैवमन्याप्यतिमन्थरवचना भवतीति ॥१७॥ अथ भगवान् पितामहस्तं कुमारं सन्निवार्य स्वयमपृच्छत् ताराम्–कथय वत्से! कस्यायमात्मजः? सोमस्याथ बृहस्पतेः? इत्युक्ता लज्जाजडमाह 'सोमस्ये' ति ॥१८॥ ततः स्फुरदुच्छवसितामलकपोलकान्तिर्भगवानुडुपतिस्त–मालिङ्ग्य कुमारं साधु साधु वत्स! प्राज्ञोऽसीति बुध इति नाम चक्रे ॥१९॥

गर्भमा अन्य व्यक्तिको पुत्र वा गर्भधारण गर्न तिम्रा लागि उचित छैन। त्यसकारण तिमीले यो गर्भलाई परित्याग गरिदेऊ।' बृहस्पतिले यसरी आज्ञा दिइसकेपछि ती पतिव्रता ताराले पतिको आज्ञा अनुसार त्यो गर्भलाई नरम घाँस उम्रिएको एकान्त स्थानमा परित्याग गरिदिइन् ॥१४॥ त्यो निक्षेप अर्थात् फ्याँकिएको नासोबाट उत्पन्न भएको बालकले आफ्नो तेजद्वारा सम्पूर्ण देवताहरूको तेजलाई पनि निःस्तेज अर्थात् तेजविहीन बनाइदियो ॥१५॥ त्यस समयमा त्यस बालकको सुन्दरता र तेजका प्रभावबाट प्रभावित भएर बृहस्पति र चन्द्रमा दुवै त्यसलाई स्वीकार गर्न अत्यन्त उत्सुक भएको देखेपछि देवताहरूले शङ्कास्पद भावपूर्वक तारासँग सोधे–'हे सौभाग्यवती! तपाईंले हामीलाई यो पुत्र बृहस्पतिको हो वा चन्द्रमाको हो? सत्य कुरा बताइदिनुहोस्।' देवताहरूद्वारा यसरी सोधिएपछि अन्त्यत लज्जित भएकी ताराले केही जवाफ दिइनन् ॥१६॥ यस प्रकार देवताहरूद्वारा अनेकौं पटक सोधिए तापनि ताराले त्यसको कुनै जवाफ दिइनन्। त्यसपछि सद्योजात अर्थात् भरखरै जन्मेको त्यो कुमारले तारालाई श्राप दिनका लागि पूर्ण रूपमा तयार भएर भन्यो–'हे अत्यन्त दुष्ट स्वभाव भएकी माता! तपाईंले मेरा पिताजीको नाम किन नबताइदिनु भएको हो? देखावटी लाजको आवरणले ढाकिएर रहनुभएकी तपाईंको म यस्तो अवस्था बनाइदिन्छु, जसको प्रभावले गर्दा तपाईंजस्ती मन्थर अर्थात् धीमाचालले बोल्ने अन्य कोही पनि हुनेछैन' ॥१७॥ त्यसपछि स्वयं प्रजापति भगवान् ब्रह्मजीले त्यस बालकलाई श्राप दिनबाट रोकेर तारासँग सोध्नुभयो–हे पुत्री! भन यो पुत्र कसको हो, चन्द्रमाको हो वा बृहस्पतिको? स्वयं ब्रह्मजीले यसरी सोधेपछि ताराले अत्यन्त लज्जित हुँदै भनिन्–'चन्द्रमाको' हो ॥१८॥ त्यसपछि छात्ती फुलाएर अत्यन्त कान्ति भएका चन्द्रमाले त्यस बालकलाई अङ्कमाल गर्दै भने –हे पुत्र! धन्यवाद, धन्यवाद, तिमी आत्मज्ञानी छौ, र उसको नाम 'बुध' राखिदिए। त्यस समयमा उनका गालाहरूमा कान्ति पूर्ण रूपमा फुलेको र देदीप्यामान् अर्थात् चम्किलो देखिन्थ्यो ॥१९॥ ती बुधले इलाका

आख्यातमेवैतत्–स च यथेलायामात्मजं पुरूरवसमुत्पादयामास। पुरूरवास्त्वतिदान–शीलोऽतियज्वातितेजस्वी। यं सत्यवादिन–मतिरूपवन्तं मित्रावरुणशापान्मानुषे लोके मया वस्तव्यम् इति कृतमतिरुर्वशी ददर्श ॥२०॥ दृष्टमात्रे च यस्मिन् अपहाय मानमशेषमपास्य स्वर्गसुखाभि–लाषं तन्मना भूत्वा तमेवोपतस्थे ॥२१॥ सोऽपिता–मतिशयितसकललोकस्त्रीकान्तिसौकुमार्य–लावण्यातिविलासहासादिगुणामवलोक्य तदायत्तचित्तवृत्तिर्बभूव ॥२२॥ उभयमपि तन्मनस्कमनन्यय दृष्टि परित्यक्तसमस्ता–न्यप्रयोजनमभूत् ॥२३॥ राजा तु प्रागल्भ्यात् तामाह ॥२४॥ सुभ्रु त्वामहमभिकामोऽस्मि प्रसीदानुरागमुद्वह इत्युक्ता लज्जावखण्डितमुर्वशी तं प्राह ॥२५॥ भवत्वेवं यदि मे समयपरिपालनं भवान् करोतीति ॥२६॥ आख्याहि मे समयमित्यथ पृष्टा पुनरब्रवीत् ॥२७॥ शयनसमीपे ममोरणकद्वयं पुत्रभूतं नापनेयम् ॥२८॥ भवांश्च मया नग्नो न द्रष्टव्यः, घृतमात्रञ्च ममाहारः। इत्येवमेवेति भूपतिराह।

गर्भबाट जसरी पुरूरवालाई उत्पन्न गराएका थिए, त्यस विषयमा मैले तिमीलाई यसभन्दा पहिले नै बताइसकेको छु। ती पुरूरवा अत्यन्त दानशील धेरै यज्ञ गर्ने स्वभाव भएका र अत्यधिक तेजस्वी थिए। त्यसपछि "मित्रावरुणको श्राप अनुसार मैले कुनै समयमा मनुष्यलोकमा निवास गर्नैपर्दछ।" यसरी विचार गरेपछि उर्वशी अप्सराको दृष्टि ती अत्यन्त सत्यवादी, स्वरूपका धनी र आत्मज्ञानी राजा पुरुरवामा पऱ्यो ॥२०॥ ती राजा पुरुरवालाई देखिसकेपछि अत्यन्त मोहित भएकी उर्वशी स्वर्गमा प्राप्त भएको सबै किसिमको मान मर्यादा र सुखको अभिलाषा परित्याग गरेर उनका नजिक आइपुगिन् ॥२१॥ ती राजा पुरुरवाको हृदय पनि ती उर्वशीलाई संसारमा भएका सम्पूर्ण स्त्रीहरूमा अत्यन्त विशिष्ट तथा कान्ति, कौमार्य अर्थात् कुमारीत्व आनन्दित तुल्याउने र मन्दमुस्कान आदि गुणहरूबाट सम्पन्न भएको देखेर उनलाई सौन्दर्यको नियन्त्रणमा परे अर्थात् ती राजा उर्वशीप्रति पूर्ण रूपमा आसक्त भए ॥२२॥ त्यसै समयमा राजा पुरुरवा र उर्वशी दुवै एक अर्काप्रति पूर्ण रूपमा आकर्षित र एकले अर्कालाई प्राप्त गर्न अत्यन्त लालायित भए एवं सम्पूर्ण काम्य वस्तुहरूलाई तुच्छ सम्झिन थाले ॥२३॥ लामो समयको मौनतायुक्त हेराइलाई चिर्दै राजाले लाजको परित्याग गरेर भने........॥२४॥ 'हे सुन्दरी! म तिमीप्रति अत्यन्त आसक्त भएको छु, तिमी मबाट प्रसन्न भएर मेरो प्रेमलाई सहर्ष स्वीकार गरिदेऊ। राजाका यस किसिमको कुरा सुनेपछि उर्वशीले पनि अत्यन्त लज्जित भएर मन्द स्वरमा भनिन्...........॥२५॥ 'यदि तपाईंले मेरो प्रतिज्ञा स्वीकार गर्नुभयो भने निश्चित रूपमा तपाईंको मनोकामना पूर्ण हुनेछ ॥२६॥ उर्वशीको कुरा सुनिसके पछि राजाले सोधे 'तिम्रो प्रतिज्ञा के हो?' यसरी राजाले सोधेपछि फेरि उर्वशीले भनिन् ......... ॥२७॥ 'मेरा पुत्रहरूका रूपमा रहेका यी भेडाहरूलाई तपाईंले कहिल्यै पनि मेरो विछ्यौनाभन्दा टाढा गराउन पाउनु हुन्न अर्थात् यिनीहरू सधैं मेरो विछ्यौनाका नजिकमा नै रहनेछन् ॥२८॥ यसरी नै मैले तपाईंलाई कहिल्यै पनि पूर्ण रूपमा नाङ्गो देख्न नपाउँ एवं घिउ मात्र मेरो

तया त सहावनीपतिरलकायां चैत्ररथादिवनेषु अमलपद्मषण्डेषु अभिरमणीयेषु मानसादिसरःसु अभिरममाण एव षष्टिवर्षसहस्राणि अनुदिन–प्रवर्द्धमानप्रमोदोऽनयत्। उर्वशी च तदुपभोगात् प्रतिदिनप्रवर्द्धमानानुरागा अमरलोक–वासेऽपि न स्पृहां चकार। विना चोर्वश्या सुरलोकोऽप्सरसां सिद्ध–गन्धर्वाणाञ्च नातिरमणी–योऽभवत् ॥२९॥ ततश्चोर्वशी–पुरूरवसोः समयविद् विश्वावसुर्गन्धर्व–समवेतो निशि शयनाभ्यासादेकमुरणकं जहार ॥३०॥ तस्य चाकाशे नीयमानस्योर्वशी शब्दमशृणोत् आह च–'ममानाथायाः पुत्रः केनाप्ययमपह्रियते, कं शरणमुपयामि' इत्याकर्ण्य राजा, 'नग्नं मां देवी द्रक्ष्यती' ति न ययौ। अथान्यमप्युरणकमादाय गन्धर्वा ययुः। तस्याप्यपह्रियमाणस्य शब्दमाकर्ण्य आकाशे पुनरपि 'अनाथास्म्यहमभर्तृका कुपुरुषाश्रयेति' आर्त्तराविणी बभूव। राजाप्यमर्ष–वशादन्धकारमेतदिति खड्गमादाय दुष्ट! दुष्ट! हतोऽसीति व्याहरन्नभ्यधावत्। तावच्च गन्धर्वैरतीवोज्ज्वला विद्युज्जनिता। तत्प्रभया चोर्वशी राजानमपगताम्बरं दृष्ट्वा अपवृत्तसमया तत्क्षणादेवापक्रान्ता ॥३१॥ परित्यज्य तावुरणकां

भोजनको सामग्री हुनेछ। यी तीनवटा मेरा प्रतिज्ञाहरू हुन् भनेपछि राजाले त्यसमा स्वीकृति जनाए। त्यसपछि राजाले उर्वशीसँग कहिले अलका अर्थात कुबेरका नगरीको चैत्ररथ अर्थात् कुबेरको बगैंचा आदिमा र कहिले अत्यन्त मनमोहक एवं स्वच्छ कमल आदिबाट पूर्ण रूपमा सुशोभित भएको मानसरोवरमा क्रीडा गर्दै प्रत्येक दिन अनेकौं किसिमका आन्नदको अनुभूति गर्दै साठी हजार वर्ष बिताए। उर्वशीले पनि प्रत्येक दिन राजासँग उपभोगसुखपूर्वक प्रेममा वृद्धि गराउँदै देवलोकमा निवास गर्ने चाहनाको पूर्ण रूपमा परित्याग गरिदिइन्। त्यस समयमा अप्सरा, सिद्ध एवं गन्धर्वहरूलाई उर्वशी नभएको स्वर्गलोक रमणीय लाग्न छाडिसकेको थियो अर्थात् उनीहरूले त्यहाँ आफू पानी विनाको माछो जस्तो भएको अनुभव गर्न थालेका थिए ॥२९॥ त्यसकारण उर्वशी र पुरुरवाकाबीचमा भएको प्रतिज्ञाका विषयमा विज्ञ रहेका अर्थात् ज्ञाता विश्वावसुले एकदिन रात्रिका समयमा गन्धर्वहरूसँग गएर सुतिरहेको राजा पुरुरवा र उर्वशीका नजिकैमा रहेका दुई भेडाहरूमध्ये एउटा भेडाको अपहरण गरे ॥३०॥ त्यस भेडालाई अपहरण गरेर आकाशमार्गबाट लिएर गइरहेका अवस्थामा उर्वशीले त्यसको आवाज सुनिन्। त्यसपछि उनले भनिन्–'म अनाथ छु, कुन व्यक्तिले मेरा पुत्रको अपहरण गरिरहेको छ। म कसका शरणमा जाउँ।' यो सबै कुरा सुनिरहे तापनि 'देवीले मलाइ नग्न अवस्थामा देख्नेछिन्' भन्ने विचार गरेर राजा भेडाको उद्धार गर्नका लागि गएनन्। त्यसपछि गन्धर्वहरूले अर्को भेडा पनि अपहरण गरेर लिएर गए। त्यस समयमा अपहरण गरेर लगिएको भेडाको आवाज सुनेर फेरि उर्वशीले भनिन् –'म अभागिनी पतिविहीन र कुपुरुषका आश्रयमा रहेकी छु, यस्तो अवस्थामा मेरो सन्तानको रक्षा कसले गरिदिन्छ?' यस प्रकारको कुरा सुनिसकेपछि अहिले पूर्ण रूपमा अन्धकार फैलिएको छ, यस्तो अवस्थामा रानीले मलाई नग्न भएको देख्न सक्दिनन् भन्ने विचार गरेर राजा हातमा तरवार लिएर अत्यन्त क्रोधित भएर 'त्यो दुष्ट निश्चित रूपमा मारिनेछ' भन्दै दौडिए। यसै समयमा गन्धर्वहरूले आकाशमा बिजुली चम्काइदिए। त्यो बिजुलीको प्रकाशमा उर्वशीले राजालाई नग्नावस्थामा देखेर प्रतिज्ञा भङ्ग भएकोदेखि त्यहाँबाट उनले तुरुन्तै प्रस्थान गरिन् ॥३१॥ त्यस समयमा गन्धर्वहरू दुइवटै

गन्धर्वाः सुरलोकमुपागताः । राजापि तौ मेषावादाय हृष्टमनाः स्वशयनमायातो नोर्वशीं ददर्श ॥३२॥ ताञ्चापश्यन्नपगताम्बर एवोन्मत्तरूपो बभ्राम । कुरुक्षेत्रे चाम्भोजसरसि अन्याभिश्चतसृभिरप्सरोभिः समवेतामुर्वशीं ददर्श । ततश्चोन्मत्तरूपो राजा जायेह तिष्ठ, मनसि, घोरे वचसि, इत्यनेकप्रकारं सूक्तमवोचत् ॥३३॥ आह चोर्वशी–महाराज अलमनेनाविवेकचेष्टितेन । अन्तर्वत्नी अहम्, अब्दान्ते भगवतात्रागन्तव्यम्, कुमारस्ते भविष्यति । एकाञ्च निशामहं त्वया सह वत्स्यामि, इत्युक्तः प्रहृष्टः स्वपुरमाजगाम । तासाञ्चाप्सरसामुर्वशी कथयामास, अयं स पुरुषोत्कर्षो, येन अहमेतावन्तं कालमनुरागाकृष्टमनसा सहोषिता ॥३४॥ इत्येवमुक्तास्ता अप्सरस ऊचुः–साधु साधु अस्य रूपम्, अनेन सहास्माकमपि सर्वकालमभिरन्तुं स्पृहा भवेदिति ॥३५॥ अब्दे च पूर्णे स राजा तत्राजगाम । कुमारञ्चायुषमस्मै तदोर्वशी ददौ, एकाञ्च निशां तेन राज्ञा सहोषित्वा पञ्चपुत्रोत्पत्तये गर्भमवाप ॥३६॥

भेडाहरूको परित्याग गरेर स्वर्गतिर भागे अर्थात् स्वर्गमा गए। जब राजा ती भेडाहरूलाई लिएर अत्यन्त आनन्दित हुँदै आफ्नो विछ्यौना भएको ठाउँमा आए, तर त्यहाँ उर्वशीलाई देखेनन् ॥३२॥ उर्वशीलाई नदेखेपछि राजा त्यही वस्त्रहीन अवस्थामा नै मानसिक सन्तुलन गुमाएको व्यक्ति जस्तै भएर घुम्न थाले। त्यसरी विचलित भएर घुमिरहँदाका अवस्थामा राजाले एकदिन कुरुक्षेत्रको पूर्ण रूपमा फुलेको कमलबाट सम्पन्न भएको सरोवरमा अन्य चार अप्सराहरू सहित उर्वशीलाई देखे। उसलाई देखेपछि अत्यन्त उन्मत्त भएर उर्वशीसँग भने –हे निर्दयी! यो मरो हृदयमा निवास गर, मेरो कुरा सुन। राजाले यस प्रकारका अनेकौं सूक्त अर्थात उत्तम वचन भन्दा भए ॥३३॥ त्यसपछि उर्वशीले भनिन्–'हे महाराज! अविवेकद्वारा गरिने यस प्रकारका चेष्टाहरूबाट केही पनि प्राप्त हुन सक्दैन। यस समयमा म गर्भवती भएकी छु, एक वर्षपछि तपाईं यस स्थानमा आउनुहोस्, त्यस समयमा मेरो एक पुत्र हुनेछ र म एक रातका लागि मात्र तपाईंसँग निवास गर्नेछु।' उर्वशीले यसो भनेपछि राजा पुरुरवा अत्यन्त प्रसन्न हृदय लिएर आफ्नो राज्यमा गए। त्यसपछि उर्वशीले अन्य अप्सराहरूसँग भनिन्–'यिनै ती सर्वोत्कृष्ट पुरुष पुरुरवा हुन्, जसको प्रेममा पूर्ण रूपमा आकर्षित भएर मैले यिनीसँग यतिका दिनहरूसम्म अत्यन्त आनन्दपूर्वक निवास गरेकी थिएँ।॥३४॥ उर्वशीले यसरी बताइसकेपछि अन्य अप्सराहरूले भने–'यिनी अत्यन्त कुलीन पुरुष रहेछन्, यथार्थमा यिनको रूप अत्यन्तै मनमोहक रहेछ, हामीहरूमा पनि यिनीसँग सधैं रमण गरिरहने अभिलाषा उत्पन्न भइरहेको छ अर्थात् यिनीसँग त सधैं हाम्रो पनि सहवास हुन पाओस् ॥३५॥ त्यसपछि एक वर्ष पूर्ण भएपछि राजा पुरुरवा त्यस ठाउँमा आए त्यस समयमा उर्वशीले उनलाई 'आयु' नाम भएको एक बालक दिइन् र उनीसँग एकरात सहवास पनि गरिन्। त्यस सहवासबाट अन्य पाँच पुत्रहरू उत्पन्न गराउनका लागि उनले गर्भधारण पनि गरिन् ॥३६॥

उवाच चैनं राजानम्–अस्मत्प्रीत्या महाराजाय सर्व एव गन्धर्वा वरदाः संवृत्ताः तस्माद् व्रियतां वर इति ॥३७॥ आह च राजा विजित–सकलारातिरह–तेन्द्रियसामर्थ्यो बन्धुमानमितबलकोषः, नान्यद–स्माकमुर्वशीसालोक्याद् अप्राप्यमस्ति, तदहमनया सहोर्वश्या कालं नेतुमभिलषामि ॥३८॥ इत्युक्ते गन्धर्वा राज्ञेऽग्निस्थालीं ददुः ॥३९॥ ऊचुश्च एनमग्निमाम्नायानुसारी भूत्वा त्रिधा कृत्वा उर्वशीसलोकतामनोरथमुद्दिश्य सम्यग् यजेथाः। ततोऽवश्यमभिलषितमवाप्स्यसि ॥४०॥ इत्युक्तस्तामग्निस्थालीमादायाजगाम । अन्तरटव्यामचिन्तयत्- अहो मे अतिमूढता, यदग्निस्थाली मयानीता नोर्वशीति । अथैना–मटव्यामेवाग्निस्थालीं तत्याज स्वपुरञ्चा–जगाम ॥४१॥ व्यतीतार्द्धरात्रौ विनिद्रश्चाचिन्तयत् मामोर्वशीसालोक्य–प्राप्त्यर्थमग्निस्थाली गन्धर्वैर्दत्ता, सा च मया अटव्यां परित्यक्ता। तदहं तत्र तदाहरणाय यास्यामि । इत्युत्थाय तत्राप्युपगतो नाग्निस्थाली–पश्यत् । शमीगर्भञ्चाश्वत्थमग्निस्थालीस्थाने दृष्ट्वा

त्यसपश्चात् उर्वशीले राजासँग भनिन्–'हामीहरूका बीचमा भएको प्रेमपूर्ण सम्बन्धलाई दृष्टिगत गर्दै सम्पूर्ण गन्धर्वहरू तपाईंलाई वरदान दिनका लागि तयार भएका छन् । त्यसकारण तपाईंले आफ्नो चाहना अनुसारको वर माग्नुहोस्' ॥३७॥ त्यसपछि राजाले भने–'मैले आफ्ना सबै शत्रुहरूमाथि विजय प्राप्त गरिसकें । इन्द्रियहरू सामर्थ्यशाली अर्थात् शक्तिसम्पन्न रहेका छन् । बृद्धि भइरहेको असंख्य सैन्यशक्ति एवं राज्यकोष पनि परिपूर्ण रहेको छ । यस समयमा उर्वशीसँगको सहवास बाहेक मलाई प्राप्त नभएको कुनै पनि वस्तु रहेको छैन । त्यसकारण उर्वशीसँगको सहवासमा आफ्नो जीवन बिताउन चाहन्छु ॥३८॥ राजाले यसो भनेपछि गन्धर्वहरूले उनलाई एउटा अग्निस्थाली अर्थात् अग्निबाट सम्पन्न भएको पात्र दिए ॥३९॥ यसरी अग्निस्थाली दिएपछि गन्धर्वहरूले राजासँग भने तपाईंले देवताहरूका अनुकूल भएर अर्थात् यस अग्निलाई वैदिक विधि अनुसार गार्हपत्य, आहवनीय र दक्षिणाग्निरूप तीन भागमा विभाजन गरेर यसमा उर्वशीसँग सहवास गर्ने लक्ष्यबाट अभिप्रेरित भएर प्रत्येक दिन यज्ञ गर्नू, यसरी यज्ञ गरेपछि तपाईंलाई निश्चित रूपमा आफ्नो मनोकामना अनुसार वस्तु प्राप्त हुनेछ ॥४०॥ गन्धर्वहरूद्वारा यसरी बताइसकेपछि राजाले त्यो अग्निस्थाली लिएर आफ्नो नगरतिर प्रस्थान गरे । नगरतिर जाँदाका समयमा बाटामा जंगलको बीचमा पुगेपछि उनले विचार गरे–'अहो! म कस्तो मूर्ख व्यक्ति रहेछु? मैले यो कस्तो गलत कार्य गरें जुन यो अग्निस्थाली लिएर आएँ तर उर्वशीलाई चाहिं छोडिदिएँ ।' यस्तो चिन्तन गरेर राजाले त्यो अग्निस्थालीलाई जंगलमा नै परित्याग गरिदिएर उनी आफ्नो नगरीमा गए ॥४१॥ आफ्नो निवास–स्थानमा आएपछि मध्यरात बितेपछि निद्राले छाडेपछि राजाले चिन्तन गरे–'उर्वशीको समीप्यताको प्राप्तिका लागि नै गन्धर्वहरूले मलाई त्यो अग्निस्थाली दिएका थिए । मैले त्यसलाई जंगलमा नै परित्याग गरिदिएँ । त्यसकारण मैले यसै समयमा त्यो अग्निस्थाली ल्याउनका लागि जंगलमा अनिवार्य रूपमा जानु

अचिन्तयत्–मयात्र स्थाली निक्षिप्ता, सा चाश्वत्थः शमीगर्भोऽभूत्। तदेतमेवाहमग्निरूपमादाय स्वपुरमभिगम्य अरणीं कृत्वा तदुत्पन्नाग्नेरुपास्तिं करिष्यामीति ॥४२॥ एवमेव स्वपुरभुपगतोऽरणीं चकार ॥४३॥ तत्प्रमाणञ्चाङ्गुलैः कुर्वन् गायत्रीमपठत्। पठतश्चाक्षर–संख्यान्येवाङ्गुला–न्यरण्यभवत् ॥४४॥ तत्राग्निं निर्मथ्याग्नित्रयमा–म्नायानुसारी भूत्वा जुहाव, उर्वशीसालोक्यं चेह फलमभिसंहितवान्। तेनैवाग्निविधिना बहुविधान् यज्ञानिष्ट्वा गन्धर्वलोकान् प्राप्य उर्वश्या सह वियोगं नावाप ॥४५॥ एकोऽग्निरादावभवत्, ऐलेन मत्वत्र धान्वन्तरे त्रेधा प्रविर्तिता ॥४६॥

पर्दछ।' यस्तो चिन्तन गर्दै राजा पुरुरवा त्यो जंगलमा पुगे तर त्यो अग्निस्थाली प्राप्त गर्न सकेनन्। त्यसपछि जुन स्थानमा पहिले अग्निस्थाली राखिएको थियो, त्यस स्थानमा शमीका गर्भमा एउटा पिपललाई देखेर विचार गर्न थाले, यसै स्थानमा मैले अग्निस्थाली परित्याग गरेको थिएँ, त्यही अग्निस्थाली शमीको गर्भमा पिपलका रूपमा परिणत भएको रहेछ। त्यसकारण म यसै पीपललाई अग्निका रूपमा स्वीकार गरेर आफ्नो नगरीमा जानेछु र यसैका अरणीबाट उत्पन्न भएको अग्निको नै उपासना गर्नेछु ॥४२॥ यस प्रकारको विचार गरेर राजाले आफ्नो नगरीमा पुगेर आफूले ल्याएको त्यो पिपलको अरणि बनाए, जसबाट यज्ञमा प्रयोग गर्ने आगो निकालिन्छ ॥४३॥ त्यसपछि राजाले त्यो पिपलको काठलाई एक एक हातको बुढी औंला बराबरको बनाउँदै गायत्री मन्त्रको जप गरे। त्यसपश्चात् गायत्री मन्त्रको संख्याका अनुसार एक एक अङ्गुल अर्थात् हातको बुढी औंला बराबरका अरणिहरू उत्पन्न भए ॥४४॥ तिनीहरूको मन्थनबाट तीनै किसिमका अग्निहरू उत्पन्न गराई राजाले वैदिक मन्त्रहरू अनुसार विधिपूर्वक हवन गर्न थाले एवं यस लोकमा उर्वशीसँगको सहवासरूपी फलप्राप्तिको कामना गरे। त्यसपछि राजाले त्यसै अग्निबाट विभिन्न किसिमका यज्ञ गरेर त्यसको फलस्वरूप गन्धर्वलोक प्राप्त गरे। त्यसपछि उर्वशी र राजा पुरुरवाको सधैं सम्बन्ध रहिरह्यो अर्थात् उनीहरूको कहिल्यै वियोग भएन ॥४५॥ प्राचीनकालमा एक प्रकारका अग्नि मात्र थिए, तर यस मन्वन्तरमा इलाका पुत्र राजा पुरुरवाले गार्हपत्य, आवहनीय र दक्षिण नाम भएका तीन किसिमका अग्निहरूलाई प्रयोगमा ल्याए अर्थात् तीन किसिमको अग्नि भएको प्रचार गरे ॥४६॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे षष्ठःअध्यायः

ॐ

## सप्तमोऽध्यायः

## अध्याय – ७

### "पुरूरवसो जन्होश्च वंशकथनम्"

(पुरुरवा र जह्नु वंशको वर्णन)

पराशर उवाच

तस्याप्यायुर्धीमानमावसु–विश्वावसुशतायुःश्रुतायुः (अयुतायुः) संज्ञाः षडभवन् पुत्राः ॥१॥ अमावसोर्भीमो नाम पुत्रोऽभवत्। भीमस्य काञ्चन, काञ्चनात् सुहोत्रः, तस्यापि जह्नुः। योऽसौ यज्ञवाटमखिलं गङ्गाम्भसा प्लावितमालोक्य क्रोधसंरक्तनयनो भगवन्तं यज्ञपुरुषमात्मनि परमेण समाधिना समारोप्याखिलामेव गङ्गामपिबत् ॥२॥ अथैनं देवर्षयः प्रसादयामासुः, दुहितृत्वे चास्य गङ्गामनयन्। जह्नोश्च सुजह्नुर्नाम पुत्रोऽभवत्। तस्याप्यजकः, ततो बलाकाश्वः, तस्मात् कुशः कुशस्य कुशाश्व–कुशनाभामूर्ताश्वामावसवश्चत्वारः पुत्रा बभूवुः ॥३॥ तेषां कुशाश्वः "शक्रतुल्यो मे पुत्रो भवे" दिति तपश्चचार। तञ्चोग्रतपसमवलोक्य मा भवत्वन्योऽस्मत्तुल्यवीर्य" इत्यात्मनैवास्येन्द्रः पुत्रत्वमगच्छत् ॥४॥ गाधिर्नाम स

**पराशरजीले भन्नुभयो**–राजा पुरुरवाका पुत्ररत्नका रूपमा परम बुद्धिमान् आयु, अमावसु, विश्वावसु, श्रुतायु, शतायु र अयुतायु यी छ पुत्र उत्पन्न भए ॥१॥ अमावसुका पुत्ररत्नका रूपमा भीम उत्पन्न भएका थिए। भीमका पुत्ररत्नका रूपमा काञ्चन एवं काञ्चनका पुत्ररत्नका रूपमा सुहोत्र उत्पन्न भएका थिए। यसैगरी सुहोत्रका पुत्ररत्नका रूपमा जह्नु उत्पन्न भएका थिए। जह्नुले आफ्नो सम्पूर्ण यज्ञस्थललाई गङ्गाजलबाट प्लावित अर्थात् पानीले भिजेको देखेर अत्यन्त क्रोधित भएर राता राता आँखा पार्दै समाधिका माध्यमद्वारा भगवान् यज्ञपुरुषलाई आफ्ना आत्मामा स्थापित गरेर सम्पूर्ण गङ्गजीलाई नै पिइदिएका थिए ॥२॥ त्यस समयमा सम्पूर्ण देवर्षिहरूले उनलाई प्रसन्न गराए। त्यसपछि उनले गङ्गजीलाई आफ्नो पुत्रीस्वरूपमा स्वीकार गरे। जह्नुका पुत्ररत्नका रूपमा सुजन्हु उत्पन्न भए। यसरी नै सुजह्नुका पुत्ररत्नका रूपमा अजक उत्पन्न भए भने अजकका पुत्ररत्नका रूपमा बलाकाश्व उत्पन्न भएका थिए एवं बलाकाश्वका पुत्ररत्नका रूपमा कुश उत्पन्न भएका थिए र कुशका पुत्ररत्नका रूपमा कुशाश्व, कुशनाभ, अमूर्ताश्व र अमावसु यी चार पुत्र उत्पन्न भएका थिए ॥३॥ तिनीहरूमध्ये कुशाश्वले 'मलाई इन्द्रका समान बल र पराक्रमशाली पुत्र प्राप्त होस्' यस प्रकारको सङ्कल्प गरेर तपस्या गर्न आरम्भ गरे। उनीद्वारा गरिएको अत्यन्त उग्र तपस्यालाई दृष्टिगत गर्दै इन्द्रले 'बल र पराक्रममा म समान अर्को कोही उत्पन्न नहोस्' यस भावनाका आधारमा स्वयं आफैं उनको पुत्ररत्नका रूपमा जन्म ग्रहण गरे अर्थात् जन्म लिए ॥४॥ ती इन्द्र नै कौशिक गाधिका नामबाट विख्यात भए। गाधिकी सत्यवती नाम भएकी कन्या

**कौशिकोऽभवत्। गाधिश्च सत्यवतीं नाम कन्यामजनयत्। ताञ्च भार्गवो ऋचीको वव्रे ॥५॥ गाधिरप्यतिरोषणाय अतिबृद्धाय च ब्राह्मणाय दातुमनिच्छन्नेकतः श्यामकर्णानामिन्दु–वर्चसामनिलरंहसामश्वानां सहस्रं कन्याशुल्क–मयाचत ॥६॥ तेनापि ऋषिणा वरुणसकाशादुपलभ्य अश्वतीर्थोत्पन्नं तादृशाश्वसहस्रं दत्तम् ॥७॥ ततस्तामृचीकः कन्यामुपयेमे। ऋचीकश्च तस्याश्चरुमपत्यार्थं चकार। तया प्रसादितश्च तन्मात्रे क्षत्रवरपुत्रोत्पत्तये चरुमपरं साधयामास ॥८॥ एष चरुर्भवत्या अयमपरस्त्वन्मात्रा सम्यगुपयोज्य इत्युक्त्वा स वनं जगाम ॥९॥ उपयोगकाले च माता तां सत्यवतीमाहसर्व एवात्मपुत्रमतिगुणं समभिलषति, नात्मजायाभ्रातृगुणेष्वतीवादृतो भवतीत्यतोऽर्हसि मम त्वमात्मीयञ्चरुं दातुं मदीयञ्चरुमात्मनोपयोक्तुम् ॥१०॥ मत्पुत्रेण हि सकलभूमण्डल परिपालनं कार्यम् ॥११॥ कियद् वा ब्राह्मणस्य बलवीर्य–**

जन्मिइन्। तिनलाई भृगु ऋषिका पुत्र ऋचीक ऋषिले आफ्ना लागि याचना गरे अर्थात् मागे ॥५॥ गाधिले अत्यन्त क्रोधी र अत्यन्त वृद्ध भएका ब्राह्मणलाई आफ्नी कन्या दिने चाहना नभएकोले ऋचीकसँग कन्याको मूल्य स्वरूप चन्द्रमाका समान कान्ति भएका र पवनका बराबर वेग अर्थात् गति भएका एक हजार श्यामकर्ण अर्थात् सेतो शरीर, तामो रंगको थुतुनो, रातो टाप, कालो कान र आँखा हुने अश्वमेघमा छोडिने घोडाहरूको याचना गरे अर्थात् मागे ॥६॥ तर महर्षि ऋचीकले पनि वरुणदेवका समीपबाट अश्वतीर्थमा उत्पन्न भएका माग गरिए अनुसारकै एक हजार घोडाहरू ल्याएर राजालाई दिए ॥७॥ त्यसपश्चात् महर्षि ऋचीकले ती सत्यवतीसँग विवाह गरे। त्यसपछि कुनै एक समयमा ऋचीकले सन्तान–प्राप्तिको कामनाबाट अभिप्रेरित भएर सत्यवतीका लागि चरु अर्थात् यज्ञीय खीर तयार गरे। त्यस समयमा सत्यवतीले उनलाई प्रसन्न गराएर आफ्नी माताका लागि पनि क्षत्रिय श्रेष्ठ पुत्रको प्राप्तिका लागि यज्ञिय खीर बनाइदिन प्रार्थना गरिन्। महर्षि ऋचीकले पनि अर्को एउटा चरु अर्थात यज्ञीय खीर बनाइदिए ॥८॥ चरु अर्थात् यज्ञीय खीर बनाइसकेपछि "यो चरु तिम्रा लागि" हो र यो चरु तिम्री माताका लागि बनाइएको हो। यिनीहरूको तिमीले यथोचित उपयोग गर्नू, यसरी दुवै चरु अर्थात् यज्ञीय खीरका विषयमा आफ्नी पत्नी सत्यवतीलाई सम्झाइदिएर ऋषि वनमा गए ॥९॥ त्यसपछि चरु अर्थात् यज्ञीय खीर उपोग गर्ने समयमा सत्यवतीकी माताले उनीसँग भनिन्– हे छोरी! सबैले आफ्ना लागि मात्र अत्यन्त गुणशील पुत्रको कामना गर्ने गर्दछन्। तर कसैले पनि आफ्नी पत्नीका भाईहरूलाई त्यस किसिमको आदरभाव राख्दैनन् अर्थात् मेरो मान्यता अनुसार मेरा लागि बनाइएको चरुका तुलनामा तिम्रा लागि बनाइएको चरु उत्तम रहेको हुनुपर्दछ। त्यसकारण तिमीले तिम्रा लागि बनाइएको चरु अर्थात् यज्ञीय खीर मलाई देऊ र मेरा लागि बनाइएको चरुको तिमीले भोजन गर। किनकि मेरा पुत्रले सम्पूर्ण भूमण्डलको पालन पोषण गर्ने अभिभारा निर्वाह गर्नुपर्दछ ॥१०–११॥ ब्राह्मणकुमारको

सम्पदित्युक्ता सा स्वं चरुं मात्रे दत्तवती ॥१२॥ अथ वनादभ्यागत्य सत्यवतीमृषिरपश्यत् आह चैनाम्–अतिपापे! किमिदमकार्यं भवत्या कृतम्, अतिरौद्रं ते वपुरालक्ष्यते, नूनं त्वया त्वन्मातृसत्कृतश्चरुरुपयुक्तः, न युक्तमेतत् ॥१३॥ मया हि तत्र चरौ सकलैव शौर्य-वीर्य-बलसम्पदारोपिता, त्वदीये चरावप्यखिलशान्ति-ज्ञान-तितिक्षादिका ब्राह्मणगुण-सम्पत्, एतच्च विपरीतं कुर्वत्यास्तवातिरौद्रास्त्रधारण –मारणनिष्ठः क्षत्रियाचारः पुत्रो भविष्यति, तस्याश्चोपशमरुचिर्ब्राह्मणाचारः॥१४॥ इत्याकर्ण्यैव सा तस्य पादौ जग्राह। प्रणिपत्य च एनमाह,–भगवन्! मयैतदज्ञानादनुष्ठितम्, प्रसादं मे कुरु, मैवंविधः पुत्रो भवतु, काममेवंविधः पौत्रो भवतु इत्युक्तो मुनिरप्याह–एवमस्तु इति ॥१५॥ अनन्तरञ्च सा जमदग्निमजीजनत्। तन्माता च विश्वामित्रं जनयामास। सत्यवती च कौशिकी नाम नद्यभवत्। जमदग्निरिक्ष्वाकुवंशोद्भवस्य रेणोस्तनयां

बल, वीर्य तथा सम्पत्ति आदिसँग कुनै किसिमको सम्बन्ध रहेको हुँदैन। आफ्नी माताले यसरी अनुरोध गरेपछि सत्यवतीले आफ्ना लागि बनाइएको चरु आफ्नी मातालाई दिइन् र माताका लागि बनाइएको चरु आफूले भोजन गरिन् ॥१२॥ त्यसपछि जब महर्षि ऋचीक वनबाट फर्किएर आए, त्यस समयमा सत्यवतीलाई देखेर भने –हे पापिनी! तिमीले किन यस किसिमको अनर्थकारी कार्य गरेको? तिम्रो शरीर अत्यन्त भयानक देखिइरहेको छ। मेरो विचारमा तिमीले आफ्नी माताका लागि बनाइएको चरु खाएको हुनुपर्दछ। हे सत्यवती! तिम्रो यो कार्य अत्यन्त अनुचित हो ॥१३॥ मैले तिम्री माताका लागि बनाएको चरुमा सम्पूर्ण ऐश्वर्य पराक्रम, शूरवीरता, बल जस्ता सम्पदा समावेश गरेको थिएँ। तिम्रा लागि बनाएको चरुमा शान्ति, ज्ञान, बुद्धि र सहनशीलता जस्ता ब्राह्मणका लागि अत्यन्त उपयोगी हुने सम्पदा समावेश गरेको थिएँ। तिमीले त्यसको विपरीत कार्य गर्‍यौ। त्यसकारण तिम्रो पुत्र अत्यन्त भयानक अस्त्र शस्त्र धारण गर्ने र अन्यलाई मार्ने जस्ता कार्यमा अत्यन्त तत्परतापूर्वक लाग्ने स्वभाव भएको क्षत्रियगुणहरूबाट पूर्ण रूपमा सम्पन्न भएको हुनेछ। एवं तिम्री माताको पुत्र शान्ति र सदाचार सम्पन्न ब्राह्मणस्वभावबाट युक्त हुनेछ ॥१४॥ ऋषिले यस्तो कुरा भनिसकेपछि सत्यवतीले ऋषिका दुवै चरणहरू समाएर प्रणाम गर्दै भनिन्–'हे भगवन्! मबाट अज्ञानताका कारणले गर्दा यस प्रकारको कार्य हुन गयो, मसँग प्रसन्न भइदिनुहोस् एवं कुनै यस्तो उपाय गरिदिनुहोस्, जसको प्रभावले गर्दा मेरो पुत्र यस प्रकारको नभएर बरु मेरो नातिको स्वभाव त्यस किसिमको होस्।' सत्यवतीले यसरी प्रार्थना गरेपछि ऋषिले भने–'तथास्तु' अर्थात् तिमीले जे भन्यौ, त्यही हुनेछ ॥१५॥ त्यसपछि समय पूर्ण भएपछि सत्यवतीका गर्भबाट जमदग्नि उत्पन्न भए एवं उनकी माताका गर्भबाट विश्वामित्र उत्पन्न भए। अन्तमा सत्यवती कौशिकी नामको नदीका रूपमा अत्यन्त विख्यात भइन्। जनदग्निले इक्ष्वाकुवंशीय राजा रेणुकी कन्या रेणुकासँग

रेणुकामुपयेमे। तस्याञ्चा-शेषक्षत्रवंशहन्तारं परशुरामसंज्ञं भगवतः सकललोकगुरोर्नारायणस्यांशं जमदग्निर-जीजनत् ॥१६॥ विश्वामित्रपुत्रस्तु भार्गव एव शुनःशेपो नाम देवैर्दत्तः, ततश्च देवरातनामाभवत्। ततश्च ते मधुच्छन्द-जय-कृतदेव-देवाष्टक-कच्छप-हारीतकाख्या विश्वामित्रपुत्रा बभूवुः ॥१७॥ तेषाञ्च बहूनि कौशिकगोत्राणि ऋष्यन्तरेषु वैवाह्या न्यभवन् ॥१८॥

विवाह गरे र तिनै रेणुकाका गर्भबाट सम्पूर्ण क्षत्रिय वंशको संहारकर्ता सम्पूर्ण लोकहरूका महागुरु भगवान् श्रीविष्णुका अंश रूप परशुराम नाम भएका अत्यन्त पराक्रमी पुत्र उत्पन्न भए ॥१६॥ देवताहरूले भृगुवंशीय शुनःशेप अर्थात् अजीगर्तको माहिलो छोरो, एक वैदिककालीन ब्राह्मणलाई विश्वामित्रका पुत्रका रूपमा प्रदान गरेका थिए। त्यसकारण तिनी देवरातका नामबाट प्रख्यात भए। त्यसपछि विश्वामित्रका पुत्ररत्नका रूपमा मधुच्छन्द, जय, कृतदेव, देवाष्टक, कच्छप र हारीतक उत्पन्न भए ॥१७॥ ती पुत्रहरूबाट कौशिक-गोत्रिय एवं अन्य ऋषिका वंशहरूमा विवाह गर्न योग्य धेरै पुत्रहरू उत्पन्न भए ॥१८॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे सप्तमः अध्यायः।

ॐ

## अष्टमोऽध्यायः

## अध्याय – ८

### "आयुर्वंशकथनम्, धन्वन्तरेरुत्पत्तिः तद्वंशवर्णनञ्च"

(आयुवंशको कथा, धन्वन्तरिको उत्पत्ति)

पराशर उवाच

पुरूरवसो ज्येष्ठः पुत्रो यस्त्वायुर्नामा, स बाहोर्दुहितरमुपयेमे। तस्यां स पञ्च पुत्रान् जनयाभास। नहुष–क्षत्रवृद्धः रम्भ–रजिसंज्ञाः तथैवानेनाः पञ्चमः पुत्रोऽभूत्। क्षत्रवृद्धात् सुहोत्रः पुत्रोऽभूत्। काशलेश–गृत्समदास्तस्य पुत्रास्त्रयोऽभवन्। गृत्समदस्य शौनकश्चातुर्वर्ण्यप्रवर्तयिताऽभूत् ॥१॥ काशस्य काशिराजः, ततो दीर्घतमाः पुत्रोऽभवत्। धन्वन्तरिस्तु दीर्घतमसोऽभूत्। स हि संसिद्धकार्यकरणः सकल–सम्भूतिष्वशेषज्ञानवित् ॥२॥ भगवता नारायणेन च अतीतसम्भूतावस्मै वरो दत्तः॥३॥ काशिराजगोत्रेऽवतीर्य्य त्वमष्टधा सम्यगायुर्वेदं करिष्यसि, यज्ञभागभुक् भविष्यसि इति ॥४॥ तस्य च धन्वन्तरेः पुत्रः केतुमान्। केतुमतो भीमरथः तस्यापि दिवोदासः, ततः प्रतर्दन :। स च मद्रश्रेण्यवंशविनाशनादशेषाः शत्रवोऽनेन जिता इति शत्रुजिदभवत् ॥५॥ तेन च प्रीतिमतात्मपुत्रो वत्स वत्सेत्यभिहितः ततो वत्सोऽसावभवत् ॥६॥

**पराशरजीले भन्नुभयो**–पुरूरवाका जेठा पुत्ररत्नका रूपमा आयु उत्पन्न भएका थिए। आयुले बाहुकी कन्यासँग विवाह गरेका थिए। ती कन्याका गर्भबाट आयुका पुत्ररत्नका रूपमा नहुष, क्षत्रवृद्ध, रम्भ, रजि एवं अनेना यी पाँच उत्पन्न भएका थिए। क्षेत्रबृद्धका पुत्ररत्नका रूपमा सुहोत्र उत्पन्न भए। यी सुहोत्रका पुत्ररत्नका रूपमा काश, लेश र गृत्समद यी तीन उत्पन्न भए। गृत्समदका पुत्ररत्नका रूपमा शौनक उत्पन्न भए। यिनै महर्षि शौनक चारवटै वर्णहरूका प्रवर्तक अर्थात् आरम्भकर्ता भए ॥१॥ काशका पुत्ररत्नका रूपमा काशीराज उत्पन्न भएका थिए भने काशीराजका पुत्ररत्नका रूपमा दीर्घतमा उत्पन्न भए र दीर्घतमाका पुत्ररत्नका रूपमा धन्वन्तरि उत्पन्न भएका थिए। यी धन्वन्तरिको शरीर र इन्द्रियहरू वृद्धावस्था जस्ता विकारहरूबाट पूर्ण रूपमा अलग रहेका थिए र यिनी सबै शास्त्रहरूका पूर्ण ज्ञाता रहेका थिए ॥२॥ यिनलाई पूर्वजन्ममा स्वयं भगवान् श्रीनारायणले वरदान दिँदै भन्नुभएको थियो ॥३॥ तिमीले काशीराजका वंशमा उत्पन्न भएर सम्पूर्ण आयुर्वेदलाई आठ भागहरूमा विभाजन गर्नेछौ र तिमी भविष्यमा यज्ञभागका भोक्ता पनि बन्नेछौ ॥४॥ धन्वन्तरिका पुत्ररत्नका रूपमा केतुमान् उत्पन्न भएका थिए भने केतुमान्का पुत्ररत्नका रूपमा भीमरथ उत्पन्न भएका थिए। यसैगरी भीमरथका पुत्ररत्नका दिवोदास उत्पन्न भएका थिए एवं दिवोदासका पुत्ररत्नका रूपमा प्रतर्दन उत्पन्न भएका थिए। प्रतर्दनले सम्पूर्ण मद्रश्रेण्यवंशको विनाश गरेका थिए तथा सम्पूर्ण शत्रुहरूमाथि विजय प्राप्त गरेका कारणले गर्दा यिनको नाम 'शत्रुजित्' भयो ॥५॥ उनका पिता दिवोदासको उनमा अत्यन्त प्रेम भएकाले वत्स! वत्स! भनेर बोलाउने गर्दथे। यसकारण यिनको एउटा नाम 'वत्स' पनि रहेको थियो ॥६॥ तथा यिनी अत्यन्त

स च सत्यव्रततया ऋतध्वजसंज्ञामवाप। पुनश्च कुवलयनामानमश्वं लेभे, कुवलयाश्व इत्यस्यां पृथिव्यां प्रथितः ॥७॥ तस्य च वत्सस्य पुत्रोऽलर्को नामाभवत्। यस्यामद्यापि श्लोको गीयते।–

षष्टिवर्षसहस्राणि षष्टिवर्षशतानि च।
अलर्कादपरो नान्यो बुभुजे मेदिनीं युवा ॥८॥

तथालर्कस्य सन्नतिर्नामात्मजोऽभवत्। ततः सुनीथः, तस्य सुकेतुः, ततो धर्मकेतुः, ततः सत्यकेतुः, तस्माद् विभुः, तत्तनयः सुविभुः, ततश्च सुकुमारः, तस्यापि धृण्टकेतुः, ततश्च वैनहोत्रः, ततश्च भार्गः, भार्गस्य भार्गभूमिः, ततश्चातुर्वर्ण्यप्रवृत्तिः इत्येते काश्यपा भूपतयः कथिताः। रजेस्तु सन्ततिः श्रूयताम् ॥९॥

सत्यव्रती थिए अर्थात् यिनी कहिल्यै पनि असत्य कार्य वा कुरा गर्दैनथे। यसकारण यिनको एउटा नाम ऋतध्वज पनि रहेको थियो। यसरी नै यिनले कुवलय नाम भएको घोडा प्राप्त गरेका थिए। त्यसैले यिनी सम्पूर्ण पृथ्वीमा 'कुवलयाश्व' को नामबाट प्रख्यात भएका थिए ॥७॥ ती वत्सका पुत्ररत्नका रूपमा अलर्क उत्पन्न भएका थिए, जसका विषयको श्लोक आजसम्म पनि अत्यन्त प्रसिद्ध रहेको छ। 'प्राचीनकालमा अलर्कबाहेक अन्य कुनै पनि राजाले युवावस्थामा साठी हजार वर्षहरूसम्म पृथ्वीको उपभोग गर्न सकेका थिएनन् ॥८॥ ती अलर्कका पुत्ररत्नका रूपमा सन्नति उत्पन्न भएका थिए भने सन्नतिका पुरत्नका रूपमा सुनीथ उत्पन्न भएका थिए एवं सुनीथका पुत्ररत्नका रूपमा सुकेतु उत्पन्न भएका थिए। यसरी नै सुकेतुका पुत्ररत्नका रूपमा धर्मकेतु उत्पन्न भएका थिए भने धर्मकेतुका पुत्ररत्नका रूपमा सत्यकेतु उत्पन्न भएका थिए एवं सत्यकेतुका पुत्ररत्नका रूपमा विभु उत्पन्न भएका थिए र विभुका पुत्ररत्नका रूपमा सुविभु उत्पन्न भएका थिए। यसैगरी सुविभुका पुत्रत्नका रूपमा सुकुमार उत्पन्न भएका थिए भने सुकुमारका पुत्ररत्नका रूपमा धृष्टकेतु उत्पन्न भएका थिए र धृष्टकेतुका पुत्ररत्नका रूपमा वैनहोत्र उत्पन्न भएका थिए एवं वैनहोत्रका पुत्ररत्नका रूपमा भार्ग उत्पन्न भएका थिए तथा मार्गका पुत्ररत्नका रूपमा भार्गभूमि उत्पन्न भएका थिए। यिनै भार्गभूमिबाट चारवटै वर्णहरूको प्रचार प्रसार भयो। यहाँसम्म काश्यप राजाहरूका विषयमा मैले तिमीलाई बताएँ, अब रजिका वंशको वर्णन सुन ॥९॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे अष्टमोऽध्यायः

ॐ

## नवमोऽध्यायः

## अध्याय – ९

### "रजेर्दैत्यानाञ्च युद्धम्, क्षत्रवृद्धस्य वंशावीलकथनञ्च"

(रजि र दैत्यहरूको युद्ध, क्षत्रवृद्ध वंशको कथा)

पराशर उवाच

रजेः पञ्चपुत्रशतान्यतुलबलवीर्यसाराण्यासन्। देवासुर–सङ्ग्रामारम्भे परस्परवधेप्सवो देवाश्च ब्रह्माणं पप्रच्छु ॥१॥ भगवन्! अस्माकमत्र विरोधे कतरः पक्षो जेता भविष्यतीति। अथाह भगवान्–येषामर्थे रजिरात्तायुधो योत्स्यतीति। अथ दैत्यैरुपेत्य रजिरात्मसाहाय्यदानायाभ्यर्थितः प्राह,–योत्स्येऽहं भवतामर्थे, यद्यहममर–जयाद् भवतामिन्द्रो भविष्यामि इति। आकर्ण्यैयत् तैरभिहितो, न वयमन्यथा वदिष्यामोऽन्यथा करिष्यामः। अस्माकमिन्द्रः प्रह्लाद–स्तदर्थमयमुद्यम इत्युक्त्वा गतेष्वसुरेषु देवैरप्यसाववनीपतिरेवमेवोक्तः। तेनापि च तथैवोक्ते देवैरिन्द्रस्त्वं भविष्यसीति समन्वीप्सितम् ॥२॥ रजिनापि देवसैन्यसहायेन अनेकैर्महास्त्रैस्तदशेषमसुरबलं निषूदितम्।

**पराशरजीले भन्नुभयो**–रजिका अत्यन्त बल र पराक्रमबाट सम्पन्न भएका पाँच सय पुत्रहरू थिए। एक समयको देवताहरू र असुरहरूको सङ्ग्रामको आरम्भमा एकले अर्काको वध गर्ने चाहनाबाट अभिप्रेरित भएका देवताहरू र असुरहरूले ब्रह्मजीका शरणमा परेर सोधे ॥१॥ 'हे पितामह! हामी दुई पक्षका बीचमा हुन लागिरहेको यस सङ्ग्राममा कुन पक्षको विजय हुनेछ।' त्यसपछि पितामह ब्रह्माजीले भन्नुभयो– 'जुन पक्षमा लागेर राजा रजिले शस्त्र धारण गरेर युद्ध गर्नेछन्, त्यही पक्ष विजयी हुनेछ।' त्यसपछि दैत्यहरूले राजा रजिका समीपमा गएर आफूहरूलाई सहयोग गरिदिनका लागि विनम्र अनुरोध गरे। दैत्यहरूको अनुरोध पश्चात् राजा रजिले भने–'यदि तपाईंहरूले देवताहरूमाथि विजय प्राप्त गरिसकेपछि मलाई इन्द्रको रूपमा स्वीकार गर्नुहुन्छ भने म तपाईंहरूका पक्षमा लागेर युद्ध गर्न तयार छु।' राजा रजिका यस प्रकारका कुरा सुनेपछि असुरहरूले भने–'हामीहरू एउटा कुरा भन्ने तर काम चाहिँ अर्कै गर्ने गर्दैनौँ। अर्थात् जस्तोसुकै अवस्थामा पनि हाम्रो वचनमा परिवर्तन हुन सक्दैन। हामीहरूका इन्द्र प्रह्लाद मात्र हुन सक्दछन्। त्यसैले उनकै लागि हामीहरूले यस किसिमको प्रयास गरिरहेका हौं। त्यसकारणले गर्दा तपाईंद्वारा प्रस्तुत गरिएको यो प्रस्ताव स्वीकार्य हुँदैन। जब यति भनेर असुरहरू त्यहाँबाट गए, त्यसै समयमा देवताहरू आएर राजा रजिसँग त्यसै किसिमको अनुरोध गरे र राजाले पनि दैत्यहरूलाई जुन कुरा बताएका थिए देवताहरूलाई पनि त्यही कुरा बताए। त्यसपछि देवताहरूले 'तपाईं नै हाम्रो इन्द्र हुनुहुनेछ' भन्दै सहर्ष उनको प्रस्तावलाई स्वीकार गरे ॥२॥ त्यसपछि राजा रजिले देवताहरूका सेनाको सहयोगी भएर अत्यन्त उत्तम अस्त्र,

अवजितारातिपक्षश्च इन्द्रो रजिचरणयुगल-मात्मशिरसा निपीड्याह,-भयत्राणदानादस्मत्पिता भवान्, अशेषलोकानामुत्तमो भवान्; यस्याहं पुत्रस्त्रिलोकेन्द्रः॥३॥ स चापि राजा प्रहस्याह, - एवमेवास्तु, अनतिक्रमणीया हि वैरिपक्षादप्यनेक-विधचाटुवाक्यगर्भा प्रणतिः। इत्युक्त्वा स्वपुरमाजगाम ॥४॥ शतक्रतुरपीन्द्रत्वं चकार। स्वर्याते च रजौ नारदर्षिचोदिता राजसुताः शतक्रतुमात्मपितृपुत्रमाचाराद् राज्यं याचितवन्तः ॥५॥ अप्रदाने चावजित्येन्द्रमतिबलिनः स्वयमिन्द्रत्वं चक्रुः। ततश्च बहुतिथे काले व्यतीते बृहस्पतिमेकान्ते दृष्ट्वापहृतत्रैलोक्य-यज्ञभागः शतक्रतुराह ॥६॥ बदरीफलमात्रमप्यर्हसि मम आप्यायनाय पुरोडाशखण्डं दातुमित्युक्तो बृहस्पतिरुवाच-यद्येवं पूर्वमेव त्वयाहं चोदितः स्यां, तन्मया त्वदर्थं किमकर्तव्यमिति ॥७॥ स्वल्पैरेवाहोभिस्त्वां निज पदं

शस्त्रहरूद्वारा असुरहरूको सेनालाई पूर्ण रूपमा नष्ट गरिदिए। जुन समयमा शत्रुपक्षका सबै सैन्यबल यथार्थमा नष्ट भयो, त्यस समयमा स्वर्गका अधिपति इन्द्रले रजिका दुवै चरणकमलमा आफ्नो शिरको स्पर्श गर्दै भने-'हजुरले म अत्यन्त भयभीत भएका अवस्थामा मेरो रक्षा गरिदिनुभयो, त्यसकारण हजुर हामीहरूका पिता हुनुहुन्छ। हजुर यस समयमा सबै लोकहरूमा सर्वोत्तम हुनुहुन्छ, किनकि म त्रिलोकेश अर्थात् स्वर्ग, मर्त्य र पाताल यी तीनवटै लोकहरूको अधिपति इन्द्र हजुरको पुत्र हुँ ॥३॥ त्यस समयमा राजा रजिले मन्द मुस्कानका साथ भने-'असल त्यही हुन्छ, शत्रुपक्षका पनि अनेकौं किसिमका चाटुवाक्य अर्थात् चापलुसीबाट सम्पन्न भएका वचनद्वारा गरिएको अनुनय विनयको उल्लङ्घन गर्न उचित हुँदैन भने आफ्नो पक्षमा रहेकाको कुरै भएन' भनेर राजा रजि आफ्नो नगरीतिर प्रस्थान गरे ॥४॥ यसरी शतक्रतु अर्थात सय पटक यज्ञ गर्ने इन्द्र पनि स्वर्गको सिंहासनमा विराजमान भएर शासन गर्न थाले। त्यसपछि राजा रजिको देहान्त भएपछि देवर्षि नारदको प्रेरणाबाट अभिप्रेरित भएका रजिका पुत्रहरूले आफ्ना पिताद्वारा स्वीकार गरिएका पुत्र इन्द्रसँग न्यायिक सिद्धान्त अनुसार आफ्नो पिताको राज्य फिर्ता मागे ॥५॥ तर इन्द्रले आफ्ना पिताको राज्य फिर्ता नदिए पछि अत्यन्त पराक्रमशाली रजिका पुत्रहरूले इन्द्रलाई पराजित गरेर आफैँ इन्द्रको सिंहासनमा विराजमान भए। त्यसपछि धेरै समय व्यतीत भइसकेपछि अपहरित भएका त्रैलोक्यको यज्ञभाग प्राप्त गर्ने इन्द्रले एकान्त स्थानमा बसिरहेका बृहस्पतिसँग भने ॥६॥ के 'तपाईंले मलाई बयरको दाना जतिमात्र घिउ दिएर मलाई तृप्त गराइनि सक्नुहुन्छ?' इन्द्रले यसो भनेपछि देवताहरूका गुरु बृहस्पतिले इन्द्रसँग भन्नुभयो-'यदि तिमीले यो कुरा मलाई यसभन्दा पहिले नै बताइदिएका भए मद्वारा तिम्रो कल्याणको जुनसुकै कार्य पनि हुन सक्दथ्यो अर्थात् मैले गर्न नसक्ने कार्य केही पनि थिएन ॥७॥ अबका केही दिनहरूमा नै म तपाईंलाई आफ्नो सिंहासनमा विराजमान गराइदिनेछु। इन्द्रसँग यसरी बताइसकेपछि देवताहरूका गुरु

प्रापयिष्यामि इत्यभिधाय तेषामनुदिनाभिचारिकं बुद्धिमोहाय शक्रस्य च तेजोवृद्धये जुहाव। ते चापि तेन बुद्धिमोहेनाभिभूयमाना ब्रह्मद्विषो धर्मत्यागिनो वेदवादपरङ्मुखा बभूवुः। ततश्च तानपेतधर्माचारान् इन्द्रो जघान पुरोहिताप्यायिततेजाश्च त्रिदिवमाकमत्। एतद्धि तस्य स्वपदच्यवनारोहणं श्रुत्वा पुरुषः स्वपदभ्रंशं दौरात्म्यं वा न नाप्नोति ॥८॥ रम्भस्त्वनपत्योऽभवत्। क्षत्रवृद्धसुतः प्रतिक्षत्रः, तत्पुत्रः सञ्जयः ततश्च विजयः, तस्माच्च यलकृत्, तस्य हर्षवर्धनः हर्षवर्द्धनसुतः सहदेवः तस्माददीनः तस्य जयसेनः ततश्च संहुतिः, तत्पुत्रः क्षत्रधर्मा इत्येते क्षत्रवृद्धस्य अतो नहुषवंशं वक्ष्यामि इति ॥९॥

बृहस्पतिले रजिका पुत्रहरूको बुद्धिलाई मोहित गराइदिनका लागि प्रत्येक दिन अभिचारादि क्रिया र इन्द्रको तेज बृद्धि गराउनका लागि होम गर्न आरम्भ गरे। त्यसपछि रजिका पुत्रहरूको बुद्धि अत्यन्त मोहित भएका कारणले उनीहरू ब्राह्मणहरूमा द्वेषभाव राख्ने, आफ्नो धर्मको त्याग गर्ने र वेदाचारबाट विमुख भए। त्यसपछि इन्द्रले अनायास रूपमा धर्माचरणबाट विहीन भएका ती रजिका पुत्रहरूको विनाश गरिदिए र आफ्ना पुरोहित बृहस्पतिका कृपाका प्रभावले अत्यन्त नेजस्वी बनेर स्वर्गमा आक्रमण गरी आफ्नो अधिकार स्थापित गरे। इन्द्र यसरी पदच्युत भएका र इन्द्रपद–प्राप्तिको सुरले मनुष्य आफ्नो स्थानबाट च्यूत हुनेछैन र उसको कहिल्यै दुष्ट प्रवृत्ति रहनेछैन ॥८॥ आयुका अर्का पुत्र, रम्भका कुनैपनि सन्तान थिएनन्। क्षत्रबृद्धका पुत्ररत्नका रूपमा प्रतिक्षत्र उत्पन्न भएका थिए भने प्रतिक्षत्रका पुत्ररत्नका रूपमा सञ्जय उत्पन्न भएका थिए। यसरी नै सञ्जयका पुत्ररत्नका रूपमा जय उत्पन्न भएका थिए र जयका पुत्ररत्नका रूपमा विजय उत्पन्न भएका थिए भने विजयका पुत्ररत्नका रूपमा यलकृत् उत्पन्न भएका थिए। यसैगरी यलकृत्का पुत्ररत्नका रूपमा हर्षबर्द्धन उत्पन्न भएका थिए भने हर्षबर्द्धनका पुत्ररत्नका रूपमा सहदेव उत्पन्न भएका थिए एवं सहदेवका पुत्ररत्नका रूपमा अदीन उत्पन्न भएका थिए। त्यस्तै अदीनका पुत्ररत्नका रूपमा जयसेन उत्पन्न भएका थिए भने जयसेनका पुत्ररत्नका रूपमा सम्भूति उत्पन्न भएका थिए एवं सम्भूतिका पुत्ररत्नका रूपमा क्षत्रधर्मा उत्पन्न भएका थिए। यसरी क्षत्रवृद्धवंशीय राजाहरूका विषयमा वर्णन गरिएको छ। यसपश्चात् म तिमीलाई नहुषवंशीय राजाहरूका विषयमा बताउनेछु ॥९॥

**इति श्रीविष्णुमहापुराणे चतुर्थांशे नवमोऽध्यायः।**

ॐ

## दशमोऽध्यायः

## अध्याय - १०

### "नहुषवंशवर्णनम् ययातेरूपाख्यानञ्च"

(नहुष वंशको वर्णन तथा ययातीको उपाख्यान)

पराशर उवाच

यति-ययाति-संयाति-आयाति-वियाति-कृतिसंज्ञा नहुषस्य षट् पुत्रा महाबलपराक्रमा बभूवुः। यतिस्तु राज्यं नैच्छत्। ययातिस्तु भूभृदभवत् उशनसश्च दुहितरं देवयानीं शर्मिष्ठाञ्च वार्षपर्वणीमुपयेमे ॥१॥ अत्रानुवंशश्लोको भवति-यदुञ्च तुर्वसुञ्चैव देवयानी व्यजायत। द्रुह्युञ्चानुञ्च पूरुञ्च शर्मिष्ठा वार्षपर्वणी ॥२॥ काव्यशापाच्च अकालेनैव ययातिर्जरामवाप ॥३॥ प्रसन्नशुक्रवचनाच्च जरां सङ्क्रामयितुं ज्येष्ठं पुत्रं यदुमुवाचत्वन्माता-महशापादियमकालेनैव जरा मामुपस्थिता। तामहं तस्यैवानुग्रहाद् भवतः सञ्चारयाम्येकं वर्षसहस्रम्, न तृप्तोऽस्मि विषयेषु, त्वद्वयसा विषयानहं भोक्तुमिच्छामि ॥४॥ नात्र भवता प्रत्याख्यानं कर्त्तव्यमित्युक्तः स नैच्छत् तां जरामादातुम्। तञ्चापि पिता शाशाप, त्वत्प्रसूतिर्न राज्यार्हा भविष्यतीति ॥५॥

**पराशरजीले भन्नुभयो-** नहुषका अत्यन्त बलशाली एवं पराक्रमी छ पुत्ररत्नका रूपमा यति, ययाति, संयाति, आयाति वियाति र कृति उत्पन्न भएका थिए। यतिले राज्यभोग गर्ने चाहनाको परित्याग गरिदिएकाले ययाति राजा भए। ययातिले दैत्यहरूका गुरु शुक्राचार्यकी पुत्री देवयानी र वृषपर्वाकी पुत्री शर्मिष्ठासँग विवाह गरेका थिए ॥१॥ उनीहरूको वंशको वर्णनका लागि निम्न श्लोक अत्यन्त प्रसिद्ध रहेको छ, जसमा भनिएको छ-'देवयानीले आफ्ना पुत्ररत्नका रूपमा यदु र तुर्वसुलाई जन्म दिइन्। यसरी नै वृषपर्वाकी कन्या शर्मिष्ठाले आफ्ना पुत्ररत्नका रूपमा द्रुह्यु, अनु एवं पूरुलाई जन्म दिइन् ॥२॥ ययातिलाई दैत्यहरूका गुरु एवं उनका ससुरा शुक्राचार्यले श्राप दिएका कारणले उनी असमयमा नै अर्थात् उमेरको आधारमा नभएर श्रापका आधारमा अत्यन्त वृद्ध भएका थिए ॥३॥ त्यसपछि प्रसन्न भएका शुक्राचार्यका वचनका आधारमा ययातिले असमयमा नै आफूमा भएको वृद्धावस्थामा परिवर्तन ल्याउनका लागि आफ्ना जेठा छोरा यदुसँग भने-'हे पुत्र! तिम्रा मावली हजुरबुबाको श्रापका प्रभावले मलाई असमयमा नै वृद्धावस्थाले आफ्नो नियन्त्रण पार्‍यो अर्थात् असमयममा नै म वृद्ध भएको छु। यस समयमा उनैको कृपा प्राप्त गरेर नै म यो वृद्धावस्था एक हजार वर्षसम्मका लागि तिमीलाई दिन चाहन्छु। किनकि अहिले म विषयभोगहरूबाट पूर्ण रूपमा तृप्त भएको छैन अर्थात् ममा विषयभोग गर्ने चाहना अझै अत्यन्त प्रबल रहेको छ ॥४॥ यसलाई तिमीले कुनैपनि अवस्थामा अस्वीकार गर्न पाउने छैनौ। राजाले यसरी सम्झाए तापनि यदुले आफ्ना पितामा रहेको वृद्धावस्थालाई ग्रहण गर्ने चाहना राखेनन्। त्यसपछि राजा ययातिले आफ्ना छोरा यदुलाई श्राप दिदैं भने भविष्यमा तिम्रा वंशमा कुनैपनि सन्तान राज्य गर्न योग्य हुने छैनन् अर्थात तिम्रो वंशले राज्य गर्न पाउनेछैन ॥५॥ त्यसपछि राजा

अनन्तरञ्च द्रुह्युतुर्वसुमनुञ्च पृथिवीपतिर्जरा-ग्रहणार्थं स्वयौवनप्रदानाय च चोदयामास। तैरप्येकैकश्येन, प्रत्याख्यातस्तांश्च शशाप। अथ शर्मिष्ठातनयमशेषकनीयांसं पूरुं तथैवाह, स चातिप्रवणमतिः प्रणम्य पितरं सबहुमानो महान् प्रसादोऽयमस्माकमित्युदारमभिधाय जरां प्रतिजग्राह। स्वकीयञ्च यौवनं पित्रे ददौ। सोऽपि नवं यौवनमासाद्य धर्माविरोधेन यथाकामं यथाकालोपपन्नं यथोत्साहं विषयं चचार। सम्यक् च प्रजापालनमकरोत् ॥६॥ विश्वाच्या सहोपभोगं भुक्त्वा कामानामन्तमवा-प्स्यामीत्यनुदिनं तन्मनस्को बभूव ॥७॥ अनुदिनञ्चोपभोगतः कामानतीव रम्यान् मेने ततश्चैवमगायत ॥८॥

ययातिरुवाच

न जातु कामः कामनामुपभोगेन शाम्यति।

हविषा कृष्णावर्त्मेव भूय एवाभिवर्द्धते ॥९॥

ययातिले आफ्ना पुत्रहरू क्रमशः द्रुह्यु, तुर्वसु तथा अनुका समीप अर्थात् नजिकमा गएर उनीहरूसँग उनीहरूको यौवन आफूले ग्रहण गरेर आफ्नो वृद्धावस्था उनीहरूलाई दिने प्रस्ताव राखे, तर तिनीहरूमध्ये कसैले पनि आफ्नो पिताका कुरामा ध्यान दिएनन् अर्थात् राजा ययातिको प्रस्तावलाई अत्यन्त सहज रूपमा अस्विकार गरिदिए। पिताले पनि तिनीहरू सबैलाई श्राप दिदैं भने तिमीहरूका वंशज अर्थात् सन्तानहरू राजपदका लागि अर्थात राज्य गर्नका लागि योग्य हुने छैनन्। त्यसपछि राजा ययातिले सबैभन्दा कान्छा शर्मिष्ठाका पुत्र पूरुका नजिकमा गएर अन्य छोराहरूलाई बताए जसरी नै आफ्नो जिज्ञासा व्यक्त गरे। त्यसपश्चात् अत्यन्त बुद्धिमान् पूरुले आफ्ना पितालाई प्रणाम गर्दै भने तपाईंले ममाथि यो अत्यन्त ठूलो अनुग्रह अर्थात् कृपा गर्नुभयो। यसरी बताइसकेपछि आफ्ना पिताजीमा भएको वृद्धावस्था आफूले ग्रहण गरेर आफ्नो यौवनावस्था पिताजीलाई दिए। राजा ययातिले पनि नवीन यौवनावस्था प्राप्त गरेपछि समयानुसार आफूलाई प्राप्त भएका यथेच्छ विषयहरूको आफ्नो उत्साह अनुसार धर्मानुकूल उपभोग गरे तथा आफ्ना प्रजाहरूको राम्रो किसिमबाट पालन पोषण पनि गरे ॥६॥ त्यसपछि विश्वाची नाम भएको अप्सरासँग विभिन्न किसिमका भोगहरूको उपभोग गर्दै 'ममा उत्पन्न भएको कामनाको अर्थात् विषयहरूको भोग गर्ने चाहनाको अन्त नभएकोले म कामाग्निलाई शान्त गरिदिनेछु' प्रत्येक दिन यसरी विचार गर्दै भोगहरूको उपभोग गर्ने कार्यमा अत्यन्त उत्साहपूर्वक लाग्न थाले अर्थात् त्यसैमा एकाकार भए ॥७॥ यसरी प्रत्येक दिन विषयवासनाको उपभोगमा अत्यन्त आसक्त भएर विषयभोगहरूलाई अत्यन्त मनमोहक एवं आनन्ददायी भएको मनन् गर्न थाले। त्यसपश्चात् उनले आफ्नो आत्मीयभाव यसरी व्यक्त गरे ...॥८॥ **ययातिले भने–** विषयवासनाको भोग गर्ने अभिलाषा तिनीहरूको उपभोग गरेर कहिल्यै शान्त हुन सक्दैन, बरु यो आगोमा हालेको घिउको आहुतिले प्रज्वलित भएको अग्निका जसरी नै अत्यधिक मात्रामा बढिरहेको हुन्छ ॥९॥ यो सम्पूर्ण पृथ्वीमा रहेका धान्य अर्थात् धान, यव अर्थात् जौ, सुवर्ण, पशु एवं स्त्रीहरू जति पनि उपभोग गर्न योग्य वस्तुहरू रहेका छन्, तिनीहरूबाट एउटा व्यक्तिको मात्र पनि कामना

यत् पृथिव्यां व्रीहियवं हिरण्यं पशवः स्त्रियः।

एकस्यापि न पर्याप्तं तदित्यतितृषं त्यजेत् ॥१०॥

यदा न कुरुते भावं सर्वभूतेषु पापकम्।

समदृष्टेस्तदा पुंसः सर्वा एव सुखा दिशः॥११॥

या दुस्त्यजा दुर्मतिभिर्या न जीर्यति जीर्यतः।

तां तृष्णां सन्त्यजन् प्राज्ञः सुखेनैवाभिपूर्यते ॥१२॥

जीर्यन्ति जीर्यतः केशा दन्ता जीर्यन्ति जीर्यतः।

धनाशा जीविताशा च जीर्यतोऽपि न जीर्यति ॥१३॥

पूर्णवर्षसहस्रं मे विषयासक्तचेतसः।

तथाप्यनुदिनं तृष्णा ममैतेष्वेव जायते ॥१४॥

तस्मादेतानहं त्यक्त्वा ब्रह्मण्याधाय मानसम्।

निर्द्वन्द्वो निर्ममो भूत्वा चरिष्यामि मृगैः सह ॥१५॥

पराशर उवाच

पूरोः सकाशादादाय जरां दत्वा च यौनवनम्।

राज्येऽभिषिच्य पूरुञ्च प्रययौ तपसे वनम् ॥१६॥

दिशि दक्षिणपूर्वस्यां तुर्वसुं च समादिशत्।

प्रतीच्याञ्च तथा द्रुह्युं दक्षिणापथतो यदुम् ॥१७॥

उदीच्याञ्च तथैवानुं कृत्वा मण्डलिनो नृपान्

सर्वपृथ्वीपतिं पूरुं सोऽभिषिच्य वनं ययौ ॥१८॥

पूर्ण हुन सक्दैन। यस कुरालाई दृष्टिगत गर्दै बुद्धिमान् पुरुषले यिनीहरूको परित्यागलाई आफ्नो परम कर्तव्य भएको सम्झनु पर्दछ ॥१०॥ जब पुरुषले सम्पूर्ण जीवमात्रमा सम दृष्टिकोण राख्दै कुनै पनि प्राणीका लागि पापमय भावना राख्दैन, त्यस समयमा त्यो समदर्शी पुरुषका लागि सबै दिशाहरू अत्यन्त सुखमय अर्थात् सुखदायक हुन्छन् ॥११॥ दुर्बुद्धि भएका मनुष्यहरूले जेलाई परित्याग गर्न सक्दैनन् र शरीर जीर्ण अर्थात् अत्यन्त वृद्ध भएतापनि जे जीर्ण हुँदैन, त्यो विषयवासनाको उपभोग गर्ने कामनाको परित्याग गर्ने बुद्धिमान् मनुष्य मात्र यथार्थमा परम सुखबाट परिपूर्ण हुन्छ ॥१२॥ वृद्धावस्था लागेपछि मनुष्यको कपाल सेतो हुन्छ, सबै दाँतहरू पुराना भएर झर्दछन्, तर धन प्राप्त गर्ने अभिलाषा र जीवित रहने चाहना जस्तोसुकै अवस्थामा पनि कहिल्यै जीर्ण अर्थात् वृद्ध हुँदैन, त्यो निरन्तर बढिरहेको हुन्छ र यौवनावस्थामा नै रहेको हुन्छ। एक हजार वर्ष पूर्ण भइसक्यो, यस समयमा मेरो मन विषयवासनाको उपभोगमा अत्यन्त आसक्त रह्यो, तथापि प्रत्येक दिन ममा विषयवासनाको उपभोगरूपी तृष्णा अर्थात कामना अत्यधिक मात्रामा बढिरहेको छ। अर्थात् त्यसमा कहिल्यै कमी आउन सक्तेन ॥१५॥ त्यसकारण अब म यो मनुष्य–शरीरलाई त्याग गरेर अर्थात् यसमा उत्पन्न हुने तृष्णा वा कामनाको पूर्ण रूपमा परित्याग गरेर आफ्नो चित्तलाई भगवान्मा मात्र स्थिर गर्दै राग–द्वेषादिबाट मुक्त र ममतारहित भएर वनमा मृगहरूसँग घुम्दछु अर्थात् भ्रमण गर्दछु ॥१६॥ **पराशरजीले भन्नुभयो–** त्यसपछि राजा ययातिले आफ्नापुत्र पूरुबाट आफ्ना वृद्धावस्था फिर्ता लिए एवं उनको यौवनावस्था उनैलाई फिर्ता गरिदिएर पूरुलाई मुख्य शासनकर्ताका रूपमा अर्थात् मुख्य राजगद्दीमा राज्याभिषेक गरिदिएर आफू तपस्या गर्नका लागि जंगलमा गए ॥१६॥ राजा ययातिले दक्षिण पूर्व दिशाको राज्यमा तुर्वसुलाई, पश्चिम दिशाको राज्यमा द्रुह्युलाई दक्षिण दिशाको राज्यमा यदुलाई र उत्तर दिशाको राज्यमा अनुलाई राजा बनाइदिए तथा पूरुलाई सम्पूर्ण पृथ्वीको अधिपतिको रूपमा राज्याभिषेक गरिदिएका थिए ॥१७–१८॥

इति श्रीविष्णुमहापुराणे चुतर्थांशे दशमोऽध्यायः

ॐ

## एकादशोऽध्यायः

## अध्याय – ११

### 'यदुवंशस्य सहस्रहस्ताज्र्जुन चरित्रस्य च वर्णनम्'

(यदुवंशीय सहस्रबाहु अर्जुनको चरित्र वर्णन)

पराशर उवाच

अतः परं ययातेः प्रथमपुत्रस्य यदोर्वंशमहं कथयामि। यत्राशेषलोकनिवसिमनुष्य-सिद्ध-गन्धर्व-यक्ष-राक्षस-गुह्यक-किम्पुरुषाप्सर-उरग-विहग-दैत्य-दानव-देवर्षि-द्विजर्षि-मुमुक्षु भिर्धर्मार्थकाममोक्षार्थिभिस्तत्फललाभाय सदाभिष्टुता-परिच्छेद्यमाहात्म्येनांशेन भगवाननादिनिधनो विष्णुरवततार ॥१॥

अत्र श्लोकः यदोर्वंशं नरः श्रुत्वा सर्वपापैः प्रमुच्यते।
यत्रावतीर्णं विष्ण्वाख्यं परं ब्रह्म निराकृति ॥२॥

सहस्रजित्क्रोष्टु- नल-रघुसंज्ञाश्चत्वारो यदुपुत्रा बभूवुः। सहस्रजित्पुत्रः शतजित्। तस्य हैहय हेहय वेणुहयास्त्रयः पुत्रा बभूवुः। हैहयाद् धर्मनेत्रः, ततः कुन्तिः, कुन्तेः साहञ्जिः, तत्तनयो महिष्मान्, तस्माद् भद्रश्रेण्यः ततो दुर्दमः, तस्माद् धनकः धनकस्य कृतवीर्य-कृताग्नि-कृतवर्म-कृतौजस-श्चत्वारः पुत्राः। कृतवीर्यादर्जुनः सप्तद्वीपपतिर्बाहुसहस्रो जज्ञे। योऽसौ भगवदंशमत्रिकुलप्रसूतं दत्तात्रेयाख्यमाराध्य बाहुसहस्रमधर्मसेवा-निवारणं धर्मेण पृथिवीजयं धर्मतश्चानुपालनमरातिभ्यो-

**पराशरजीले भन्नुभयो**–अब म ययाति राजाका जेठा छोरा यदुको वंशका विषयमा बताउनेछु। जुन वंशमा मनुष्य, सिद्ध, गन्धर्व, यक्ष, राक्षस, गुह्यक अर्थात् कुबेरको ढुकुटीको रक्षा गर्ने देवयोनिमध्येको एकथरी यक्ष जाति, किम्पुरुष अर्थात नीच पुरुष, सर्प, पक्षी, अप्सारा, दैत्य, दानव, देवर्षि, ब्रह्मर्षिहरू कसैले मोक्ष प्राप्तिको कामनाबाट अभिप्रेरित भएर, सकैले धन प्राप्तिको कामनाबाट अभिप्रेरित भएर, कसैले धर्म-प्राप्तिको कामनाबाट अभिप्रेरित भएर जसको सधैं स्तुति एवं पूजा अर्चना गर्ने गर्दछन्; उहाँ अनादि, अनन्त र अव्यय भगवान् श्रीविष्णुले यस यदुवंशमा आफ्नो अत्यन्त प्रभावशाली एवं महत्त्वपूर्ण अंशबाट अवतार लिनुभएको थियो ॥१॥ यदुवंशका सम्बन्धमा यो श्लोक अत्यन्त प्रख्यात रहेको छ। जुन वंशमा श्रीकृष्णका नामबाट निराकार परब्रह्म परमात्माले अवतार लिनुभएको थियो, त्यस यदुवंशको महिमाका विषयमा सुन्नाले मात्र पनि मनुष्य सम्पूर्ण पापहरूबाट सधैंका लागि पूर्ण रूपमा मुक्त हुन्छ ॥२॥ यदुका चार पुत्ररत्नका रूपमा सहस्रजित्, क्रोष्टु, नल र रघु उत्पन्न भएका थिए सहस्रजित्का पुत्ररत्नका रूपमा शतजित् उत्पन्न भएका थिए। शतजित्का तीन पुत्ररत्नका रूपमा हैहय, हेहय र वेणहय उत्पन्न भएका थिए। हैहयका पुत्ररत्नका रूपमा धर्मनेत्र उत्पन्न भएका थिए तथा धर्मनेत्रका पुत्ररत्नका रूपमा कुन्ति उत्पन्न भएका थिए। यसरी नै कुन्तिका पुत्ररत्नका रूपमा साहञ्जि उत्पन्न भएका थिए एवं साहञ्जिका पुत्ररत्नका रूपमा महिष्मान् उत्पन्न भएका थिए जसले माहिष्मतीपुर नाम भएको नगरी बसाएका थिए। महिष्मान्का पुत्ररत्नका

ऽपराजयमखिलजगत्प्रख्यातपुरुषाच्च मृत्युमिइत्येतान् वरानअभिलषितवान् लेभे च। तेनेयमशेषद्वीपवती पृथ्वी सम्यक् परिपालिता। दशयज्ञसहस्राण्य- सावयजत्। तस्य त श्लोकोऽद्यापि गीयते ॥३॥

नूनं न कार्त्तवीर्यस्य गतिं यास्यन्ति पार्थिवाः।
यज्ञैर्दानैस्तपोभिर्वा प्रश्रयेण दमेन च ॥४॥

अनष्टद्रव्यता च तस्य राज्येऽभवत् ॥५॥

एवं पञ्चाशीतिसहस्राण्यब्दानव्याहतारोग्य- श्रीबलपराक्रमो राज्यमकरोत्। माहिष्मत्यां दिग्विजयाभ्यागतो नर्मदाजलावगाहनक्रीडानि- पानमदाकुलेनायत्नेनैव तेनाशेषदेवदैत्यगन्धर्वेश- जयोद्भूतमदावलेपोऽपि रावणः पशुरिव बद्ध्वा स्वनगैरकान्ते स्थापितः॥६॥

रूपमा भद्रश्रेण्य उत्पन्न भएका थिए भने भद्रश्रेण्यका पुत्ररत्नका रूपमा दुर्दम उत्पन्न भएका थिए एवं दुर्दमका पुत्ररत्नका रूपमा धनक उत्पन्न भएका थिए तथा धनकका चार पुत्ररत्नका रूपमा कृतवीर्य, कृताग्नि, कृतवर्मा र कृतौजा उत्पन्न भएका थिए। तिनीहरूमध्ये कृतवीर्यका पुत्ररत्नका रूपमा उत्पन्न भएका अर्जुनका एक हजार हातहरू थिए। उनी सातोटै द्वीपहरूका अधिपपति थिए। सहस्रबाहु अर्थात् एक हजार हात भएका अर्जुनले भगवान्को विशेष अंशका रूपमा अत्रिक कुलमा अवतरित भएका अर्थात् उत्पन्न भएका दत्तात्रेयको उपासना गरेर अधर्माचरणको निवारण, धार्मिक युद्धबाट सम्पूर्ण पृथ्वीमा विजय र धर्मानुसार प्रजाहरूको पालन–पोषण तथा शत्रुहरूबाट अपराजय एवं मेरो मृत्यु त्रिलोकका सबैभन्दा प्रसिद्ध पुरुषबाट मात्र हुन सकोस्' यस किसिमका अनेकौं किसिमका वरदान मागे र प्राप्त पनि गरेका थिए। सहस्रबाहु भएका अर्जुनले सप्तद्वीपबाट सम्पन्न भएकी पृथ्वीको राम्ररी पालन–पोषण तथा दश हजार यज्ञहरूको अनुष्ठान सम्पन्न गरेका थिए। उनका सम्बन्धमा बताइएको एक श्लोक आजसम्म पनि अत्यन्त प्रसिद्ध रहेको छ .......॥३॥ 'यज्ञ , दान, तपस्या, विनम्रता र विद्यामा कार्तवीर्यका पुत्ररत्न सहस्रबाहु भएका अर्जुनसँग बराबरी अन्य कुनै राजाले गर्न सक्दैनन्' ॥४॥ उनको राज्यमा कुनै पनि किसिमको पदार्थ नष्ट हुँदैनथ्यो ॥५॥ यसरी सहस्रबाहु अर्जुनले बल, पराक्रम, आरोग्य र सम्पत्तिलाई पूर्ण रूपमा सुरक्षित राख्दै पचासी हजार वर्षसम्म राज्य गरे। एकदिन जब अत्यधिक मात्रामा मद्यपान गरेका कारण अत्यन्त व्याकुल भएका सहस्रबाहु अर्जुन नर्मदा नदीको पानीमा जलक्रिडा गरिरहेका अर्थात् पौडी खेलिरहेका थिए, त्यस समयमा उनको राजधानी माहिष्मतीपुरीमा दिगिवजयका लागि अर्थात् राजा महाराजाहरूले देशान्तरमा गई आफ्नो मान र प्रतिष्ठा कायम गर्नका लागि र अर्कोलाई जित्ने कामका लागि आएका सबै देवता, दानव गन्धर्व र राजहरूमाथि

यः पञ्चाशीतिवर्षसहस्रोपलक्षणकालावसाने भगवन्नारायणांशेन परशुरामेण उपसंहृतः। तस्य पुत्रशतप्रधानाः पञ्च पुत्र बभूवुः, शूर–शूरसेनवृषण–मधुजयध्वजसंज्ञाः। जयध्वजात् तालजङ्घः पुत्रोऽभवत्। तालजङ्घस्य पुत्रशतमासीत्। येषां ज्येष्ठो वीतिहोत्रः, तथान्यो भरतः भरताद् वृष–सुजातौ च। वृषस्य पुत्रो मधुरभवत्। तस्यापि वृष्णिप्रमुखं पुत्रशतमासीत्। यतो वृष्णिसंज्ञामेतद् गोत्रमवाप। मधुसंज्ञाहेतुश्च मधुरभवत् यादवाश्च यदुमानोपलक्षणात् ॥७॥

विजय प्राप्त गरेको घमण्डले अत्यन्त उन्मत्त भएक रावणले आक्रमण गर्‍यो, त्यस समयमा उनले अनायास रूपमा रावणलाई पशुलाई बाँधे जसरी नै बाँधेर आफ्न नगरीको अत्यन्त सुनसान अर्थात पूर्ण रूपमा एकान्त स्थानमा राखिदिए ॥६॥ यी सहस्रबाहु अर्जुन पचासी हजार वर्षहरू समाप्त भइसकेपछि भगवान् नारायणक अंशावतार परशुरामद्वारा मारिए। यिनका एक स पुत्रहरू थिए जसमध्ये मुख्य रहेका पाँच पुत्रहरूक नाम शूर, शूरसेन, वृषण, मधुध्वज र जयध्वज रहेक थियो। तिनीहरूमध्ये जयध्वजका पुत्ररत्नका रूपम तालजङ्घ उत्पन्न भएका थिए। यी तालजङ्घका ए सय पुत्रहरू थिए, उनीहरूमध्ये वीतिहोत्र र भरत जे थिए। भरतका पुत्ररत्नका रूपमा वृष र सुजात उत्प भएका थिए। वृषका पुत्ररत्नका रूपमा मधु उत्प भएका थिए र मधुका पनि वृष्णि आदि एकसय पुत्रह उत्पन्न भएका थिए। यसैकारणले गर्दा यदु–कुलव नाम वृष्णि भएको हो। मधुका कारणले गर्दा यसव कुलको नाम मधु भयो। यदुका कारणले गर्दा र कुलको नाम यादव भयो।

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे एकादशोऽध्यायः

ॐ

द्वादशोऽध्यायः

अध्याय – १२

## "यदुपुत्रक्रोष्टुवंशकथनम्"

(यदुपुत्र कोष्टुको वंशको वर्णन)

पराशर उवाच

क्रोष्टुश्च यदुपुत्रस्यात्मजो वृजिनीवान्। ततश्च स्वाहिः ततो रुषद्गुः, रुषद्गोश्चित्ररथः तत्तनयः शशबिन्दुश्चतुर्दश–महारत्नेशश्चक्र–वर्त्यभवत्॥१॥ तस्य च शतसहस्र पत्नीनामभवत्। दशलक्षसंख्याश्च पुत्राः। तेषाञ्च पृथुयशाः, पृथुकर्मा, पृथजयः, पृथुदानः पृथुकीर्तिः, पृथुश्रवाः, षट् पुत्राः प्रधानाः। पृथुश्रवसः पुत्रस्तमः तस्मादुशनाः। यो वाजिमेधानां शतमाजहार। तस्य च शितेषुर्नाम पुत्रोऽभूत्, तस्यापि रुक्मकवचः, ततः परावृत्, परावृत्तो रुक्मेषुपृथुरुक्म–ज्यामघ–पालित–हरित–संज्ञाः पञ्चात्मजा बभूवुः। अत्राद्यापि ज्यामघस्य श्लोको गीयते ॥२॥

भार्यावशास्तु ये केचिद् भविष्यन्त्यथवा मृताः।
तेषान्तु ज्यामघः श्रेष्ठः शैव्यापतिरभून्नृपः ॥३॥

अपुत्रा तस्य सा पत्नी शैव्या नाम तथाप्यसौं।
अपत्यकामोऽपि भयान्नान्यां भार्यामविन्दत ॥४॥

स त्वेकदातिप्रभूत–गज–तुरग–समर्देनातिदारुणे महाहवे युध्यमानः सकलमेवारातिचक्रमजयत्।

पराशरजीले भन्नुभयो– यदुका पुत्र क्रोष्टुका पुत्ररत्नका रूपमा वृजिनीवान् उत्पन्न भएका थिए। वृजिनीवान्का पुत्ररत्नका रूपमा स्वाहि उत्पन्न भएका थिए भने स्वाहिका पुत्ररत्नका रूपमा रुषद्गु उत्पन्न भएको थिए तथा रुषद्गुका पुत्ररत्नका रूपमा चित्ररथ उत्पन्न भएका थिए एवं चित्ररथका पुत्ररत्नका रूपमा शशबिन्दु उत्पन्न भएका थिए। यी शशबिन्दुसँग चौध रत्न विद्यमान थिए र यिनी चक्रवर्ती राजा थिए ॥१॥ शशबिन्दुका एक लाख पत्नीहरू र दश लाख पुत्रहरू थिए। ती पुत्रहरूमध्ये पृथुयशा, पृथुकर्मा, पृथुजय, पृथुदान, पृथुकीर्ति र पृथुश्रवा यी छ वटा मुख्य थिए। पृथुश्रवाका पुत्ररत्नका रूपमा तम उत्पन्न भएका थिए भने तमका पुत्ररत्नका रूपमा उशना उत्पन्न भएका थिए। उशनाले एक सयवटा अश्वमेघ यज्ञ गरेका थिए। उशनाका पुत्ररत्नका रूपमा शितेषु उत्पन्न भएका थिए। शितेषुका पुत्ररत्नका रूपमा रुक्मकवच उत्पन्न भएका थिए भने रुक्मकवचका पुत्ररत्नका रूपमा परावृत् उत्पन्न भएका थिए। यसरी परावृत्का पाँच पुत्ररत्नका रूपमा रुक्मेषु, पृथुरुक्म, ज्यामघ, पालित र हरित उत्पन्न भएका थिए। तिनीहरूमध्ये ज्यामघका विषयमा यस प्रकारको श्लोक रहेको बताइने गरिन्छ ॥२॥ जुन सांसारिक मनुष्य स्त्रीमा अत्यन्त आसक्त अर्थात् स्त्रीलम्पट भएर मर्दछ, अगाडि यस्तो स्वभाव भएको जो उत्पन्न हुन्छ, तिनीहरू सबैमा शैव्याका पति राजा ज्यामघ सर्वोत्कृष्ट अर्थात् सबैभन्दा उत्तम छन् ॥३॥ राजा ज्यामघले आफ्नी पत्नी शैव्याबाट कुनै सन्तान नभए तापनि तथा आफूमा सन्तान उत्पन्न गराउने कामना तीव्र भए तापनि शैव्याका भयले गर्दा अन्य स्त्रीसँग विवाह गर्न सकेन्न् ॥४॥ ती राजा ज्यामघले एकदिन अत्यधिक संख्यामा भएको घोडा,

तच्चारिचक्रमपास्तपुत्र–कलत्रबन्धुबलकोशं स्वमधिष्ठानं परित्यज्य दिशः प्रविद्रुतम् ॥५॥ तस्मिश्चं विद्रुतेऽतित्रासल्लोलायतलोचनयुगलं त्राहि तात भ्रातरित्याकुलत विलापविधुरंराज–कन्यारत्नमद्राक्षीत् ॥६॥ तद्दर्शनाच्च तस्यामनुरा–गानुगतान्तरात्मा स भूपोऽचिन्तयत् ॥७॥

साध्विदं ममापत्यविरहितस्य बन्ध्याभर्तुः साम्प्रतं विधिनापत्यकारणं कन्यारत्नमुपपादितम्, तदेतत् समुद्वहामि । अथ चैनां स्यन्दनमारोप्य स्वमधिष्ठानं नयामि ॥८॥ तयैव देव्याहमनुज्ञातः समुद्वक्ष्यामीति । अथैनां रथमारोप्य स्वनगरमागच्छत् ॥९॥

विजयिनञ्च राजानमशेषपौरभृत्यपरि–जनामात्यसमवेता शैव्या द्रष्टुमधिष्ठान–द्वारमागता ॥१०॥ सा च अवलोक्य राज्ञः सव्यपार्श्ववर्त्तिनीं कन्यामीषदुद्भूता–मर्षस्फुरदधरपल्लवा राजानमवोचत्–अतिचपलचित्तात्र स्यन्दने केयमारोपिता इति । असावप्यनालोचितोत्तर–वचनोऽतिभयात् तामाह, स्नुषा ममेयमिति ॥११॥ अथैनं शैव्योवाच–

हात्ती सम्मिलित अत्यन्त भयानक युद्ध गर्दाका अवस्थामा आफ्ना सबै शत्रुहरूको पूर्ण रूपमा विनाश गरिदिए । त्यसपछि राजा ज्यामघबाट पराजित भएका उनीहसँग शत्रुत्वयुक्त भाव राख्ने राजाहरू पुत्र, स्त्री, बन्धु र सम्पत्तिको पूर्ण रूपमा परित्याग गरेर आ–आफ्नो स्थान छाडेर विभिन्न दिशाहरूतिर भागेर गए ॥५॥ उनीहरू सबै भागेर गइसकेपछि राजा ज्यामघले एक राज्यकन्यालाई देखे, जुन अत्यन्त भयभीत भएकाले व्याकुल हुँदै ठूल ठूला आँखाहरूले हेर्दै 'हे पिताजी, हे माताजी, हे दाजुभाई मेरो रक्षा गर, रक्षा गर' यसरी अत्यत व्याकुलतापूर्वक विलाप गरिरहेकी ती कन्या परमसुन्दरी देखिएकी थिइन् ॥६॥ यस्ती कन्यालाई देखेपछि ती कन्याप्रति राजाको चित्त पूर्ण रूपमा आकर्षित भएकाले उनले चिन्तन गर्न थाले ॥७॥ म सन्तान नभएको र बन्ध्यापति अर्थात् बाँझी आइमाईको पतिका रूपमा रहेको छु। यसैले यस समयमा विधाताले ममाथि कृपा गरेर सन्तान उत्पत्तिका लागि नै यी कन्यारत्नलाई यहाँ पठाइदिनु भएको हो। यसकारण मैले यिनीसँग विवाह गर्नु पर्दछ। यस्तो निश्चय गरेपपछि उनले सोचे ती कन्यालाई आफ्नै रथमा राखेर आफ्नो निवासस्थानमा लिएर जान्छु ॥८॥ त्यसपछि त्यहाँ देवी शैव्याको अनुमति लिएर यी कन्यासँग विवाह गर्दछु। यस प्रकारको विचार उत्पन्न भएपश्चात् राजाले ती कन्यालाई आफ्नै रथमा राखेर आफ्नो नगरतिर प्रस्थान गरे ॥९॥ त्यहाँ विजयी भएर फर्किएका राजाको दर्शन गर्नका लागि देवी शैव्या सबै नगरवासी, सेवक, बन्धु, बान्धवहरू र मन्त्रीहरूसहित नगर प्रवेश गर्ने ढोकामा आएकी थिइन् ॥१०॥ त्यसपछि देवी शैव्याले राजाको वायाँतिर एउटी अत्यन्त सुन्दर कन्या बसेको देखेपछि तत्कालै उत्पन्न भएको क्रोधका कारणले आफ्ना ओठहरू केही राता र कांपिरहेका अवस्थामा उनले राजासँग भनिन्– 'हे अत्यन्त चञ्चलचित्त! तिमीले रथमा कसलाई बसार ल्याइरहेका छौ ।' त्य समयमा राजा अत्यन्त भयभीत भएका कारणले गर्दा परिमाणका विषयमा ध्यान नपुऱ्याई अत्यन्त हडबडाएर भने–'यिनी हाम्री पुत्रबधू अर्थात छोराकी पत्नी हुन् ।'॥११॥ त्यसपछि देवी

नाहं प्रसूता पुत्रेण नान्या पत्न्यभवत् तव ।

स्नुषासम्बन्धवाच्यैषा कतमेन सुतेन ते ॥१२॥

इत्यात्मेर्ष्याकोप–कलुषित–वचनमुषितविवेकतया

दुरुक्तपरिहारार्थमिदमवनीपतिराह– ॥१३॥

यस्ते जनिष्यत्यात्मजः, तस्येयमनागतस्यैव भार्या

निरूपिता । इत्याकर्ण्योद्भूतमृदुहासा तथेत्याह

प्रविवेश च राज्ञा सहाधिष्ठानमिति ॥१४॥

अनन्तरञ्चातिशुद्धलग्नहोरांशकावयवोक्तकृत–

पुत्रजन्मालापगुणाद् वयसः परिणाममुपगतापि शैव्या

स्वल्पैरेवाहोभिर्गर्भमवाप ॥१५॥

कालेन च पुत्रमजीजनत् । तस्य च विदर्भ इति पिता

नाम चक्रे । स च तां स्नुषामुपयेमे ॥१६॥

तस्याञ्चासौ क्रथ–कौशिकसंज्ञौ पुत्रावजनयत् ।

पुनश्च तृतीयं रोमपादसंज्ञं कुमारमजीजनत् ।

रोमपादाद् बभ्रुः, बभ्रोः पुत्रो धृतिः । कौशिकस्यापि

चेदिः पुत्रोऽभूत्, यस्य सन्ततौ चैद्या भूपालाः ।

क्रथस्य स्नुषापुत्रस्य पुत्रः कुन्तिरभवत् ॥१७॥

शैव्याले राजा ज्यामघसँग भनिन्–'मबाट त कुनै पुत्र जन्मिएका छैन् र आजसम्म तपाईंले अर्को विवाह पनि गर्नुभएको छैन । यस्तो अवस्थामा तपाईंले कुन पुत्रलाई आधार मानेर यी कन्यालाई हाम्री बुहारी बताउनुभएको हो ? ॥१२॥ यसरी आफूप्रति देवी शैव्यले प्रयोग गरेका अत्यन्त ईर्ष्या र क्रोधबाट सम्पन्न भएका वचनहरूका प्रभावले गर्दा आफ्नो सद्बुद्धि गुमाएका राजाले अत्यन्त भयभीत अवस्थामा बताइएका यो सम्बन्ध नभएको कुराको द्विविधा हटाउनका लागि रानी शैव्यासँग भने... ॥१३॥ 'भविष्यमा तिमीबाट जुन उत्पन्न हुनेवाला छ, त्यो भावी पुत्रका लागि मैले पहिलादेखि नै यी कन्यालाई उसकी भार्या अर्थात् पत्नी बनाइदिने निश्चय गरेको छु ।' राजाको यस्तो कुरा सुनिसकेपछि रानी शैव्याले मन्द मुस्कानसँगै भनिन्–अत्यन्त उत्तम; यस्तै हुनेछ । यसपछि शैव्याले राजासँग नगरमा प्रवेश गरिन् ॥१४॥ त्यसपछि त्यस समयमा राजा र शैव्यका बीचमा भएको यो पुत्रको उत्पत्तिसँग सम्बन्धित कुराकानी विशुद्ध लग्न होरांशक आदि अवयवहरूबाट सिद्ध भएको थियो । त्यसकारण सन्तानोत्पान गर्ने अवस्था बितिसकेको भए तापनि केही दिनपछि रानी शैव्या गर्भवती भइन् ॥१५॥ समय पूर्ण भइसकेपछि देवी शैव्याका गर्भबाट पुत्र उत्पन्न भए । पिता ज्यामघले ती पुत्रको नाम विदर्भ राखिदिए । त्यसपछि तिनै विदर्भले तिनै राजकन्यासँग विवाह गरे ॥१६॥ विदर्भले ती राज्यकन्याका गर्भबाट क्रथ र कौशिक नाम भएका दुई पुत्र उत्पन्न गराए । त्यसपछि फेरि रोमपाद नाम भएका अर्का एक पुत्र उत्पन्न भए । रोमपादका पुत्ररत्नका रूपमा बभ्रु उत्पन्न भए भने बभ्रुका पुत्ररत्नका रूपमा धृति उत्पन्न भए । कौशिकका पनि पुत्ररत्नका रूपमा चेदि उत्पन्न भए । तिनै चेदिका वंशमा चैद्य अर्थात् शिशुपाल आदि राजाहरूले जन्म लिए । ज्यामघका नाति क्रथका पुत्ररत्नका रूपमा कुन्ति उत्पन्न भए ॥१७॥ कुन्तिका पुत्ररत्नका रूपमा वृष्णि उत्पन्न भए भने वृष्णिका पुत्ररत्नका रूपमा निवृत्ति उत्पन्न भए । यसरी नै निवृत्तिका पुत्ररत्नका रूपमा दशार्ह

ार्वृष्णिः, वृष्णेर्निवृत्तिः, निर्वत्तेर्दशार्हः ततश्च

ा, तस्मादपि जीमूतः, तस्यापि वंशकृतिः, ततो

ारथः, तस्माद्नवरथः, ततश्च दशरथः, तस्य

ुनिः, तत्तनयः करम्भिः,

म्भेर्देवरातोऽभवत्। तस्माद् देवक्षत्रः, तस्य

ः, मधोरनवरथः, अनवरथात् कुरुवत्सः,

ानुरथः, ततः पुरुहोत्रो जज्ञे। ततश्च अंशः, ततश्च

ातः सत्वतादेते सात्वताः ॥१८॥

तां ज्यामघसन्ततिं सम्यक् श्रद्धासमन्वितः

ा सर्वपापैः, प्रमुच्यते ॥१९॥

उत्पन्न भए भने दशार्हका पुत्ररत्नका रूपमा व्योमा उत्पन्न भए तथा व्योमाका पुत्ररत्नका रूपमा जीमूत उत्पन्न भए एवं जीमूतका पुत्ररत्नका रूपमा वंशकृति उत्पन्न भए। यसैगरी वंशकृतिका पुत्ररत्नका रूपमा भीमरथ उत्पन्न भए भने भीमरथका पुत्ररत्नका रूपमा नवरथ उत्पन्न भए तथा नवरथका पुत्ररत्नका रूपमा दशरथ उत्पन्न भए एवं दशरथका पुत्ररत्नका रूपमा शकुनि उत्पन्न भए। यसरी नै शकुनिका पुत्ररत्नका रूपमा करम्भि उत्पन्न भए भने करम्भिका पुत्ररत्नका रूपमा देवरात उत्पन्न भए तथा देवरातका पुत्ररत्नका रूपमा देवक्षत्र उत्पन्न भए र देवक्षत्रका पुत्ररत्नका रूपमा मधु उत्पन्न भएका थिए। मधुका पुत्ररत्नका रूपमा अनवरथ उत्पन्न भएका थिए भने अनवरथका पुत्ररत्नका रूपमा कुरुवत्स उत्पन्न भएका थिए। कुरुवत्सका पुत्ररत्नका रूपमा अनुरथ उत्पन्न भएका थिए भने अनुरथका पुत्ररत्नका रूपमा पुरुहोत्र उत्पन्न भएका थिए। पुरुहोत्रका पुत्ररत्नका रूपमा अंश उत्पन्न भएका थिए भने अंशका पुत्ररत्नका रूपमा सत्वत उत्पन्न भएका थिए। यिनै सत्वतबाट सात्ववंशको प्रादुर्भाव भएको हो ॥१८॥ जुन मनुष्यले यस ज्यामघवंशको वर्णनका विषयमा अत्यन्त श्रद्धावूर्वक सुन्दछ, त्यो सबै पापहरूबाट पूर्ण रूपमा मुक्त हुन्छ।

## इति श्रीविष्णुमहापुराणे चतुर्थांशे द्वादशोऽध्यायः

ॐ

## त्रयोदशोऽध्यायः

## अध्याय – १३

### "सत्वपुत्राणां वर्णनम्, स्यमन्तकमणिवृत्तान्तकथनञ्च"

(सत्वका पुत्रहरूको वर्णन तथा स्यमन्तकमणिको कथा)

पराशर उवाच

**भजिन–भजमान–दिव्यान्धक–देववृध–महाभोजवृष्णिसंज्ञाः सत्वतस्य पुत्रा बभूवुः ॥१॥ भजमानस्य निमि–वृकण–वृष्णयः, तथान्ये तद्वैमात्राः शतजित् सहस्राजिद्–अयुतायुतजित् संज्ञा स्त्रयः ॥२॥ देववृधस्यापि बभ्रुः पुत्रोऽभूत् तस्य च अयं श्लोको गीयते ॥३॥ यथैव श्रृणुमो दूरात् सम्पश्यामस्तथान्तिकात्। बभ्रुः श्रेष्ठो मनुष्याणां दैवैर्देववृधः समः ॥४॥ पुरुषाः षट् च षष्टिश्च षट् सहस्राणि चाष्टच । येऽमृतत्वमनुप्राप्ता बभ्रोर्देववृधादपि ॥५॥ महाभोजस्त्वतिधर्मात्मा। तस्यान्वये भोजा मृत्तिकावरपुरनिवासिनी मार्त्तिकावरा बभूवुः ॥६॥ वृष्णेः सुमित्रो युधाजिच्च पुत्रोऽभवत्। ततश्चानमित्रा ॥७॥ अनमित्रान्निघ्नः, निघ्नस्य प्रसेन–सत्राजितौ। तस्य च सत्राजितो भगवानदित्यः सखाभवत् ॥८॥ एकदा त्वम्भोधेस्तीरसंश्रयः सूर्यं सत्राजित् तुष्टाव।**

**पराशरजीले भन्नुभयो**– सत्वतका पुत्ररत्नका रूपमा जो जो उत्पन्न भएका थिए, तिनीहरूको नाम भजिन, भजमान, दिव्य, अन्धक, देववृध, महाभोज र वृष्णि रहेको थियो ॥१॥ भजमानका तीन पुत्ररत्नका रूपमा क्रमशः निमि, वृकण र वृष्णि उत्पन्न भएका थिए। यसैगरी यिनका सौतेनी आमातिरका भाइ शतजित्, सहस्राजित् एवं अयुताजित् रहेका थिए ॥२॥ देववृधका पुत्ररत्नका रूपमा बभ्रु उत्पन्न भएका थिए। यिनै बभ्रुका सम्बन्धमा निम्नानुसारको श्लोक बताइने गरिएको छ ॥३॥ हामीले जे जस्तो सुन्दछौं, नजिकमा गएर हेर्दा त्यस्तै पाउँछौं। यथार्थमा मनुष्यहरूमा ब्रभु अत्यन्त श्रेष्ठ छन् र देववृध त देवताहरूका समान रहेका छन् अर्थात् देवताहरूकै स्वरूप हुन् ॥४॥ ती देववृध र बभ्रुबाट प्रवर्द्धन गरिएको मार्गको अवलम्बन गरेर अर्थात् उनीहरूद्वारा बताइएको उपदेशको अनुसरण गरेर छ हजार चौहत्तर मनुष्यहरूले परमपद प्राप्त गरेका थिए ॥५॥ राजा महाभोज अत्यन्त धर्मात्मा थिए। उनका वंशमा अर्थात् सन्तानमा भोज र मार्तिकावर जस्ता राजाहरू उत्पन्न भएका थिए ॥६॥ वृष्णिका दुई पुत्ररत्नका रूपमा सुमित्र र युधाजित् उत्पन्न भएका थिए। तिनीहरूमध्ये सुमित्रका पुत्ररत्नका रूपमा अनमित्र उत्पन्न भएका थिए ॥७॥ अनमित्रका पुत्ररत्नका रूपमा निध्न उत्पन्न भएका थिए। यसरी नै निघ्नका दुई पुत्ररत्नका रूपमा प्रसेन र सत्राजित् उत्पन्न भएका थिए। भगवान् श्रीसूर्यनारायण निघ्नका पुत्र सत्राजित्का मित्र थिए ॥८॥ एकदिन सत्राजित्ले समुद्रका किनारमा बसेर भगवान श्रीसूर्यनारायणको स्तुति गरे। यथार्थमा तन्मय भएर सत्राजित्ले प्रार्थना गरेपछि भगवान्

तन्मनस्कतया च भास्वानभिष्टूयमानोऽग्रतस्तस्य तस्थौ, अस्पष्टमूर्तिधरं चैनमालोक्य सत्राजित् सूर्यमाह–यथैव व्योम्नि त्वां वह्निपिण्डोपममहमपश्यं तथैवाद्याग्रतो गतमप्यत्र न किञ्चिद्भवता प्रसादीकृतं विशेषमुपलक्षयामि ॥९॥ इत्येवमुक्ते (भगवता) सूर्येण निजकण्ठादुन्मुच्य स्यमन्तकनामा मणिरवतार्य एकान्ते न्यस्तः, ततस्तमाताम्रोज्ज्वलह्रस्ववपुषम् ईषदापिङ्गलनयनमादित्यमद्राक्षीत्। कृतप्रणिपातस्तवादिकञ्च सत्राजितमाह भगवान्–वरमस्मत्तोऽभिमतं वृणीष्वेति। स च तदेव मणिरत्नमयाचत। स चापि तस्मै तद् दत्त्वा वियति स्वं धिष्ण्यमारुरोह ॥१०॥ सत्राजितोऽप्यमलमणिरत्नसनाथकण्ठतया सूर्य इव तेजोभिरशेषदिगन्तराण्युद्भासयन् द्वारकां विवेश ॥११॥ द्वारकावासिजनपदस्तु तमायान्तमवेक्ष्य भगवन्तमनादिपुरुषं पुरुषोत्तममवनिभारावतारणायांशेन मानुषरूपधारिणं प्रणिपत्याह–भगवन्! भगवन्तमयं नूनं द्रष्टुमायात्यादित्यः इत्याकर्ण्य

आदित्यनारायण उनका अगाडि प्रकट हुनुभयो। त्यसपछि मूर्तस्वरूप धारण गर्नुभएका भगवान् श्रीसूर्यनारायणलाई आफ्ना अगाडि प्रकट हुनुभएको देखेर सत्राजित्ले भने–जसरी हजुरलाई मैले आकाशमा आगाको डल्लो जस्तै अत्यन्त तातो स्वरूपमा देख्दछु, यहाँ मेरो नजिकमा प्रकट हुँदा पनि त्यस्तै देखिरहेको छु। हजुर यहाँ प्रत्यक्ष रूपमा प्रकट हुँदा पनि मैले हजुरको प्रसादस्वरूप विशेष लक्षण केही पनि देखिँन' ॥९॥ सत्राजित्ले यसो भनिसकेपछि भगवान् श्रीसूर्यनारायणले आफ्नो घाँटीमा रहेको स्यमन्तक नाम भएको मणि निकालेर अलग स्थानमा राखिदिनुभयो। यसपछि सत्रजित्ले भगवान् श्रीसूर्यनारायणलाई यथार्थ रूपमा देखे। उहाँको आँखा केही पहेंलो रङ भएका थिए, उहाँको शरीर केही मात्रामा ताम्रवर्ण भएको र होचो किसिमको थियो। त्यसपछि अत्यन्त आदरपूर्वक प्रणाम गरेर सत्राजित्ले प्रार्थना गरिसकेपछि भगवान् श्रीसूर्यनारायणले भन्नुभयो–'तिमी आफ्नो चाहना अनुसारको वरदान माग।' त्यसपछि सत्राजित्ले स्यमन्तक मणि पाउने मनसाय व्यक्त गरे। भगवान् श्रीसूर्यनारायणले सत्राजित्लाई स्यमन्तक मणि दिनुभएर आकाशमा आफ्नो स्थानमा जानुभयो ॥१०॥ त्यसपछि सत्राजित् आफ्नो घाँटीमा त्यो निर्मल स्यमन्तक मणि धारण गरेर सूर्यनारायणका समान देदीप्यमान हुँदै तथा सम्पूर्ण दिशाहरूलाई प्रकाशमय गराउँदै द्वारकामा पुगे ॥११॥ सत्राजित्लाई द्वारकामा प्रवेश गरिरहेको देखेर द्वारकामा निवास गर्ने मनुष्यहरूले पृथ्वीको भार हरण गर्नका लागि अर्थात् पृथ्वीमा भइरहेको अधर्मको विनाश गरेर धर्मको स्थापना गर्नका लागि आफ्नो अंशबाट मनुष्यका रूपमा अवतार लिनुभएका अनादि र अव्यय भगवान् पुरुषोत्तलाई भने–हे भगवान्! निश्चित रूपमा भगवान् श्रीसूर्यनारायण भगवत्स्वरूप हजुरको दर्शन गर्नका लागि आइरहेका हुनुपर्दछ। यस किसिमको कुरा सुनेर भगवान्ले मुस्कुराउँदै भन्नुभयो–त्यो सूर्यनारायण नभएर सूर्यनारायणद्वारा दिइएको स्यमन्तक मणि लगाएर सत्राजित् आइरहेको छ। तिनीहरू

प्रहस्य च तानाह भगवान्–नायमादित्यः, सत्राजिदयमादित्यदत्तं स्यमन्तकाख्यं महामणिं बिभ्रदत्रोपयाति, तदेनं विश्रब्धाः पश्यत, इत्युक्तास्ते ययुः॥१२॥ स च तं स्यमन्तकाख्यं महामणिमात्मनिवेशने चक्रे॥१३॥ प्रतिदिनञ्च तन्मणिरत्नप्रवरमष्टौ कनकभारान् स्रवति॥१४॥ तत्प्रभावाच्च सकलस्यैव राष्ट्रस्योपसर्गा अनावृष्टिव्यालाग्निचौरदुर्भिक्षादिभयं न भवति॥१५॥ अच्युतोऽपि तद्रत्नमुग्रसेनस्य भूपतेर्योग्यमेतदिति लिप्साञ्चक्रे, गोत्रभेदभयाच्च शक्तोऽपि न जहार॥१६॥ सत्राजिदप्यच्युतो मामेतद् याचिष्यतीत्यवगतरत्नलोभः स्वभ्रात्रे प्रसेनाय तद्रत्नं दत्तवान्॥१७॥ तच्च शुचिना ध्रियमाणमशेषसुवर्णस्रावादिकं गुणमुत्पादयति, अन्यथा य एव धारयति, तमेव हन्तीति। असावपि प्रसेनः स्यमन्तकेन कण्ठासक्तेनाश्वमारुह्याटव्यां मृगयामगच्छत्। तत्र च सिंहाद् वधमवाप। साश्वञ्च तं निहत्य सिंहोऽप्यमलमणिरत्न–

विश्वस्त भएर त्यसलाई हेर। भगवान्ले यसरी बताइसकेपछि द्वारकानिवासीले त्यसरी नै हेर्न थाले॥१२॥ त्यसपछि सत्राजित्ले त्यो अत्यन्त बहुमूल्य स्यमन्तक नाम भएको मणिलाई आफ्नो घरमा राखिदिए॥१३॥ त्यो सर्वोत्कृष्ट स्यमन्तक नाम भएको मणिरत्नले आफूमा रहेको विशेष गुण अनुसार प्रत्येक दिन आठ मासा सुन उत्पन्न गराउँदथ्यो॥१४॥ त्यो स्यमन्तक मणिरत्नका प्रभावले सम्पूर्ण राज्यमा रोग–व्याधि, अनावृष्टि अर्थात अनिकाल, हिंस्रक जन्तु, सर्प, अग्नि तथा चोर आदिको भय उत्पन्न हुन सक्दैनथ्यो॥१५॥ एकदिन भगवान् श्रीकृष्णले मनन गर्नुभयो। यो स्यमन्तक नाम भएको महामणि महाराज उग्रसेनसँग रहन उचित हुन्छ। यस किसिमको विचारानुसार त्यो मणि प्राप्त गर्ने चाहना गर्नुभयो। तर त्यो मणि प्राप्त गर्न सक्ने सामर्थ्य आफूमा भएतापनि बन्धु वान्धवकाबीचमा विद्रोह उत्पन्न हुने भयले गर्दा उहाँलाई त्यो मणि लिनु भएन॥१६॥ सत्राजित्ले भगवान् श्रीकृष्णमा यो मणि प्राप्त गर्ने चाहना उत्पन्न भएको छ; त्यसैले पछि उहाँले माग्न सक्नुहुन्छ भन्ने विचार गरेर त्यो स्यमन्तक मणि आफ्नो भाइ प्रसेनलाई दियो॥१७॥ त्यस महामणिमा विद्यमान भएको गुणका अनुसार पूर्ण रूपमा पवित्र भएर धारण गर्दाका अवस्थामा त्यसले सुवर्ण उत्पन्न गराउँदथ्यो। तर अशुद्ध भएका अवस्थामा त्यसले धारण गर्नेको मृत्यु गराइदिन्थ्यो। एकदिन प्रसेन त्यो स्यमन्तक मणि आफ्नो घाँटीमा धारण गरेर तथा घोडामा सवार भएर मृगको सिकार खेल्का लागि जंगलमा गए। त्यहाँ एउटा सिंहले उनको हत्या गरिदियो अर्थात् उनलाई माऱ्यो। घोडासमेत प्रसेनलाई मारेर त्यो सिंह स्यमन्तक नाम भएको महामणि लिएर भाग्नका लागि तयार भयो। त्यसै समयमा ऋक्षराज अर्थात ब्रह्माका आँसुबाट उत्पन्न भएका एक बाँदर जातिका राजा, जुन दिव्य पोखरीमा स्नान गर्दा सुन्दरी बाँदर्नी भए। तिनलाई देख्दा इन्द्रको वीर्य चुहेर तिनको कपालमा पर्दा बाली उत्पन्न भए। फेरि ती अत्यन्त सुन्दरी बाँदर्नीलाई देख्दा सूर्यको वीर्य ती बाँदर्नीको घाँटीमा पर्दा सुग्रीवको उत्पत्ति

मास्याग्रेणादाय गन्तुमुद्यतः ऋक्षाधिपतिना जाम्बवता दृष्ट्वे घातितश्च। जाम्बवानप्यमलं तन्मणिरत्नमादाय स्वबिलं प्रविवेश, सुकुमारकसंज्ञाय च बालकाय क्रीडनकमकरोत् ॥१८॥ अनागच्छति च तस्मिन् प्रसेने कृष्णो मणिरत्नमभिलषितवान् न च प्राप्तवान्, नूनमेतदस्य कर्म, नान्येन प्रसेनो हन्यत इत्यखिल एव यदुलोकः परस्परं कर्णाकर्ण्यकथयत् ॥१९॥

विदितलोकापवादवृत्तान्तश्च भगवान् यदुसैन्यपरिवार वृतः प्रसेनाश्वपदवीमनुससार, ददर्श चाश्वसमेतं प्रसेनं निहतं सिंहेन। अखिलजनपदमध्ये सिंहपददर्शन–कृतपरिशुद्धिः सिंहपदमनुससार ॥२०॥

ऋक्षविनिहतञ्च सिंहमप्यल्पे भूमिभागे दृष्ट्वा ततश्च तद्रत्नगौरवादृक्षस्यापि पदान्यनुययौ। गिरितटे च सकलमेव यदुसैन्यमवस्थाप्य तत् पदानुसारी ऋक्षबिलं प्रविवेश। अर्ध प्रविष्टश्च धात्र्याः सुकुमारकमुल्लापयन्त्या वाणीं शुश्राव ॥२१॥

सिंहः प्रसेनमवधीत् सिंहो जाम्बवता हतः।
सुकुमारक! मा रोदीस्तव ह्येष स्यमन्तकः ॥२२॥

इत्याकर्ण्य लब्धस्यमन्तकोदन्तोऽन्तः प्रविष्टः कुमार–क्रीडनकीकृतञ्च धात्रीहस्ते तेजोभिर्जाज्विल्यमानं स्यमन्तकं ददर्श ॥२३॥

भयो। यस प्रकारका जाम्बवान् अर्थात् ब्रह्माले हाई गर्दा मुखबाट निस्केका भालुहरूका राजाले देखेर त्यो सिंहलाई मारिदिए। त्यसपछि जाम्बवान्ले त्यो अत्यन्त सुन्दर मणि लिएर आफ्नो गुफामा प्रवेश गरे तथा आफ्ना सुकुमार नाम भएका बालकलाई खेल्नका लागि त्यो स्यमन्तक मणि दिए ॥१८॥ प्रसेन जंगलबाट फर्किएर नआएपछि सम्पूर्ण यदुकुलमा आपसमा कानेखुसी हुन थाल्यो। उनीहरूको मान्यता अनुसार भगवान् श्रीकृष्णले पनि यो स्यमन्तक मणि प्राप्त गर्न चाहेका थिए, तर उनको त्यो मणि प्राप्त गर्न सकेनन्। यसैले प्रसेन हत्या निश्चित रूपमा कृष्णले नै गरेको हुनु पर्दछ, अर्थात् यो काम श्रीकृष्णकै हुनुपर्दछ, अन्य कसैको होइन ॥१९॥ त्यसपछि भगवान् श्रीकृष्ण पनि लोकापवादको वृत्तान्त सुनेपछि यादवसेनाका साथमा प्रसेनको घोडाको पदचिह्नको अनुगमन अर्थात् निरीक्षण गर्न थाल्नुभयो। पछि घोडासहित प्रसेनलाई सिंहले मारेको देखेर सबैले निश्चय गरे। यो कार्य भगवान् श्रीकृष्णको होइन। त्यसपछि भगवान् श्रीकृष्ण पनि सिंहको पदचिन्ह देखेर विशुद्ध भावपूर्वक त्यो सिंहको पदचिन्ह पछ्याउँदै अगाडि बढ्नुभयो ॥२०॥ त्यसपश्चात् केही पर गएपछि उनीहरूले ऋक्षराजद्वारा मारिएको सिंहलाई देखे। तर त्यो रत्नको धेरै महत्व भएकाले उनीहरूले ऋक्षराज जाम्बवान्का पदचिन्हहरू पछ्याउन थाले। त्यसपछि उहाँले एउटा पर्वतका नजिकमा सम्पूर्ण यादवसेनालाई राखेर ऋक्षराजका पदचिन्ह पछ्याउँदै त्यस ऋक्षराजको गुफाभित्र प्रवेश गर्नुभयो। त्यस गुफाभित्र आधामात्र प्रवेश गर्दागर्दै भगवान् श्रीकृष्णले एक सुन्दर बालकलाई प्रलोभन देखाउनका लागि कुनै धात्री अर्थात् धाईले यसरी भनिरहेको सुन्नुभयो ॥२१॥ सिंहले प्रसेनको हत्या गऱ्यो। जाम्बवान्ले त्यस सिंहको सर्वनाश गरिदिए। त्यसकारण हे सुकुमार! तिमी यसरी नरोऊ। किनकि अब यो स्यमन्तक मणि निश्चित रूपमा तिम्रो मात्र हो ॥२२॥ यस प्रकारको कुराकानी सुनेपछि स्यमन्तक मणि त्यहीं भएको निश्चित भएपछि भगवान् श्रीकृष्णले गुफाभित्र पसेपछि सुकुमारको खेलौना बनिरहेको स्यमन्तक मणि धात्रीका हातमा आफ्नो तेजका प्रभावले गर्दा देदीप्यमान भइरहेको देख्नुभयो ॥२३॥ त्यस

तञ्च स्यमन्तकाभिलाषचक्षुषमपूर्वं पुरुषमागतमवेक्ष्य धात्री त्राहि त्राहीति व्याजहार ॥२४॥ तदार्तनाद श्रवणानन्तरञ्चामर्षपूर्णहृदयः स जाम्बवान् आजगाम, तयोश्च परस्परं युध्यतोर्द्वयोर्युद्धमेकविंशति-दिनान्यभवत्। ते च यदुसैनिकास्तत्र सप्ताष्टदिनानि तन्निष्क्रान्तिमुदीक्षमाणास्तस्थुः। अनिष्क्रममाणे च मधुरिपौ असाववश्यमत्र बिलेऽत्यन्तनाशमाप्तो भवेदन्यथा तस्य कथमेतावन्ति दिनानि शत्रुजये व्याक्षेपो भवतीति कृताध्यवसाया द्वारकामागता हतः कृष्ण इति कथयामासुः ॥२५॥ तद्बान्धवाश्च तत्कालोचितमखिलमु- परतक्रियाकलापं चक्रुः ॥२६॥ तत्र चास्य युध्यमानस्यातिश्रद्धादत्त-विशिष्टपात्रोपयुक्तान्नतोयदिना कृष्णस्य बलप्राणपुष्टिरभूत् ॥२७॥ इतरस्यानुदिन-मतिगुरुपुरुषभिद्यमानस्याति-निष्ठुरप्रहारपीडि-ताखिलावयवस्य निराहारतया बलहानिः। निर्जितश्च भगवता जाम्बवान् प्रणिपत्याह असुर-सुर-यक्ष-गन्धर्व-राक्षसादिभिरप्यखिलैर्भगवान् न जेतुं शक्यः,

समयमा स्यमन्तक मणि प्राप्त गर्ने अभिलाषापूर्ण दृष्टिबाट त्यसलाई हेर्दै एक अत्यन्त विलक्षण पुरुष त्यहाँ आएको देखेपछि धात्री अर्थात् धाई रक्षा गर रक्षा गर भनेर अत्यन्त अताल्लिएको स्वरमा कराउन थालिन्॥२४॥ उनको अत्यन्तै अताल्लिएको आवाज सुनेपछि जाम्बवान् अत्यन्त क्रोधित हुँदै त्यहाँ आए। त्यसपछि एकआपसमा द्वेष अत्यधिक मात्रामा बढेकाले भगवान् श्रीकृष्ण र जाम्बवान्का बीचमा युद्ध आरम्भ भयो। यी दुवैका बीचमा एक्काईस दिनसम्म अत्यन्त भयानक युद्ध भयो। यतातिर यादवका सैनिकहरू भगवान् श्रीकृष्ण गुफाबाट बाहिर आउनु होला र जाउँला भनेर उहाँलाई पर्खिएर गुफाको बाहिर सात आठ दिनसम्म बसे। त्यस समयसम्म पनि भगवान् श्रीकृष्ण गुफाबाट बाहिर नआउनु भएपछि उनीहरूले परस्पर विचार विमर्श गर्दा उनीहरूले भगवान् श्रीकृष्णको त्यस गुफा भित्रै मृत्यु भइसकेको निश्चय गरे। यदि यसो नभएको थियो भने उहाँलाई शत्रुमाथि विजय प्राप्त गर्न यति लामो समय लाग्ने थिएन। यस्तो निश्चय गर्दै उनीहरू सबै द्वारकामा आएर भगवान् श्रीकृष्णको मृत्यु भइसकेको कुरा प्रचार प्रसार गर्न थाले ॥२५॥ त्यसपछि भगवान् श्रीकृष्णका बन्धु बान्धवहरूले यस्तो कुरा सुनेपछि उहाँको उचित किसिमबाट प्रेतक्रिया आदि सम्पन्न गरिदिए ॥२६॥ त्यसपछि यता अत्यन्त श्रद्धापूर्वक दिइएको विशिष्ट पात्रहरूसहित यिनीहरूको अन्न र जलका प्रभावले युद्ध गर्दाका समयमा भगवान् श्रीकृष्णको बल र प्राणको पुष्टि भइरहेको थियो ॥२७॥ तथा भगवान् श्रीकृष्णको अत्यन्त निष्ठुर प्रहारबाट पीडित एवं भोजनको अभावले गर्दा जाम्बवान्को बल सकिन थाल्यो अर्थात् जाम्बवान् कमजोर हुन थाले। यसरी भगवान् श्रीकृष्णले जाम्बवान्लाई पराजित गरेपछि उनले भने- हे भगवान् ! हजुरलाई त देवता, असुर, गन्धर्व, यक्ष, राक्षस आदि कसैले पनि जित्न सक्दैनन् भने भूमण्डलमा निवास गर्ने मनुष्यको साधारण र अल्प पराक्रम र तिर्यग् योनिमा जन्म लिएको म जस्ताको सामर्थ्यले हजुरलाई जित्ने कार्य अत्यन्त असम्भव हुन्छ। हजुर निश्चित रूपमा मेरो स्वामी सम्पूर्ण जगत्को

केमुतावनिगोचरैरल्पवीर्यैर्नरावयवभूतैश्च तैर्य्यग्योन्यनुसृतिभिः, किं पुनरस्मद्विधैरवश्यं भगवतोऽस्मत्–स्वामिनो नारायणस्य सकलजगत्–परायणस्यांशेन भगवता भवितव्यमित्युक्तः॥२८॥ तस्मै भगवानखिलमवनिभारावतारमाचचक्षे॥२९॥ प्रीत्याञ्जितकरतलस्पर्शनेन चैनमपगतयुद्धखेदं चकार॥३०॥ स च प्रणिपत्यैनं पुनरपि प्रसाद्य जाम्बवतीं नाम कन्यां गृहागगमनार्घ्यभूतां ग्राहयामास॥३१॥ स्यमन्तकमणिमप्यसौ प्रणिपत्य तस्मै प्रददौ। अच्युतोऽप्यतिप्रणतात् तस्मादग्राह्यमपि तन्मणिरत्न–मात्मशोधनाय जग्राह॥३२॥ सह जाम्बवत्यास द्वारकामाजगाम। भगवदागमनोद्भूत–हर्षोत्कर्षस्य द्वारकावासिजनस्य कृष्णावलोक–नानुक्षणमेवातिपरिणतवयसोऽपि नवयौवन–मिवाभवत्। आनकदुन्दुभिञ्च दिष्ट्या दिष्ट्येति च सकलयादवाः स्त्रियश्च सभाजयामासुः॥३३॥ भगवानपी यथानुभूतमशेषयादवसमाजे यथावदाचचक्षे, स्यमन्तकञ्च सत्राजिते दत्वा मिथ्याभिशस्तिविशुद्धिमवाप, जाम्बवतीञ्चान्तः पुरे निवेशयामाश। सत्राजिदपि मयास्याभूतमलि–नमारोपितमिति जातसन्त्रासः स्वसुतां सत्याभामां भगवते भार्यां ददौ॥३४॥ ताञ्चाक्रूर–कृतवर्म–

गतिस्वरूप साक्षात् भगवान् श्रीनारायण हुनुहुन्छ, यसमा कुनै द्विविधा छैन। जाम्बवान्ले यति भनिसकेपछि भगवान् श्रीकृष्णले पृथ्वीको भार हरण गर्नका लागि आफूले अवतार लिएको कुरा उसलाई बताइदिनुभयो र अत्यन्त प्रेमपूर्वक उसको शरीर स्पर्श गरिदिनुभएर उसलाई युद्धको पीडाबाट मुक्त गराइदिनुभयो॥२८–३०॥ त्यसपछि जाम्बवान्ले भगवान् श्रीकृष्णलाई प्रणाम गरे तथा आफ्ना घरमा आउनु भएकाले उहाँलाई अर्घ्यस्वरूप आफ्नी कन्या जाम्बवतीलाई उहाँकी पत्नीका रूपमा समर्पण गरिदिए॥३१॥ फेरि प्रणाम गरेर उहाँलाई स्यमन्तक मणि पनि दिए। त्यस समयमा भगवान् अच्युतले अत्यन्त नम्र भएका जाम्बवान्सँग त्यो मणि लिन योग्य नभए तापनि आत्मसुद्धिका लागि त्यसलाई स्वीकार गर्नुभयो॥३२॥ यसपछि भगवान् श्रीकृष्ण जाम्बवतीलाई साथैमा लिएर द्वारकामा आउनुभयो। त्यस समयमा भगवान् श्रीकृष्णको आगमनले गर्दा जसमा हर्षको वेग अत्यधिक मात्रामा बढिरहेको थियो, ती द्वारकाका निवासीहरूमा अत्यन्त वृद्धावस्था भएकाहरूले पनि उहाँको दर्शनका प्रभावले गर्दा आफूमा तत्काल नवीन यौवनको सञ्चार भएको अर्थात् आफूले भरखरै यौवनावस्थामा प्रवेश गरेको अनुभव गरिरहेका थिए। त्यस समयमा सम्पूर्ण यदुकुलमा उत्पन्न भएका पुरुष तथा स्त्रिहरू समायोजित भएर अहो भाग्य! अहो भाग्य!! भन्दै उहाँको अभिवादन गर्न थाले॥३३॥ भगवान्ले पनि जे–जे भएको थियो, त्यो सबै जस्ताको त्यस्तै यादव समाजलाई सुनाइदिनुभयो र सत्राजित्लाई स्यमन्तक मणि दिएर आफूलाई लागेको असत्य आरोपबाट मुक्त हुनुभयो र जाम्बवतीलाई आफ्नो दरबारमा पुऱ्याइदिनुभयो। सत्राजित्ले पनि आफूले भगवान्लाई लगाएको आरोपको पश्चाताप स्वरूप आफ्नी पुत्री सत्यभामाको उहाँसँगै विवाह गरिदिए॥३४॥ तर

शतधन्वप्रमुखा यादवाः पूर्वं वरयामासुः। ततस्तत्प्रदानादवज्ञातमात्मानं मान्यमानाः सत्राजिते वैरानुबन्धं चक्रुः। अक्रूर–कृतवर्म प्रमुखाश्च शतधन्वानमूचुः अयमतिदुरात्मा सत्राजिद् योऽस्माभिर्भवता चाभ्यर्थितोऽप्यात्मजामस्मान् भवन्तं चाविगणय्य कृष्णाय दत्तवान्, तदलमनेन जीवता। घातयित्वैनं तन्महारत्नं त्वया किं न गृह्यते? वयमप्यभ्युपपत्स्यामः यद्यच्युतस्तवापि वैरानुबन्धं करिष्यतीति ॥३५॥ एवमुक्तस्तथेत्यसावप्याह। जतुगृहदग्धानाञ्च पाण्डुनन्दनानां विदितपरमार्थोऽपि भगवान् दुर्योधनप्रयत्नशैथिल्यार्थं कुल्यकरणाय वारणावतं गतः ॥३६॥ गते च तस्मिन् सुप्तमेव सत्राजितं शतधन्वा जघान, मणिरत्नञ्चाददे। पितृवधामर्षपूर्णा च सत्यभामा शीघ्रं स्यन्दनमारूढा वारणावतं गत्वा भगवतेऽहं प्रतिपादितेति अक्षान्तिमता शतधन्वना अस्मत्पिता व्यापादितः, तच्च स्यमन्तकमणिरत्नपहृतम्। तदियम– स्यावहासना। तदालोच्य यदत्र युक्तं तत् क्रियतामिति कृष्णमाह ॥३७॥ तया चैवमुक्तः परितुष्टान्तः

त्यसभन्दा पहिला नै अक्रुर, कृतवर्मा र शतधन्वा जस्ता यादवहरूले ती कन्या अर्थात् सत्यभामालाई आफ्ना लागि मागेका थिए। अहिले भगवान् श्रीकृष्णलाई सत्यभामा दिएर सत्राजित्ले हामीहरूको अपमान गरे। यसरी आफ्नो अपमान भएको अनुभव गर्दै उनीहरू सत्राजित्सँग द्वेषभाव राख्न थाले। अक्रूर, कृतवर्मा आदि यादवहरूले शतधन्वासँग भने–यो सत्राजित् अत्यन्त पापीष्ट छ। किनकि हामीहरूले यसकी कन्या मागेका थियौं तर हामीहरूको एवं तपाईंको पनि अपमान गर्दै यो दुष्टले आफ्नी कन्या भगवान् श्रीकृष्णलाई दियो। त्यसकारण यसलाई जीवित राख्नुपर्ने के प्रयोजन छ? तपाईंले यसको हत्या गरेर त्यो महारत्न किन नलिनु भएको? यदि श्रीकृष्णले त्यसका लागि तपाईंसँग शत्रुता गरे भने हामी सबै मिलेर तपाईंलाई पूर्ण रूपमा सहयोग गर्नेछौं। तपाईंले जस्तोसुकै उपायको प्रयोग गरेर भएपनि यो कार्य अवश्य गर्नुपर्दछ ॥३५॥ उनीहरूको यस किमिसको कुरा सुनेपछि शतधन्वाले भने–अत्यन्त उत्तम। अब म त्यसै गर्दछु। यसै समयमा भगवान् श्रीकृष्ण लाक्षागृह अर्थात् लाहाबाट बनाइएको घर डढाएपछि पाण्डवहरूका सबै समस्याहरूको ज्ञान भएतापनि दुर्योधनको कार्यमा शिथिलता ल्याउनका लागि कुलोचित कर्म गर्नका लागि वारणावत नगरमा जानुभयो ॥३६॥ भगवान् श्रीकृष्ण वारणावत गएपछि शतधन्वाले सुतिरहेको सत्राजित्को हत्या गरेर त्यो स्यमन्तक म मणि लिए। त्यसपश्चात् आफ्ना पिताको हत्या भएकाले अत्यन्त क्रोधित अन्तरामा भएकी सत्यभामा रथमा चढेर अत्यन्त शीघ्रतापूर्वक वारणावत पुगिन् र भगवान् श्रीकृष्णसँग भनिन्–'हे भगवान्! पिताजीले मलाई हजुरका करकमलमा समर्पण गरिदिनुभयो। त्यसकारण अत्यन्त क्रोधित भएर शतधन्वाले मेरो पिताजीको हत्या गरिदिए र त्यो स्यमन्तक मणि पनि अपहरण गरेर लिए। उनले यसरी अपमान गरे, यसकारण विचार गरेर जो उचित हुन्छ, त्यही गर्नुहवस्' ॥३७॥ सत्यभामाले यसरी बताइसकेपछि

करणोऽपि कृष्णः सत्यभामाममर्षताम्रलोचनः प्राह– सत्ये! ममैषावहासना, नाहमेतां तस्य दुरात्मनः सहिष्ये ॥३८॥ न ह्यनुल्लङ्घ्य वरपादपं तत् कृतनीडाश्रयिणो विहङ्गा वध्यन्ते ॥३९॥ तदलमत्यर्थममुनास्मत्पुरतः शोकप्रेरित-तवाक्यपरिकरेण, इत्युक्त्वा द्वारकामभ्येत्य बलददेवमेकान्ते वासुदेवः प्राह,–मृगयागतं प्रसेनमटव्यां मृगपतिर्जघान। सत्राजिदप्यधुना शतधन्वना निधनं प्रापितः। तदुभयविनाशात् तन्मणिरत्नमावयोः सामान्यं भविष्यति ॥४०॥ तदुत्तिष्ठ, आरुह्यतां रथः शतधन्वनिधनायोद्यमं कुरु, इत्यभिहितस्तथेति समन्वीप्सितवान्। कृतोद्योगौ च तावुभावुपलभ्य शतधन्वा कृतवर्माणमुपेत्य पार्ष्णिपूरण–कर्मनिमित्तमचोदयत्। आह चैनं कृतवर्मा, नाहं बलभद्रवासुदेवाभ्यां सह विरोधायालम्, इत्युक्तश्चाक्रूरमचोदयत्। आह चासावपि,–नहि कश्चिद् भगवता पादप्रहार–परिकम्पितजगत्त्रयेण असुवरवनितावैधव्यकारिणा प्रबलरिपुचक्राप्रतिहतचक्रेण चक्रिणा, मदमुदितनयनावलोकितारि–बलविशातनेन

मन अत्यन्त सन्तुष्ट भए तापनि भगवान् श्रीकृष्णले प्रत्यक्ष रूपमा रिसले आँखा राता राता पार्दै सत्यभामासँग भन्नुभयो–हे सत्ये!यथार्थमा शतधन्वाले मैरै अपमान गऱ्यो। म ऊद्वारा गरिएको अपमान कुनैपनि अवस्थामा सहन गर्न सक्दिन ॥३८॥ अत्यन्त ठूलो रुखमा चढन सकिएन भने कुनैपनि अवस्थामा त्यस रुखमा गुँड लाएर बसेको चराको हत्या हुन सक्दैन अर्थात् आफूभन्दा ठूलासँग सामना गर्न नसकेर उसका आश्रयमा रहेकाहरूलाई दुःख दिनु हुँदैन ॥३९॥ यसैले अब तिमीले मेरा अगाडि यसरी शोकाकुल वचन अझै किन बोलिरहनु पऱ्यो, यो शोक त्याग गरिदेऊ। म यसको प्रतिशोध अवश्य लिनेछु। सत्यभामालाई यसरी सन्तुष्ट पारेर भगवान् श्रीकृष्ण द्वारकामा आउनुभयो र एकान्तमा बलरामसँग भन्नुभयो–जंगलमा मृगको सिकार खेल्न गएका अवस्थामा प्रसेनलाई सिंहले मारिदियो र अहिले शतधन्वाले सत्राजित्लाई मारिदियो। त्यसकारण अब कोही पनि उत्ताराधिकारी नभएको हुनाले यो स्यमन्तकमणि हामी दुईको सम्पत्ति भयो ॥४०॥ त्यसकारण अब उठनुस र रथमा चढेर शतधन्वालाई मार्ने प्रयास गर्नुहोस्। भगवान्का यस्ता कुरा सुनेर बलरामजीले त्यसलाई सहर्ष स्वीकार गर्नुभयो। त्यसपछि शतधन्वाले भगवान् श्रीवासुदेव र बलराम दुवै आफूलाई मार्न अत्यन्त उत्साहित हुनु भएको थाहा पाएपछि कृतवर्माका नजिकमा गएर उनीसँग आफूलाई सहयोग गरिदिन अनुरोध गरे। त्यसपछि कृतवर्माले आफू भगवान् वासुदेव र बलरामसँग विरोध गर्न समर्थ नरहेको बताए। कृतवर्माले आफूलाई सहयोग गर्न अस्वीकार गरेपछि शतधन्वाले अक्रूरसँग सहयोगका लागि अनुरोध गऱ्यो। तर अक्रूरले पनि भने– जसको एउटा खुट्टाले हिर्काउँदा तीनोटै लोक कम्पायमान हुन्छन्, जसले अत्यन्त श्रेष्ठ असुरहरूका पत्नीहरूलाई वैधव्यदान दिनुहुन्छ र जसको हातमा शत्रुहरूमा हतोत्साह नभएको चक्र रहन्छ, यस्तो चक्र धारण गर्नुहुने भगवान् श्रीकृष्णसँग अथवा जसले मदोन्मत्त आँखाले हेर्दा मात्र सबै शत्रुहरूको बल दमन गर्नुहुन्छ, जो अत्यन्त बलशाली र जसले शत्रुरूप हात्तीलाई आकर्षित गराउनका लागि अखण्ड महिमाशाली अत्यन्त ठूलो हलो धारण गर्नुहुन्छ, यस्ता बलरामसँग युद्ध गर्ने सामर्थ्य

अतिगुरुवैरिवारणाकर्षाविष्कृत–महिमोरुसीरेण सीरिण च सह सकलजगद्वन्द्यानाममरवराणामपि योद्धुं समर्थः किमुताहम्। तदन्यतः शरणमभिलष्यताम् ॥४१॥ इत्युक्तः शतधनुराह,– यद्यस्मत्परित्राणासमर्थं भवानात्मानमवगच्छति, तदयमस्मन्मणिः संगृह्य रक्ष्यताम्। इत्युक्तः सोऽप्याह, यद्यन्त्यायामप्यवस्थायां न कस्मैचिद्भवान् कथयिष्यति, तदहमेनं ग्रहीष्यामि। तथेत्युक्ते अक्रूरस्तन्मणिरत्नं जग्राह ॥४२॥ शतधनुरप्यतुलवेगां शतयोजनवाहिनीं बडवामारुह्यापक्रान्तः। शैब्य–सुग्रीव–मेघपुष्प–बलाहकाश्व–चतुष्टय–युक्तरथावस्थितौ बलदेववासुदेवौ तमनुप्रयातौ ॥४३॥ सा च बडवा शतयोजनप्रमाणं मार्गमतीत्य पुनरपि वाह्यमाना मिथिलावनोद्देशे प्राणानुत्ससर्ज। शतधनुरपि तां परित्यज्य पदातिरेवाद्रवत् ॥४४॥ कृष्णोऽपि बलभद्रमाह– तावदत्रैव स्यन्दने भवता स्थेयम्। अहमेनमधमाचारं पदातिरेव पदातिमनुगम्य यावद् घातयामि। अत्र हि भूभागे दृष्टदोषा सभया नैतेऽश्वा भवतेमं भूमिभागमुल्लङ्घ्य नेयाः॥४५॥ तथेत्युक्त्वा बलभद्रो रथ एव तस्थौ। कृष्णोऽपि द्विक्रोशमात्रं

कसैसँग पनि रहेको हुँदैन र मेरो सामर्थ्य त छँदैछैन। त्यसकारण तपाईं अन्य कसैका शरणमा जानुहोस् अर्थात् म तपाईंलाई सहयोग गर्न पूर्ण रूपमा असमर्थ रहेको छु। त्यसकारण आफ्नो सुरक्षा आफैं गर्नुहोला ॥४१॥ अक्रूरले यसरी आफ्नो असमर्थता जनाइसकेपछि शतधन्वाले भने–यदि तपाईं मेरो रक्षा गर्नको लागि असमर्थ हुनुहुन्छ भने यो स्यमन्तक मणि आफूसँग राखेर यसको सुरक्षा गर्नुहोस्। शतधन्वाका कुराको जवाफ दिदैं अक्रूरले भने–म यो मणिलाई त्यस अवस्थामा मात्र राख्न सक्दछु, जब तपाईंले आफ्नो मृत्यु भएपनि यसका विषयमा कसैलाई नबताउने प्रतिज्ञ गर्नुहुन्छ। त्यसपछि शतधन्वाले भने– तपाईंको चाहना अनुसार नै हुन्छ। शतधन्वाले यसरी प्रतिज्ञा गरेपपछि अक्रूरले त्यो स्यमन्तक मणि आफूसँग राखे ॥४२॥ त्यसपछि शतधन्वा अतुलनीय गति वा वेग भएको एवं सय योजनसम्म जान सक्ने क्षमता भएकी घोडीमा सवार भएर त्यहाँबाट भाग्यो। शैव्य, सुग्रीव, मेघपुष्प र बलाहक नाम भएका चारोटा घोडाहरूबाट सम्पन्न भएको रथमा चढेर बलराम र भगवान् श्रीकृष्णले उसलाई पछ्याउन थाल्नुभयो ॥४३॥ त्यो घोडी पनि आफ्नो क्षमता अनुसराको सय योजनको मार्ग पार गरिसकेपछि फेरि भार बहन गर्नुपर्ने बाध्यता भएकाले मिथिलाको जंगलमा पुगेपछि मरी अर्थात् त्यसको प्राण गयो। त्यसपछि शतधन्वा त्यो घोडीलाई परित्याग गरेर पैदल दौडन थाल्यो ॥४४॥ त्यस समयमा भगवान् श्रीकृष्णले बलरामसँग भन्नुभयो–'त्यस समयसम्म तपाईं रथमा नै बसिरहनु होला, म यो अत्यन्त दुराचारी शतधन्वालाई पैदलै गएर मार्नेछु। हाम्रो रथका घोडाहरूले मरिसकेकी घोडीको शरीर आदि देखिसकेका छन्। त्यसकारण त्यसलाई नधाएर यिनीहरूलाई लैजान तपाईंका लागि उचित हुँदैन। किनकि मरेकी घोडी देखेर रथका घोडाहरू भयभीत भइरहेका छन् ॥४५॥ त्यसपछि बलरामजी 'ल ठीक छ' भनेर रथमा नै बस्नु भयो। भगवान् श्रीकृष्णले दुई कोससम्म मात्र पछ्याएर टाढैबाट शतधन्वालाई देखेर

भूमिभागमनुसृत्य दूरस्थस्यैव चक्रं क्षिप्त्वा शतधनुषः शिरश्चिच्छेद। तच्छरीराम्बरादिषु च बहुप्रकारमन्विष्यन्नपि स्यमन्तकं मणिं नावाप यदा, तदोपगम्य बलभद्रमाह, –वृथैवास्माभिर्घातितः शतधनुः न प्राप्तमखिलजगत्सारभूतं तन्मणिरत्नम्। इत्याकर्ण्य उद्भूतकोपो बलदेवो वासुदेवमाह, –धिक् त्वां यस्त्वमर्थलिप्सुः। एतच्च ते भ्रातृत्वान्मर्षये। तदयं पन्थाः, स्वेच्छया गम्यताम्, न मे द्वारकया, न त्वया, न बन्धुभिः कार्यम्। अलमेभिर्ममा–ग्रतोऽलीकशपथैः। इत्याक्षिप्य तं तथा प्रसाद्यमानोऽपि न तस्थौ, विदेहपुरीं प्रविवेश ॥४६॥ जनकश्चार्घ्यपूर्वकमेवैनं गृहं प्रवेशयामास। स तत्रैव च तस्थौ। वासुदेवोऽपि द्वारकामा जगाम। यावच्च जनकराजगृहे बलभद्रोऽवतस्थे तावद् धार्तराष्ट्रो दुर्योधनस्तत्सकाशाद् गदाशिक्षामशिक्षत ॥४७॥ वर्षत्रयान्ते च बभ्रूग्रसेनप्रभृतिभिर्यादवैर्न तद्रत्नं कृष्णेनापहृतमिति कृतावगतिर्विदेहपुरीं गत्वा बलदेवः सम्प्रत्याय्य द्वारकामानीतः ॥४८॥ अक्रूरोऽप्युत्तम–मणिसमुद्भूतसुवर्णध्यानपरस्ततो यज्ञानियाज ॥४९॥

आफ्नो चक्र फ्याकेर उसको शिर काटिदिनु भयो। त्यसपछि भगवान् श्रीकृष्णले उसको शरीर र वस्त्रमा राम्रोसँग मणिको खोजी गर्नुभयो, तर स्यमन्तक मणि पाउनुभएन। त्यसपछि बलरामजीका नजिकमा आएर भन्नुभयो–व्यर्थ अर्थात् अनावश्य रूपमा मैले शतधन्वाको हत्या गरे। ऊसँग सम्पूर्ण संसारको साररूप त्यो स्यमन्तक मणि रहेनछ अर्थात् त्यहाँ थिएन। यस्तो कुरा सुनेपछि बलरामजीले अत्यन्त क्रोधित हुँदै भगवान् श्रीकृष्णसँग भन्नुभयो–तिमीलाई धिक्कार छ, तिमी धनका लोभी हौ, तिमी आफ्नै भाई भएकाले मैले तिम्रो यो अपराधलाई क्षमा गरिदिएँ। तिम्रा लागि बाटो खुल्ला छ, तिमी स्वेच्छापूर्वक जान सक्दछौ। अब मलाई द्वारकासँग, तिमीसँग अथवा अन्य सबै बन्धु–वान्धवहरूसँग कुनै मतलब छैन। भयो, मेरा अगाडि यी झुट्टा शपथहरूको कुनै प्रयोजन छैन। बलरामजी यसरी भगवान् श्रीकृष्णलाई तिरस्कार गर्न थाले। भगवान् श्रीकृष्णले उहाँलाई प्रसन्न गराउन अनेकौं प्रयास गर्नुभयो। तर बलरामजी त्यहाँ न बसी विदेहनगरीतिर लाग्नुभयो ॥४६॥ विदेहराज जनकले अर्घ्यादिद्वारा उनको स्वागत सत्कार गरेर आफ्नो घरमा लगे। बलरामजी पनि त्यही बस्न थाले। यतातिर भगवान् श्री वासुदेव फर्किएर द्वारकामा आउनुभयो। जुन समयमा बलरामजी राजा जनकका घरमा बसेका थिए, त्यसै समयमा राजा धृतराष्ट्रका पुत्र दुर्योधनले उनीबाट गदायुद्धको शिक्षा हासिल गरे ॥४७॥ त्यसपछि तीन वर्ष पश्चात् बभ्रु एवं उग्रसेन आदि यादवहरूले, जसलाई 'भगवान् श्रीकृष्णसँग स्यमन्तकमणि नभएको' पूर्ण विश्वास थियो, विदेहनगरमा गएर शपथ खाँदै बलरामसँग भने–भगवान् श्रीकृष्णले मणिरत्न लुकाउनु भएको छैन। यसकारण मणिका विषयमा उहाँप्रति तपाईंले गर्नुभएको आशंका उपयुक्त छैन। यसरी विश्वास दिलाएपछि बलरामजी द्वारकामा फर्किएर आउनुभयो ॥४८॥ र यहाँ अक्रूर यस उत्तम मणिद्वारा उत्पन्न भएको सुनबाट कस्तो किसिमको कार्य गर्ने होला भन्ने विचार गरेर अनेकौं यज्ञ गर्न थाले ॥४९॥ यज्ञमा

सवनगतौ हि क्षत्रियवैश्यौ निघ्नन् ब्रह्महा भवतीत्यतो दीक्षाकवचं प्रविष्ट एवं तस्थौ द्विषष्टिवर्षाणि ॥५०॥ एवं तन्मणिरत्नप्रभावात् तत्रोपसर्गदुर्भिक्षमरकादिकं नाभूत् ॥५१॥ अथाक्रूरपक्षीयैर्भोजैः शत्रुघ्ने सात्वतस्य प्रपौत्रे व्यापादिते भोजैः सहाक्रूरो द्वारकामपहाय अपक्रान्तः ॥५२॥ तदपक्रान्तिदिनादारभ्य तत्रोपसर्गव्यालानावृष्टिमरकाद्युपद्रवा बभूवुः। अथ यादव-बलभद्रोग्रसेन-समवेतोऽमन्त्रयद् भगवानुरगारिकेतनः, कियदिदमेकदैव प्रचुरोपद्रवागमनमेतदालोच्यताम् ॥५३॥ इत्युक्ते अन्धकनामा यदुवृद्धः प्राह,–अस्याक्रूरस्य पिता श्वफल्को नाम यत्र यत्राभूत्, तत्र तत्र दुर्भिक्ष-मरकानावृष्ट्यादिकं नाभूत् ॥५४॥ काशिराजस्य विषयेऽत्यन्तानावृष्ट्यां श्वफल्कोऽनीयत ततस्तत्क्षणादेव देवो ववर्ष। काशिराजस्य पत्न्याश्च गर्भे कन्या पूर्वमासीत् ॥५५॥ सापि पूर्णेऽपि प्रसूतिकाले नैव निश्चक्राम। एवञ्च तस्य गर्भस्य द्वादश वर्षाण्यनिष्क्रामतो ययुः। काशिराजस्तु

दीक्षित अर्थात् याज्ञिक व्रत लिएको क्षत्रिय तथा वैश्यको हत्या गर्नाले ब्रह्महत्या गरेको पाप लाग्दछ। यसैले भगवान् श्रीकृष्णले यज्ञमा दीक्षित अवस्थामा अक्रूरको हत्या गरेर मणि लिन उचित सम्झनु भएन। यस कुरालाई ध्यानमा राख्दै अक्रूर पनि वयसाठी वर्ष सम्म यज्ञ गर्नमा व्यस्त गरे अर्थात् उनले यज्ञ गरिरहे ॥५०॥ यसरी त्यो मणिका प्रभावले गर्दा द्वारकामा कुनै किसिमको उपसर्ग अर्थात् अपशकुन वा दैवी उत्पात, दुर्भिक्ष अर्थात् अनिकाल एवं मृत्यु आदिको भय पनि आउन सकेन ॥५१॥ त्यसपछि अक्रूर पक्षीय अर्थात् कुनै पक्ष वा दलसँग सम्बन्ध भएका भोजका सेनाको एक टुकडीले सत्वका नाति शत्रुघ्नलाई मारिदिए पछि तिनै भोजगणसँग उनी पनि द्वारका छाडेर भागे ॥५२॥ त्यसपछि अक्रूर जुन दिन द्वारकाबाट भागेर गए त्यसैदिनदखि द्वारकामा अपशकुन वा दैवी उत्पात, हिंस्रक जन्तुहरूको भय, अनावृष्टि र मृत्यु जस्तो उत्पात आरम्भ भयो। त्यसपश्चात् भगवान् श्रीकृष्णले बलभद्र र उग्रसेन आदि यदुवंशीहरूसँग सल्लाह गर्नुभयो,'यसको कारण के हो, जुन अचानक रूपमा एकैपटक यस किसिमको उत्पात आइलाग्यो यसको कारण पत्ता लगाउनु पर्दछ ॥५३॥ भगवान् श्रीकृष्णले यसरी प्रस्ताव गरेपछि अन्धक नाम भएको एक वृद्ध यदुवंशीले भन्यो–'अक्रुरका पिता श्वफल्कले जहाँ जहाँ निवास गर्दछन्, त्यहाँ त्यहाँ मृत्यु, अनावृष्टि आदिका साथै अनिकालको भय रहँदैनथ्यो ॥५४॥ कुनै समयमा काशीराजको राज्यमा अनावृष्टि भएको थियो। त्यस समयमा उनले श्वफल्कलाई लिएर गएका थिए। श्वफल्क त्यहाँ पुग्नेबित्तिकै देवराज इन्द्रले पानी वर्षाउन आरम्भ गरिदिए। त्यस समयमा काशीराजकी पत्नी गर्भवती रहेकी थिइन् तथा उनको गर्भमा कन्याले निवास गरेकी थिइन् ॥५५॥ ती कन्या प्रसूतिकाल अर्थात् गर्भका समय सकिएपछि पनि आफ्नी माताका गर्भबाट बाहिर आइनन्। यसरी त्यो गर्भमा रहेको कन्याको जन्म नभई बाह्र वर्ष बित्यो, फेरि पनि ती कन्या गर्भबाट बाहिर आइनन्। त्यसपछि एक दिन काशीराजले गर्भमा

ामात्मजां गर्भस्थामाह, पुत्रि! कस्मान्न जायसे? नेष्क्रम्यताम् आस्यन्ते द्रष्टुमिच्छामि। स्वकाञ्च ातरं किमिति चिरं क्लेशयसि इत्युक्ता सा गर्भस्थैव याजहार, तात! यद्येकैकां गां दिने दिने ब्राह्मणेभ्यः ायच्छसि, तदाहमन्यै स्त्रिभिर्वर्षैरस्माद् गर्भादवश्यं नेष्क्रमिष्यामीति। एतच्च तद्वचनमाकर्ण्य राजा ाह्मणाय दिने दिने गां प्रादात्, सापि तावता कालेन ाता। ततस्तस्याः पिता गान्दिनीति नाम चकार। ाञ्च गान्दिनीं कन्यां श्वफल्कायोपकारिणे ृहागतायार्घ्यभूतां प्रादात्, सा च गान्दिनी प्रतिदिनं ावज्जीवं ब्राह्मणाय गां दत्तवती। तस्यामयमक्रूरः श्वफल्काज्जज्ञे। तस्यैवङ्गुणमिथुनादुत्पत्तिः ॥५६॥ ात् कथमस्मिन्नपक्रान्तेऽत्र मरकदुर्भिक्षाद्युपद्रवा न भविष्यन्ति। तदयमानीयताम्, अलमत्रातिगुणवत्य- पराधान्वेषणेन इति ॥५७॥ यदुवृद्धस्याकन्धस्य ्तद्वचनमाकर्ण्य केशवोग्रसेन-बलभद्र- पुरोगमैर्यदुभिः कृतापराधतितिक्षाभवमभयं दत्त्वा श्वाफल्किः स्वपुरमानीतः, तत्र चागत एवं तत्स्थ- स्यमन्तकमणेरनुभावादनावृष्टिमरक- दुर्भिक्षव्यालाद्युपद्रवः शशाम। कृष्णश्च

रहेकी बालिकालाई सम्बोधन गर्दै भने–हे पुत्री! तिमीले किन जन्म नलिएकी? अर्थात् गर्भबाट बाहिर किन नआएकी? तिमी यो गर्भबाट बाहिर आऊ, म तिमीलाई प्रत्यक्ष रूपमा हेर्न चाहन्छु। आफ्नी मातालाई किन लामो समयसम्म कष्ट दिइरहन्छ्यौ ? राजाले यसो भनेपछि गर्भमा रहेकी बालिकाले भन्न थालिन्- हे पिताजी! यदि तपाईंले प्रत्येक दिन ब्राह्मणलाई एउटा गाई दान दिनुभयो भने र यो क्रम तीन वर्षसम्म निरन्तर रूपमा चलिरह्यो भने त्यसपछि म तीन वर्षपछि आफ्नी माताका गर्भबाट बाहिर आउनेछु। आफ्नी कन्याले यसरी बताएपछि राजाले प्रत्येक दिन एक ब्राह्मणलाई गाई दान दिन आरम्भ गरे। तीन वर्षपछि ती कन्या माताको कर्भबाट आइन् अर्थात् उत्पन्न भइन् तथा ती कन्याका पिताले उनको नाम गान्दिनी राखे र काशिराजले आफ्ना घरमा आएका उपकारी श्वफल्कलाई अर्घ्यस्वरूप आफ्नी कन्या समर्पण गरिदिए। त्यसपछि ती गान्दिनीले पनि आफू जीवित रहँदासम्म प्रत्येक दिन एउटा गाई ब्राह्मणलाई दान दिने गरेकी थिइन्। तिनका गर्भबाट श्वफल्कका अक्रुर नाम भएका पुत्र जन्मिए। यसरी विशेष गुणहरूबाट सम्पन्न भएका दम्पतिहरूबाट अक्रूरको जन्म भएको हो ॥५६॥यस प्रकारका अक्रुर यहाँबाट सधैंका लागि गइसकेपछि द्वारकामा किन मृत्यु, अनिकाल जस्ता उत्पात नमच्चिउँन्? त्यसैले यस समयमा अक्रूरलाई बोलाउनु पर्दछ। अत्यन्त गुणवात् अक्रूरलाई दोषी ठान्न उपयुक्त हुँदैन अर्थात् यो कार्य हाम्रा लागि कल्याणदायक हुँदैन ॥५७॥यादववृद्ध अन्धकले यसरी स्पष्ट पारिसकेपछि भगवान् श्रीकृष्ण, उग्रसेन बलराम आदि मुख्य यादवहरूले अक्रूरद्वारा स्यमन्तक मणि अपहरण गर्दा गरेको अपराध क्षमा गरिदिए। यसरी अभयदान दिएर श्वफल्कका पुत्र अक्रूरलाई द्वारकामा बोलाए। अक्रूर द्वारकामा आएपछि तत्कालै स्यमन्तक मणिको प्रभावले गर्दा द्वारकामा अनावृष्टि, मृत्यु, अनिकाल, हिंस्रक जन्तुको भय आदि सबै किसिमका उत्पातहरू पूर्ण रूपमा शान्त भए। त्यसपछि भगवान्

चिन्तयामास,–स्वल्पमेतत् कारणं यदयं गान्दिन्यां श्वफल्केनाक्रूरो जनितः सुमहांश्चायमनावृष्टिदुर्भिक्षमरकाद्युपशमनकारी प्रभावः ॥५८॥ तन्नूनमस्य सकाशे स महामणिः स्यमन्तकाख्यस्तिष्ठति। तस्य ह्येवंविधाः प्रभावाः श्रूयन्ते। अयमपि यज्ञादनन्तरमन्यत् क्रत्वन्तरं, तस्माद् यज्ञान्तरं यजतीति। अल्पोपादानञ्चास्य। असंशयमत्रासौ वरमणिस्ति ष्ठतीति कृताध्यवसायोऽन्यत् प्रयोजनमुद्दिश्य सकलयादवसमाजमात्मगेहे एवाचीकरत्। तत्र चोपविष्टेष्वखिलेषु यादवेषु पूर्वप्रयोजनमुपन्यस्य पर्यवसिते च तस्मिन् प्रसङ्गगतपरिहासकथामक्रूरेण सह कृत्वा जनार्दनस्तमक्रूरमाह ॥५९॥ दानपते! जानीम एव वयं–यथा शतधन्वना अखिलजगत्सारभूतं स्यमन्तकरत्नं भवतः सकाशे समर्पितम्। तदेतद्राष्ट्रोपकारकं भवतः सकाशे तिष्ठतीति तिष्ठतु, सर्व एव वयं तत्प्रभावफलभुजः किन्त्वेषं

श्रीकृष्णले चिन्तन गर्नुभयो–'अक्रूरले श्वफल्कको पुत्रका रूपमा गान्दिनीका गर्भबाट जन्म लिए, यो अत्यन्त साधारण कुरा हो र अनावृष्टि, अनिकाल, मृत्यु आदि उत्पातलाई शान्त गराउने यिनको प्रभाव अत्यन्त महत्त्वपूर्ण रहेको छ ॥५८॥निश्चित रूपमा यिनीसँग त्यो स्यमन्तक महामणि रहेको हुनुपर्दछ। किनकि त्यस्य स्यमन्तक मणिमा मात्र त्यस किसिमको प्रभाव रहेको सुनिएको थियो। यसको अर्को कारण पनि रहेको छ। जस्तै यिनले एउटा यज्ञ सकिएपछि दोस्रो, तेस्रो यसरी अनेकौं प्रकारका यज्ञहरूको अनुष्ठान गरिरहेका छन्। तर यिनमा त्यस किसिमको विशेष सामग्री रहेको देखिदैंन अर्थात् रहेको छैन। यसैले निश्चित रूपमा यिनका घरमा त्यही सर्वोत्कृष्ट एवं सुन उत्पन्न गराउने स्यमन्तक मणि रहेको छ। भगवान्‌ले यस किसिमको निश्चय गरिसकेपछि अन्य कुनै कार्यको सिलसिलामा आफ्नो घरमा सबै यादववंशीहरूको एक सभाको आयोजना गर्नुभयो। समस्त यादवहरू भेला भइसकेपछि भगवान्‌ले आफ्नो लक्ष्यका विषयमा सबैलाई स्पष्ट पार्नुभयो र त्यसलाई समाप्त गरेर मन्द मुस्कानमा अक्रूरसँग भगवान् श्रीकृष्णले भन्नुभयो.........॥५९॥ 'हे दानपते! जसरी शतधन्वाले तपाईंलाई सम्पूर्ण संसारको सारतत्त्वका रूपमा रहेको त्यो स्यमन्तक नाम भएको महामणि जिम्मा लगाएको थियो, त्यो सबै मलाई ज्ञान छ। त्यो सम्पूर्ण राष्ट्रको कल्याण गर्ने राज्यपरोपकारी महामणि तपाईंसँग रहिरहोस्, त्यसको प्रभावको फल त हामी सबैले पूर्ण रूपमा उपभोग गर्न पाइरहेका छौं। त्यसकारण त्यो तपाईंसँग रहँदा आपत्ति जनाइरहनु पर्ने आवश्यक छैन। तर, मेरा दाजु बलरामले मणि मैले लुकाएको कुरामा विश्वस्त भएर ममाथि शङ्का गरिरहनु भएको छ। यसैले मेरो प्रसन्नताका लागि तपाईंले एकपटक त्यो मणिरत्न हामीहरूलाई देखाइदिनु होस्।' यसरी बताइसके पछि भगवान् श्रीकृष्ण शान्त हुनुभयो। त्यसपछि त्यो मणि आफ्नै शरीरमा भएका कारणले गर्दा अक्रूर विचार गर्न थाले–'अब मैले के गर्ने, यदि मैले मणि मसँग छैन

बलभद्रोऽस्मानाशङ्कितवान्। तदस्मत्प्रीतये दर्शय, इत्यभिहितः सरत्नः सोऽचिन्तयत्। किमत्रानुष्ठेयम्? अन्यथा चेद् ब्रवीम्यहं, तत् केवलाम्बरतिरोधानमन्विशष्यन्तो रत्नमेते द्रक्ष्यन्तीति, अतोऽन्वेषणं न क्षेममिति सञ्चिन्त्य तमखिलजगत्कारणभूतं नारायणमाहाक्रूरः-भगवन्! ममैवत् स्यमन्तकमणिरत्नं शतधनुषा समर्पितम् ॥६०॥ अपगते च तस्मिन् अद्य श्वः परश्वो वा भगवान् मां याचयिष्यतीति कृतमतिरतिकृच्छ्रेणैतावन्तं कालमधारयम्, अस्य तु धारणक्लेशेनाहमशेषोपभोगेष्वसङ्गिमानसो न वेद्मि स्वसुखकलामपि ॥६१॥ एतावन्मात्रमशेषराष्ट्रोपकारि धारयितुं न शक्नोतीति मां भगवान् मंस्यत इत्यात्मना न चोदितम् ॥६२॥ तदिदं स्यमन्तकरत्नं गृह्यताम्, यदृच्छया यस्याभिमतं तस्य समर्प्यताम्। ततः सोऽधरवस्त्रनिगोपितातिलघुकनकसमुद्गकगतं प्रकटीकृतवान् ॥६३॥ ततश्च निष्क्राम्य स्यमन्तकमणिं तत्र यदुसमाजे मुमोच। मुक्तमात्रेण च तेनातिकान्त्या तदखिलमास्थानमुद्द्योतितम् ॥६४॥ अथाहाक्रूरः-एष मणिर्यः

भनिदिएँ भने भगवान्‌ले त्यसको खोजी गर्दा केवल कपडामा मात्र लुकाएको त्यो अवश्य देख्नुहुनेछ र यसरी उहाँले मेरो शरीरमा मणि पाएका अवस्थामा म उहाँका नजरमा अत्यन्त तुच्छ हुनेछु एवं मेरो अकल्याण हुनेछ।' यसरी विचार आएपछि सम्पूर्ण जगत्का कारणस्वरूप भगवान् श्रीकृष्णसँग अक्रूरले भने-'हे भगवान्! यो त्यही स्यमन्तकमणि हो, जुन शतधन्वाले मलाई दिएका थिए ॥६०॥ तथा शतधन्वाको मृत्यु भैसकेपछि ममा उत्पन्न भएको विचार अनुसार हजुर जुनसुकै समयमा पनि यो स्यमन्तकमणि मागेर लिनसक्नुहुन्छ। यस्तो विचार गर्दै आजसम्म अत्यन्त कष्टपूर्वक यो मणिलाई लुकाएर राखेको थिएँ। यसलाई राख्दाका अवस्थामा मलाई जुन दुःख भयो, त्यसबाट आजसम्म मेरो मनले शान्तिपूर्वक उपभोग्य वस्तुहरूको पनि उपभोग गर्न सकेको छैन; अर्थात् गरेको छैन। त्यसकारण मैले अहिलेसम्म अलिकति मात्र पनि सुखको अनुभव गर्न सकेको छैन ॥६१॥ त्यसपछि भगवान् श्रीकृष्णले मनन गर्नुहुनेछ, यो व्यक्ति राज्यको अत्यन्त उपकारी अर्थात् कल्याण गर्ने स्वभाव भएको अत्यन्त थोरै भार भएको वस्तु पनि धारण गर्न असमर्थ छ, यसैले स्वयं मैले यस विषयमा हजुरलाई केही नबताएको हुँ ॥६२॥ यसपछि अक्रूरले भने-'अब हजुर यो स्यमन्तक मणि स्वीकार गर्नुहोस्। हजुरको चाहना अनुसार जसलाई दिँदा उचित हुन्छ, त्यसैलाई दिनुहोस्। यसरी बताइसकेपछि अक्रूरले आफ्नो अङ्गको तल्लो वस्त्र अर्थात् धोतीमा लुकाएर राखिएको अत्यन्त सानो सुनको जन्तरमा राखिएको स्यमन्तकमणि बाहिर निकाले ॥६३॥ त्यस सुनको जन्तरबाट निकालेर त्यस मणिलाई यादवसमाजका अगाडि राखिदिए। त्यसरी राखिएपछि त्यो सबै स्थान स्यमन्तक मणिको अत्यन्त तीव्र कान्तिका प्रभावले अत्यन्त जाज्वल्यमान भयो अर्थात् अत्यधिक उज्यालो भयो ॥६४॥ त्यसपछि अक्रूरले भने -शतधन्वाले मलाई यो स्यमन्तक मणि

शतधन्वनास्माकं समर्पितः यस्यायं, स एनं गृह्णात्विति । तन्मणिरत्नमालोक्य सर्वयादवानां साधु साध्विति विस्मितमनसां वाचोऽश्रूयन्त । तमालोक्य ममायमुच्युतेनैव सामान्यः समन्विच्छित इति बलभद्रः सस्पृहोऽभवत् ॥६५॥ ममैवेदं पितृधनमित्यतीव च सत्यभामापि स्पृहयाञ्चकार । बल-सत्याननावलोकनात् कृष्णोऽप्यात्मानं चक्रान्तरावस्थितमिव मेने ॥६६॥ सकलयादव-समक्षञ्चाक्रूरमाह,–एतद्धि मणिरत्नमात्म-शोधनायैषां यदूनां दर्शितम् । एतच्च मम बलभद्रस्य च सामान्यं, पितृधनञ्चैतत् सत्यभामायाः, नान्यस्य ॥६७॥ एतच्च सर्वकालं शुचिना ब्रह्मचर्यगुणवता ध्रियमाणमशेषरा–ष्ट्रस्योपकारकम्, अशुचिना ध्रियमाणमाधारमेव हन्ति ॥६८॥ अतोऽहमस्य षोडशस्त्रीसहस्रपरि–ग्रहादसमर्थो धारणे ॥६९॥ कथञ्चैतत्, सत्यभामा स्वीकरोतु?

दिएका थिए । अब यस मणिमा जसको अधिकार लाग्दछ, त्यसैले लिनुहोला । त्यस समयमा मणिलाई देखेर आश्चयचकीत भएका यदुवंशीहरूका मुखबाट निस्किएको 'धन्यवाद! धन्यवाद!!' यस प्रकारको आवाज गुञ्जायमान भयो । त्यसपछि त्यस मणिलाई देखेर बलरामले यसमा भगवान् श्रीकृष्णका जसरी नै मेरो पनि समान अधिकार रहेको छ अर्थात् यसको प्राप्तिका लागि हामीले बराबर प्रयास गरेका छौं भनेर उनले पनि त्यो आफूले प्राप्त गर्नुपर्ने अभिलाषा व्यक्त गरे ॥६५॥ तथा 'यो मेरो पिताको सम्पत्ति हो, त्यसकारण यसमा मेरो मात्र अधिकार लाग्दछ यसरी सत्यभामाले पनि त्यो मणिलाई प्राप्त गर्न आफू अत्यन्त उत्साहित भएको प्रष्ट्याइन् अर्थात आफूले प्राप्त गर्नैपर्ने स्पष्ट गरिन् । बलराम र सत्यभामा यी दुवैको अवस्थालाई देखेर भगवान् श्रीकृष्ण चक्काका बीचमा परेको जीवका समान हुनुभयो अर्थात् उहाँ असमन्जसमा पर्नुभयो ॥६६॥ त्यसपछि भगवान् श्रीकृष्णले सबै यादवहरूका अगाडि अक्रूरसँग भन्नुभयो–ममा आरोपित अपवादलाई शुद्धीकरण गर्नका लागि मैले यो स्यमन्तक मणि सबै यादवहरूका अगाडि देखाउन लगाएको हुँ, यसबाट मेरो आत्मशुद्धि भयो । यस मणिमा बलरामको र मेरो बराबर अधिकार रहेको छ तथा यो सत्यभामाको पैतृक सम्पत्ति हो । त्यसैले यसमा सतयभामा बाहेक अन्य कसैको अधिकार लाग्दैन ॥६७॥ यसलाई सधैं अत्यन्त पवित्रतापूर्वक एवं ब्रह्मचर्यमा रहेर धारण गर्नुपर्दछ । यसरी धारण गर्दा यो स्यमन्तक मणिले सम्पूर्ण राष्ट्रको उपकार अर्थात् कल्याण पनि गर्दछ अर्थात् राज्यमा कुनै किसिमको आपत्कालीन अवस्था उत्पन्न हुन सक्दैन । यसका विपरीत अपवित्रतापूर्वक यसलाई धारण गर्नाले धारण गर्नेको निश्चित रूपमा विनाश हुन्छ अर्थात् त्यसको मृत्यु अवश्यंभावी छ ॥६८॥ मैले सोऱ्ह हजार स्त्रीहरूसँग विवाह गरिसकेका छु । त्यसकारण म यो स्यमन्तक नाम भएको महामणि धारण गर्न पूर्ण रूपमा असमर्थ रहेको छु ॥६९॥ यसकारण सत्यभामाले पनि यसलाई धारण

आर्येण बलभद्रेणापि मदिरापानाद्यशेषोपभोगपरित्यागः कथं कार्यः ? । तदयं यदुलोको ऽयं बलभद्रोऽहं सत्या च त्वां दानपते! प्रार्थयामः एतद् भवानेव धारयितुं समर्थः, त्वत्स्थञ्चास्य राष्ट्रस्योपकारकंम् । तद्भवानशेषराष्ट्रोपकारनिमित्तमेतत् पूर्ववद् धारयतु । त्वयान्यथा न वक्तव्यमित्युक्ते दानपतिस्तथेत्युक्त्वा जग्राह तन्महामणिरत्नम् । ततःप्रभृति चाक्रूरः प्रकटेनैवातीव तेजसा जाज्वल्यमानेनात्मकण्ठासक्तेनादित्य इवांशुमाली चचार ॥७०॥ इत्येतां भगवतो मिथ्याभिशस्तिक्षालनां यः स्मरति, न तस्य कदाचिदल्पापि मिथ्याभिशस्तिर्भवति अव्याहतेन्द्रियश्चाखिलपापमोक्षमवाप्नोति ॥७१॥

गर्न सक्ने सम्भावना छैन। किनकि यिनी मेरै पत्नी हुन्। र आर्य बलरामले पनि मदिरापान आदि उपभोगको त्याग गर्न सक्ने सम्भावना छैन। यसकारण हे दानपति अक्रूर! यी सम्पूर्ण यादवहरू, सत्यभामा, बलराम म स्वयं श्रीकृष्ण हामी सबै मिलेर तपाईंसँग प्रार्थना गर्दछौं कि तपाईं मात्र यो स्यमन्तक नाम भएको महामणि धारण गर्नका लागि सक्षम हुनुहुन्छ तथा तपाईंसँग रहँदाका अवस्थामा यो सम्पूर्ण राज्यका लागि उपकारी अर्थात् कल्याणदायक हुनेछ। यसकारण तपाईंले नै सम्पूर्ण राज्यको कल्याणका लागि पहिलेका जसरी नै धारण गर्नुहोस्। तपाईंले यसका विपरीत केही पनि नबोल्नुहोला। भगवान् श्रीकृष्णले यसरी बताइसकेपछि अक्रूरले 'हजुरको जो आज्ञा' भनेर त्यो स्यमन्तक मणि लिए। त्यसपछि त्यो मणिलाई आफ्नो घाँटीमा धारण गरेर सूर्यले जसरी नै चारैतिर प्रकाश फैलाउँदै सबैतिर विचरण गर्न थाले अर्थात् अत्यन्त आनन्दपूर्वक घुम्न थाले ॥७०॥ यो भगवान् श्रीकृष्णलाई लागेको असत्य अपवादको शुद्धिकरण गरिएको कथा जसले सुन्दछ, स्मरण गर्दछ र श्रद्धापूर्वक यसको चिन्तन गर्दछ उसलाई कुनैपनि समयमा अलिकति मात्र पनि असत्य आरोप लाग्न सक्दैन र उसका सबै इन्द्रियहरू सक्षम रहनेछन् तथा ऊ सबै किसिमका पापहरूबाट पूर्ण रूपमा मुक्त हुनेछ ॥७१॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे त्रयोदशोऽध्यायः ।

ॐ

## चतुर्दशोऽध्यायः

## अध्याय – १४

### "अनमित्रान्धकयोर्वंशवर्णनम्"

(अनमित्र अन्धकको वंशको वर्णन)

पराशर उवाचः

अनमित्रस्यानुजः शिनिर्नामाभवत्। तस्यापि सत्यकः सत्यकात् सात्यकिर्युयुधाननामा, ततोऽप्यसङ्गः, तत्पुत्रश्च तूणिः, तूणेर्युगन्धर इति शैनेयाः ॥१॥ अनमित्रस्यैवान्वये पृश्निः तस्माच्च श्वफल्कः। तत्प्रभावः कथित एव। श्वफल्कस्य कनीयांश्चित्रको नामाभवद् भ्राता, श्वफल्कादक्रूरो गान्दिन्यामभवत्। तथोपमद्गु–मृदर–विशारि–मेजय–गिरिक्षत्रोपक्षत्र–शत्रुघ्न–विमर्दनधर्म–धृगदृष्टशर्म–गन्धमोजावाह–प्रतिवाहाख्याः पुत्राः सुताराख्या च कन्या। देववान् उपदेवश्च अक्रूरपुत्रौ। पृथुविपृथुप्रमुखाश्चित्रकस्य पुत्रा बहवोऽभवन् ॥२॥ कुकुर–भजमान–शुचि–कम्बलबर्हिषाख्या– स्तथान्धकस्य चत्वारः पुत्राः ॥३॥ कुकुराद् धृष्टः तस्माच्च कपोतरोमा, ततश्च विलोमा, तस्मादपि तुम्बुरुसखा भवसञ्ज्ञकश्चन्दनोदकदुन्दुभिः। ततश्चाभिजित्, ततः पुनर्वसुः, तस्याप्याहुकः पुत्रः, आहुकी कन्याभूत् ॥४॥ आहुकस्य देवकोग्रसेनौ द्वौ पुत्रौ। देववानुपदेवश्च सुदेवो देवरक्षितो देवकस्यापि

**पराशरजीले भन्नुभयो**– अनमित्रका भाइका रूपमा शिनि उत्पन्न भएका थिए। शिनिका पुत्ररत्नका रूपमा सत्यक उत्पन्न भएका थिए र सत्यकका पुत्ररत्नका रूपमा सात्यकि उत्पन्न भएका थिए, जसको अर्को नाम युयुधान रहेको थियो। त्यसपछि सात्यकिका पुत्ररत्नका रूपमा असङ्ग उत्पन्न भएका थिए भने असङ्गका पुत्ररत्नका रूपमा तूणि उत्पन्न भएका थिए एवं तूणिका पुत्ररत्नका रूपमा युगन्धर उत्पन्न भएका थिए। यी युगन्धर नै शैनेयका नामबाट प्रख्यात भए ॥१॥ पृश्नि अनमित्रका वंशमा उत्पन्न भएका थिए। पृश्निका पुत्ररत्नका रूपमा श्वफल्क उत्पन्न भएका थिए। यी श्वफल्फको प्रभाव र महिमाका विषयमा तेन्हो अध्यायमा बताइसकिएको छ। श्वफल्कका एउटा चित्रक नाम भएका भाइ थिए। श्वफल्कका पुत्ररत्नका रूपमा गान्दिनीका गर्भबाट अक्रूर उत्पन्न भएका थिए र श्वफल्ककी सुतारा नाम भएकी एउटी कन्या पनि थिइन् तथा श्वफल्ककी दोस्री पत्नीबाट अन्य कयौं पुत्ररत्न उत्पन्न भएका थिए। जस्तै– उपमद्गु, मृदर, विशारि, मेजय, गिरिक्षत्र, उपक्षत्र, शत्रुघ्न, विमर्दन, धर्मधृक्, दृष्टशर्म, गन्धमोज, वाह र प्रतिवाह रहेका थिए। अक्रूरका दुई पुत्ररत्नका रूपमा देववान् र उपदेव उत्पन्न भएका थिए। चित्रकका पृथु, विपृथु आदि अनेकौं पुत्रहरू उत्पन्न भएका थिए ॥२॥ अन्धकका चार पुत्ररत्नका रूपमा कुकुर, भजमान, शुचिकम्बल र बर्हिष उत्पन्न भएका थिए ॥३॥ यिनीहरूमध्ये कुकुरका पुत्ररत्नका रूपमा धृष्ट उत्पन्न भए भने धृष्टका पुत्ररत्नका रूपमा कपोतरोमा उत्पन्न भएका थिए। यसरी नै कपोतरोमाका पुत्ररत्नका रूपमा विलोमा उत्पन्न भएका थिए एवं विलोमाका पुत्ररत्नका रूपमा तुम्बरुका मित्र भव उत्पन्न भएका थिए। उनको अर्को एउटा नाम चन्दनोदक दुन्दुभि पनि थियो। भवका पुत्ररत्नका

चत्वारः पुत्राः। तेषाञ्च वृकदेवा, उपदेवा, देवरक्षिता, श्रीदेवा, शान्तिदेवा, सहदेवा, देवकी च सप्त भगिन्यः। ताश्च सर्वा एव वसुदेव उपयेमे। उग्रसेनस्यापि कंस–न्यग्रोध–सुनाम–कङ्क–शङ्क–स्वभूमि–राष्ट्रपाल–युद्धमुष्टि–तुष्टिमत्संज्ञाः पुत्राः कंसा, कंसवती, सुतनू, राष्ट्रपाली, कङ्की चोग्रसेनतनुजाः ॥५॥ भजमानाच्च विदूरथः पुत्रोऽभवत्। विदूरथात् शूरः, शूरात् शमी, शमिनः प्रतिक्षत्रः, तस्मात् स्वयम्भोजः, ततश्च हृदिकः ॥६॥ ततश्च कृतवर्मा, तस्मात् शतधनुर्देवमीढुषाद्या बभूवुः ॥७॥ देवमीढुषस्य शूरः शूरस्यापि मारिषा नाम पत्न्यभवत्॥८॥ अस्याञ्चासौ दश पुत्रानजनयद् वसुदेवपूर्वान्। वसुदेवस्य जातमात्रस्यैव एतद्गृहे भगवदंशावतारमव्याहतदृष्ट्या पश्यद्भिर्देवैर्दिव्या आनका दुन्दुभयश्च वादिताः ॥९॥ ततस्तदैवान–कदुन्दुभिसंज्ञामवाप। तस्यापि देवभाग,

रूपमा अभिजित् उत्पन्न भएका थिए। अभिजित्का पुत्ररत्नका रूपमा आहुक र पुत्रीरत्नका रूपमा आहुकी उत्पन्न भएका थिए। आहुकका दुई पुत्ररत्नका रूपमा देवक र उग्रसेन उत्पन्न भएका थिए। देवकका चार पुत्ररत्नहरूका रूपमा देववान्, उपदेव, सुदेव र देवरक्षित उत्पन्न भएका थिए। यसरी देवकको कन्यारत्नका रूपमा वृकदेवा, उपदेवा, देवरक्षिता, श्रीदेवा, शान्तिदेवा, सहदेवा र देवकी यी सात उत्पन्न भएका थिए। वसुदेवले यी सातओटै कन्याहरूसँग विवाह गरेका थिए। उग्रसेनका पुत्ररत्नहरूका रूपमा कंस, न्यग्रोध, सुनाम, कङ्क, शङ्कु, स्वमूभि, राष्ट्रपाल, युद्धमुष्टि र तुष्टिमान् उत्पन्न भएका थिए। उनका कन्या–रत्नहरूका रूपमा कंसा कंसावती, सुतनु, राष्ट्रपाली र कङ्की यी पाँच उत्पन्न भएका थिए। भजमान्का पुत्ररत्नका रूपमा विदूरथ उत्पन्न भएका थिए भने विदूरथका पुत्ररत्नका रूपमा शूर उत्पन्न भएका थिए। यसरी नै शूरका पुत्ररत्नका रूपमा शमी उत्पन्न भएका थिए तथा शमीका पुत्ररत्नका रूपमा प्रतिक्षत्र उत्पन्न भएका थिए एवं प्रतिक्षत्रका पुत्ररत्नका रूपमा स्वयम्भोज उत्पन्न भएका थिए भने स्वयम्भोजका पुत्ररत्नका रूपमा हृदिक उत्पन भएका थिए ॥४–६॥ हृदिकका पुत्ररत्नका रूपमा कृतवर्मा उत्पन्न भएका थिए भने कृतवर्माका पुत्ररत्नका रूपमा शतधनु र देवमीढुष उत्पन्न भएका थिए ॥७॥ देवमीढुषका पुत्ररत्नका रूपमा शूर एक मात्र उत्पन्न भएका थिए। शूरकी पत्नी मारिषा थिइन् ॥८॥ मारिषाका गर्भबाट शूरले वसुदेव आदि दश पुत्रहरू उत्पन्न गराएका थिए। वसुदेवको जन्मका समयमा नै भविष्यका ज्ञाता र द्रष्टा अर्थात् भविष्य देख्न सक्ने देवताहरूले अव्याहत अर्थात् रोकतोक नभएको दृष्टिबाट यिनका घरमा भगवान्ले अंशावतार लिनुहुने देखे। त्यसकारण उनीहरूले आनक अर्थात् मृदङ्ग र दुन्दुभि अर्थात् दमाहा नाम भएका बाजा बजाएका थिए॥९॥ यसैले वसुदेवको एउटा नाम आनक–दुन्दुभि

देवश्रवोऽनाधृष्टि-करून्धक-वत्सबालक-सृञ्जय-श्याम-शमीक-गण्डषसंज्ञा नव भ्रातरो बभूवुः, पृथा, श्रुतदेवा, श्रुतकीर्तिः, श्रुतश्रवाः, राजाधिदेवी च वसुदेवादीनां पञ्च भगिन्योऽभवन् । शूरस्य च कुन्तिभोजनामा सखाभवत् । तस्मै चापुत्राय पृथामात्मजां विधिना शूरोऽददात् । ताञ्च पाण्डुरुवाह ।तस्याञ्च धर्मानिलशक्रैर्युधिष्ठिर-भीमार्जुनाख्यास्त्रयः, पुत्राः समुत्पादिताः । पूर्वमनूढायाश्च भगवता भास्वता कर्णाख्यः कानीनः पुत्रोऽजन्यत ॥१०॥ तस्याश्च सपत्नी माद्री नामाभवत् । तस्याञ्च नासत्यदस्राभ्यां नकुलसहदेवौ पाण्डोः पुत्रौ जनितौ। श्रुतदेवान्तु वृद्धशर्मा नाम कारूष उपयेमे। तस्यां दन्तवक्रो नाम महासुरो जज्ञे। श्रुतकीर्तिमपि कैकेयराज उपयेमे तस्यां सन्तर्दनादयः पञ्च कैकेयाः पुत्रा बभूवुः । राजधिदेव्यामावन्त्यौ विन्दानुविन्दौ जज्ञाते ॥११॥ श्रुतश्रवसमपि चेदिराजो दमघोषनामा उपयेमे। तस्यां शिशुपालमुत्पादयामास। स हि पूर्वमप्यनाचारविक्र-मसम्पन्नो दैत्यादिपुरुषो हिरण्यकशिपुरभूत्॥१२॥ यश्च भगवता सकललोकगुरुणा घातितः ।

भयो। यिनका नौ भाइहरू र पाँच बहिनीहरू रहेका थिए। तिनीहरूका नाम यस प्रकार रहेका छन्- देवभोग, देवश्रवा, अनाधृष्टि, करुन्धक, वत्सबालक, सृञ्जय, श्याम, शमीक र गण्डूष यी नौ भाइहरू थिए। र पृथा, श्रुतदेवा, श्रुतकीर्ति र राजाधिदेवी यी पाँचोटी बहिनीहरू थिए। वसुदेवका पिता शूरका कुन्तिभोज नाम भएका एउटा मित्र थिए। कुन्तिभोजका कुनै पनि सन्तान थिएनन्। यसैले शूरसनेले शास्त्रीय विधि अनुसार पोष्य अर्थात् पाल्न पोस्नयोग्य कन्याका रूपमा आफ्नी कन्या पृथा उनलाई समर्पित गरिदिए। यिनै पृथासँग पाण्डुको विवाह भयो। यिनै पृथाका गर्भबाट पाण्डुका पुत्ररत्नका रूपमा धर्मबाट युधिष्ठिर, वायुबाट भीम र इन्द्रबाट अर्जुन नाम भएका तीन पुत्रहरू उत्पन्न भए एवं विवाह गर्नुभन्दा पहिले नै भगवान् श्रीसूर्यनारायणले पृथाका गर्भबाट कर्ण नाम भएका कानीन (अर्थात् विवाह हुनुभन्दा पहिले कन्याका गर्भबाट उत्पन्न भएको पुत्रलाई कानीन भनिन्छ) पुत्र उत्पन्न गराएका थिए ॥१०॥ पृथाकी माद्री नाम भएकी एक सपत्नी (सौता) थिइन । उनका गर्भबाट दुई अश्विनीकुमारहरूले दुई पुत्रहरू उत्पन्न गराएका थिए, जसको नाम नकुल र सहदेव थियो। शूरसेनकी अर्की श्रुतदेवासँग वृद्धशर्मा नाम भएका कारूषले विवाह गरेका थिए। उनका गर्भबाट दन्तवक्र नाम भएको अत्यन्त पराक्रमी पुत्र उत्पन्न भयो। श्रुतकीर्तिसँग कैकेयराजले विवाह गरेका थिए। यिनै श्रुतकीर्तिका गर्भबाट सन्तर्दन आदि पाँच पुत्रहरू उत्पन्न भएका थिए, यिनीहरू कैकेयका नामबाट प्रख्याए भए। अवन्तिराजले राधिकादेवीसँग विवाह गरे, जसका गर्भबाट विन्द र अनुविन्द नाम भएका दुई पुत्रहरू उत्पन्न भएका थिए॥११॥ चेदिराज दमघोषले श्रुतदेवासँग विवाह गरेर शिशुपाल नाम भएको पुत्र उत्पन्न गराएका थिए। यो शिशुपाल नै पूर्वजन्ममा अनाचारी एवं अत्यन्त पराक्रमशाली दैत्यहरूको आदि-पुरुष हिरण्यकशिपु थियो ॥१२॥ यो हिरण्यकशिपु सम्पूर्ण लोकहरूका अत्यन्त आदरणीय परमगुरु भगवान् श्रीविष्णुद्वारा मारिएको थियो। एवं

पुनरप्यक्षतवीर्यशौर्यसम्पत् पराक्रमगुण-समाक्रान्त-सकलत्रैलोक्येश्वरप्रभावो दशाननोऽभवत् ॥१३॥ बहुकालोपभुक्त-भगवत्सकाशादेवाप्त-शरीर-पातोद्भवपुण्यफलो भगवतैव राघवरूपिणा सोऽपि निधनमुपनीतः, पुनश्चेदिराज-दमघोषपुत्रः शिशुपालनामाभवत् ॥१४॥ शिशुपालत्वे च भगवतो भूभारावतारणा-यावतीर्णांशस्य पुण्डरीकनयनाख्यस्य उपरि द्वेषानुबन्धमतितरां चकार । भगवता च निधनमुपनीतस्तत्रैव परमात्मभूते मनसस्तदेकाग्रतया तत्रैव सायुज्यमवाप ॥१५॥ भगवान् हि प्रसन्नो यथाभिलषितं ददाति, अप्रसन्नोऽपि निघ्नन् दिव्यमनुपमं स्थानं प्रयच्छति ॥१६॥

अर्को जन्ममा यही हिरण्यकशिपु अक्षतवीर्य एवं शौर्यसम्पन्न सम्पूर्ण त्रैलोक्यमा अत्यन्त प्रतापशाली दश शिर भएको रावणका रूपमा उत्पन्न भयो । जसले इन्द्रमाथि पनि विजय प्राप्त गरेको थियो ॥१३॥ त्यो रावणले अत्यन्त धेरै समयसम्म विभिन्न किसिमका भोग्य पदार्थहरूको उपभोग गर्‍यो र पछि यसको मृत्यु भागवान्कै हातबाट भयो। यसरी पुण्यबलका प्रभावले भगवान् श्रीरामद्वारा यो मारिएको थियो । त्यसपछि त्यही रावण चेदिराज दमघोषको पुत्रका रूपमा शिशुपाल नाम लिएर उत्पन्न भयो ॥१४॥ शिशुपाल भएपछि पनि पृथ्वीको भार हरण गर्नका लागि अवतार धारण गर्नुभएका परब्रह्म परमात्मा भगवान् श्रीकृष्णसँग अत्यन्त द्वेषभाव राख्न थाल्यो । त्यसपछि भगवान् श्रीकृष्णद्वारा यो मारियो र परमात्मास्वरूप भगवान्प्रति सधैं आफ्नो मनको एकाग्रता भएका कारणले उसले सायुज्य (जसमा जीवात्मा परमात्मासँग नछुट्टिने किसिमले समायोजित हुन्छ) मुक्ति प्राप्त गर्‍यो ॥१५॥ भगवान् प्रसन्न हुनुभएका अवस्थामा जसरी आफ्नो चाहना अनुसारको वर दिनुहुन्छ, त्यसरी नै अप्रसन्न हुनुभएका अवस्थामा अर्थात् अप्रसन्न हुनुभयो भने मृत्युपश्चात् अनुपम स्थान प्राप्त गराइदिनुहुन्छ ॥१६॥

श्रीविष्णुमहापुराणे चतुर्थांशे चतुर्दशोऽध्यायः ।

ॐ

## पञ्चदशःअध्यायः

## अध्याय - १५

### "शिशुपालस्य पूर्व-पूर्वजन्मवृत्तान्तस्य वसुदेवस्य च सन्तानानां वर्णनम्"

(शिशुपालको पहिले जन्महरूको वृतान्त तथा वसुदेवका सन्तानहरूको वर्णन)

मैत्रेय उवाच

हिरण्यकशिपुत्वे च रावणत्वे च विष्णुना।

अवाप निहतो भोगान प्राप्यानमरैरपि॥

न लयं तत्र तेनैव निहतः स कथं पुनः।

सम्प्राप्तः शिशुपालत्वे सायुज्यं शाश्वते हरौ।

एतदिच्छाम्यहं श्रोतुं सर्वधर्मभृतां वर।

कौतूहलपरेणैतत् पृष्टो मे वक्तुमर्हसि ॥१॥

पराशर उवाच

दैत्येश्वरस्य तु वधायाखिललोकोत्पत्तिस्थिति

विनाश-कारिणा पूर्वतनुं गृह्णता

नृसिंहरूपमाविष्कृतम्। तत्र

हिरण्यकशिपोर्विष्णुरयमित्येवं न मनस्यभूत्॥२॥

निरतिशयपुण्यजातसम्भूतमेतत् सत्त्वमिति

रजोद्रेकप्रेरितैकाग्रमतिस्तद्भावनायोगात्

ततोऽवाप्तवधहेतुकां

निरतिशयामेवाखिलत्रैलोक्याधिक्यधारिणीं

दशाननत्वे भोगसम्पदमवाप ॥३॥

**मैत्रेयले भने**–हे मुनीश्वर! हजुर सबै धर्मज्ञहरूमा सर्वश्रेष्ठ हुनुहुन्छ। त्यसकारण अत्यन्त कौतूहल उत्पन्न भएकाले म एउटा विषयमा सविस्तार सुन्न चाहन्छु। तपाईंले ममा कृपा गरेर मलाई सुनाइदिनुहोस्। ममा उत्पन्न भएको जिज्ञासा हो, यसभन्दा पहिले पनि शिशुपाल हिरण्यकशिपु र रावण भएर भगवान्द्वारा मारियो र अनेक प्रकारका देवताहरूका लागि पनि अत्यन्त दुर्लभ मानिएका भोगहरूको उपभोग गर्‍यो, तर भगवान्द्वारा मारिएपछि त्यसै जन्ममा किन भगवान्मा विलीन भएन ? यसको कारण के थियो ? र शिशुपाल भएपछि उहाँ भगवान्द्वारा नै मारिएपछि उहाँ सनातनमा किन विलीन भयो अर्थात् सायुज्य (पाँचथरी मुक्तिमध्ये एक, जसमा परमात्मामा र जीवात्मा नछुट्टिने किसिमले मिल्न जान्छन्। मुक्ति प्राप्त गर्‍यो, यसको कारण के थियो ॥१॥ **पराशरजीले भन्नुभयो**– शिशुपाल हिरण्यकशिपु भएर जन्मिएको अवस्थामा दैत्यराज हिरण्यकशिपुको वध गर्नका लागि सम्पूर्ण लोकहरूको उत्पत्ति, पालन र संहार गर्नुहुने परब्रह्म परमात्माले शरीर धारण गर्दाका समयमा नृसिंहरूप प्रकट गराउनु भएको थियो। त्यस समयमा हिरण्यकशिपुका मनमा यो नृसिंहरूपमा परमात्मा श्रीविष्णु प्रकट हुनुभएको हो भन्ने भावना उत्पन्न हुन सकेन ॥२॥ उसको मान्यता अनुसार यो अत्यन्त पुण्यहरूबाट सम्पन्न प्राणी हो। यसरी रजोगुणबाट अभिप्रेरित भएर उसले मृत्युको समयमा एकाग्रतापूर्वक यस प्रकार याचना गरेको थियो। त्यसकारण उसको अन्तरात्मामा ईश्वरीय भावना नरहेकाले भगवान्द्वारा मारिको भए तापनि उसले सायुज्य मुक्ति प्राप्त नगरेर त्रैलोक्य अर्थात् तीनौटै लोकहरूका बीचमा अत्यन्त भोग्य सम्पत्ति भएको रावणका रूपमा जन्म लियो ॥३॥ यसै कारणले

नातस्तस्मिन्ननादिनिधने परब्रह्मभूते भगवत्यना-लम्बनीकृते मनसस्तत्र लयम् ॥४॥ दशाननत्वेऽप्यन-ङ्गपराधीनतया जानकीसमासक्तचेतसो दाशरथिरूप-धारिणस्तस्यरूपदर्शनमेवासीत् नायमच्युत इत्यासक्तिर्विपद्यतोऽन्तःकरणे मानुषबुद्धिरेव केवलमभूत् ॥५॥ पुनरच्युतविनिपातमात्रफल-मखिलभूमण्डश्लाघ्य चेदिराजकुलजन्माव्याहतञ्चैश्वर्य शिशुपालत्वे चावाप ॥६॥ तत्र त्वखिलान्येव भगवन्नामकार-णान्यभवन् । ततश्च तत्कारणकृतानां तेषामशेषाणामेवाच्युतनाम्नामनवरतमनेकजन्मसंवर्द्धित-विद्वेषानुबन्धिचित्तो विनिन्दन् सन्तर्जनादिषु उच्चारणमकरोत् ॥७॥ तच्च रूपमुत्फुल्लपद्मदला-मलाक्षमत्युज्ज- वलपीतवस्त्रधारि अमल-किरीट-केयूर-कटकोपशोभितमुदारपीवरचतुर्बाहु-शङ्ख-चक्र-गदासिधरमतिप्रौढवैरानुभावादटन-भोजन-स्नानासनशयनाष्ववस्थान्तरेषु नैवापय-यावस्यात्मचेतसः ॥८॥ ततस्तमेवाक्रोशेषूच्चारयन्

गर्दा हिरण्यकशिपुको मन उहाँ अनादि, सम्पूर्ण ब्रह्माण्डका अधिपति परब्रह्म परमात्मास्वरूप भगवान् श्रीविष्णुमा नलागेको हुनाले ऊ उहाँमा विलीन भएन ॥४॥ यसरी रावणका रूपमा जन्म लिएपछि पनि उसको मन पूर्ण रूपमा कामवासनाको नियन्त्रणमा रहेकाले श्रीसीताजीमा अत्यन्त आसक्त भएको थियो। दशरथका छोरा रूप भगवान्को दर्शन मात्र भयो, तर श्रीरामचन्द्र नै स्वयं भगवान् हुनुभएको उसलाई ज्ञान हुन सकेन अर्थात् स्वयं भगवान्ले श्रीरामचन्द्रको रूप धारण गर्नुभएको कुरा उसको मनमा उत्पन्न हुन सकेन। उसको अन्तरात्माले उहाँलाई केवल मनुष्यमात्र देख्न सक्यो अर्थात् उसले उहाँमा मनुष्यबुद्धि मात्र राख्यो ॥५॥ त्यसपछि फेरि परब्रह्म परमात्मा श्रीअच्युतद्वारा मारिएको फलस्वरूप यसले सम्पूर्ण पृथ्वीलोकमा अत्यन्त प्रशंसनीय चेदिराजका कुलमा शिशुपालको रूपमा जन्म लिएर अक्षय अर्थात् नाश नहुने ऐश्वर्य प्राप्त गर्‍यो ॥६॥शिशुपालको जन्ममा अन्य पनि अनेकौं कारणहरू रहेका थिए। जसले ऊ प्रायः भगवान्का नामको स्मरण गरिरहन्थ्यो । अनेकौं जन्महरूदेखि नै उसले आफ्नो चित्तमा भगवान्प्रति द्वेषभाव राखेर तिरस्कार आदि गर्दा पनि भगवान्को निन्दा गर्दा छलपूर्वक भएपनि अच्युत भगवान्का अनेकौं नामहरूको प्रायः उच्चारण गरिरहेको हुन्थ्यो अर्थात् अपमानपूर्वक भएपनि उहाँका नामहरूको स्मरण गरिरहेको हुन्थ्यो ॥७॥त्यस समयमा पनि शत्रुताका कारणले गर्दा शिशुपालको अन्तरात्मा भोजन, स्नान, आसन-ग्रहण र शयन गर्दा आदि अवस्थाहरूमा पनि पूर्ण रूपमा फूलेको कमलको फुलका जसरी नै स्वच्छ नयन (आँखा) हुनुभएका, अत्यन्त उज्वल पीतवस्त्र (पीताम्बर) धारण गर्नुभएका, केयूर अर्थात् सुन्दर पाखुराको माथिल्लो भागमा बाँधिने बाजुबन्द, कटक अर्थात् कमरपेटी किरीट अर्थात् शिरपेचद्वारा सुशोभित, बलवान् चार हातहरूमा शङ्ख, चक्र, गदा र खड्ग (तरबार) धारण गर्नुभएका भगवान्का स्वरूपको स्मरणमा लागिरहेको हुन्थ्यो ॥८॥ त्यसपछि शिशुपाल निन्दा गर्दा समयमा पनि भगवान्को नाम उच्चारण

तमेव हृदये धारयन्नात्मवधाय भगवदस्तचक्रांशुमालोज्ज्वलमक्षयतेजःस्वरूपं परब्रह्मस्वरूपमपगतरागद्वेषादिदोषं भगवन्तमद्राक्षीत् तावच्च भगवच्चक्रेणाशु व्यापादितः । तेन तत्स्मरणदग्धाखिलाघसञ्चयो भगवतैवान्तमुपनीतस्तस्मिन्नेव लयमुपययौ ॥९॥ एतत् तवाखिलं मयाभिहितम् । भगवानिह कीर्तितः संस्मृतश्च द्वेषानुबन्धेनाप्यखिलसुरासुरादिदुर्लभं फलं प्रयच्छति किमुत सम्यग् भक्तिमताम् ॥१०॥ वसुदेवस्यानकदुन्दुभेः पौरवी–रोहिणी–मदिरा–भद्रा–देवकी–प्रमुखा बह्व्यः पत्न्योऽभवन् । बलभद्र–शारण–शठ–दुर्मदादीन् पुत्रान् रोहिण्यामानकदुन्दुभिरुत्पादयामास। बलभद्रोऽपि रेवत्यां निशठोल्मुकौ पुत्रावजनयत् । मार्ष्टि मार्ष्टिम च्छिशिशिशुसत्य–धृतिप्रमुखाः शारणस्यात्मजाः ॥११॥ भद्राश्व–भद्रबाहु–दुर्दम–भूताद्या रोहिण्याः कुलजाः ॥१२॥ नन्दोपनन्द–कृतकाद्या मदिरायास्तनयाः । भद्रायाश्चोपनिधि–गदाद्याः । वैशाल्यां च कौशिकमेकमजनयदानकदुन्दुभिः । देवक्यामपि कीर्तिमत्सुषेणोदापि–भद्रसेन–ऋजुदास–भद्रदेहाख्याः षट् पुत्रा जज्ञिरे । तांश्च सर्वानेव कंसो घातितवान् ॥१३॥

गर्दै अत्यन्त एकाग्रतापूर्वक उहाँकै चिन्तन गर्न थाल्यो र सबै समयमा आफ्नो वध गर्नका लागि भगवान्ले आफ्नो सुदर्शन चक्र चलाएको मात्र देख्न थाल्यो एवं त्यस चक्रको अत्यन्त तेजिलो प्रकाशमा परम उज्वल परब्रह्मस्वरूप रागद्वेषादि दोषहरूबाट पूर्ण रूपमा अलग अविनाशी तेजः स्वरूप अर्थात् प्रकाशमय परब्रह्म परमात्मा विराजमान हुनुभएको देख्न थाल्यो । शिशुपालमा यस किसिमको मानसिक भावना रहन्थ्यो र त्यसै अवस्थामा भगवान्ले आफ्नो सुदर्शन चक्र चलाएर त्यसको वध गरिदिनुभयो । यसकारण भगवान्द्वारा मारिएको शिशुपाल सबै पापहरूबाट पूर्ण रूपमा मुक्त भएर उहाँमा नै विलीन भयो ॥९॥ यसरी यो सबै अत्यन्त महत्त्वपूर्ण रहस्यका विषयमा मैले तिमीलाई सविस्तार बताइदिएँ । अहो ! भगवान्ले त अत्यन्त द्वेषभावपूर्वक भए पनि उहाँको कीर्तन र स्मरण गर्नेलाई त देवता र असुरहरूका लागि अत्यन्त दुर्लभ मानिएको परमफल दिनुहुन्छ भने राम्ररी भक्ति गर्ने भक्तिसम्पन्न पुरुषहरूका विषयमा त भन्नु नै के छ र? अर्थात् उनीहरूलाई त स्वतःसिद्ध रूपमा परमफल प्राप्त हुन्छ ॥१०॥ आनकदुन्दुभि वसुदेवका पौरवी, रोहिणी, मदिरा, भद्रा र देवकी आदि अनेकौं पत्नीहरू थिए । तिनीहरूमध्ये आनकदुन्दुभिका पुत्ररत्नका रूपमा रोहिणीका गर्भबाट बलभद्र, शारण, शठ र दुर्दम आदि अनेकौं पुत्रहरू उत्पन्न भएका थिए । बलभद्रका पुत्ररत्नका रूपमा रेवतीका गर्भबाट निशठ र उल्मुक नाम भएका दुई पुत्रहरू उत्पन्न भएका थिए । मार्ष्टि, मार्ष्टिमान्, शिशि र सत्यधृति आदि शारणका पुत्ररत्नका रूपमा उत्पन्न भएका थिए ॥११॥ यसका अतिरिक्त भद्राश्व, भद्रबाहु, दुर्दम र भूत आदि रोहिणीकै कुलमा उत्पन्न भएका थिए ॥१२॥ मदिराका पुत्ररत्नका रूपमा नन्द, उपनन्द र कृतक आदि उत्पन्न भएका थिए। भद्राका पुत्ररत्नका रूपमा उपनिधि र गद आदि उत्पन्न भएका थिए । आंनकदुन्दुभिले वैशालीका गर्भबाट कौशिक नाम भएका एक पुत्र उत्पन्न गराएका थिए । देवकीका गर्भबाट कीर्तिमान्, सुषेण, उदापि, भद्रसेन, ऋजुदास र भद्रदेव नाम भएका छ पुत्र उत्पन्न भएका थिए । यिनीहरू सबैलाई कंसले मारिदिएको थियो ॥१३॥ त्यसपछि देवकीका गर्भमा सातौं गर्भाधान

ानन्तरञ्च सप्तमं गर्भमर्धरात्रे भगवत्प्रहिता
ोगनिद्रा रोहिण्या जठरमपकृष्य नीतवती ॥१४॥
र्षणाच्चासावपि सङ्कर्षणाख्यामवाप ॥१५॥
तः सकलजगन्महातरुमूलभूतो भूतातीतभविष्यदादि-
कलसुरासुर-मुनि-मनुज-
नसामप्यगोचरोऽब्जभवप्रमुखैरनलप्रमुखैश्च
णम्यावनिभारावतारणाय प्रसादितो
गवाननादिमध्यो देवकीगर्भे समवततार वासुदेवः ॥१६॥
त्प्रसादविवर्द्धितमानाभिमाना च योगनिद्रा
न्दगोपपत्न्या यशोदाया गर्भमधिष्ठितवती ॥१७॥
प्रसन्नादित्यचन्द्रादिग्रहमव्यालादिभयं
स्थमानसमखिलमैवैतज्जगदपास्ताधर्ममभवत्
स्मिंश्च पुण्डरीकनयने जायमाने ॥१८॥
तेन च तेनाखिलमैवैतत् सन्मार्गवर्ति जगदक्रियत।
गवतोऽप्यत्र मर्त्यलोकेऽवतीर्णस्य
डशसहस्रण्येकोत्तरशताधिकानि स्त्रीणामभवन्।
साञ्च रुक्मिणीसत्यभामा जाम्बवती-
ारुहासिनी-प्रमुखा अष्टौ पत्न्यः प्रधानाः। तासु
ाष्टयुतानि लक्षञ्च पुत्राणां
गवानखिलमूर्तिरनादिमानजनयत् ॥१९॥
ञाञ्च प्रद्युम्न-चारुदेष्ण-साम्बादयस्त्रयोदश
ानाः। प्रद्युम्नो हि रुक्मिणस्तनयां ककुद्वतीं
मोपयेमे। तस्यामस्यानिरुद्धो जज्ञे। अनिरुद्धोऽपि
क्मण एव पौत्रीं सुभद्रां नामोपयेमे। तस्यामस्य
ज्रोऽभवत्। वज्रस्य प्रतिबाहुः, तस्यापि सुचारुः।

भएपछि भगवान्को प्रेरणाबाट अभिप्रेरित भएर योगमायाले देवकीको सातौं गर्भलाई आधारातमा आकर्षण गरेर अर्थात् तानेर रोहिणीका गर्भाशयमा स्थापना गरिदिइन् ॥१४॥ आकर्षण गरिएको भएकाले यस बालकको नाम सङ्कर्षण भयो ॥१५॥ त्यसपछि सम्पूर्ण संसाररूप महावृक्षको मूलस्वरूप भूत, भविष्य र वर्तमान समयका सबै देवता र मुनिहरूद्वारा अगोचर अर्थात् इन्द्रियबाट अनुभव हुन नसक्ने आदि, मध्य र अन्तविहीन परब्रह्म परमात्मा भगवान् श्रीवासुदेवले पृथ्वीको भारहरण गर्नका लागि अग्नि आदि प्रमुख सबै देवताहरूको प्रसन्नताका लागि सुप्रसन्न भएर देवकीका गर्भका माध्यमद्वारा अवतार लिनुभयो ॥१६॥ भगवान्को कृपा प्राप्त गरेर वृद्धिप्राप्त मान र अभिमानसहित योगनिद्रा पनि नन्दगोपकी पत्नी यशोदाका गर्भमा स्थापित हुनुभयो अर्थात् यशोदाका गर्भमा विराजमान् हुन आउनुभयो ॥१७॥ कमलनयन भगवभान् प्रकट भएपछि अर्थात् भगवान्ले जन्म लिएपछि सम्पूर्ण जगत् अत्यन्त प्रसन्न भयो अर्थात् संसारमा भएको अधर्म पूर्ण रूपमा समाप्त भयो, सूर्य चन्द्र आदि ग्रह प्रसन्न भए, हिंस्रक जनावरहरूको भय समाप्त भयो र सम्पूर्ण लोक निश्चिन्त भयो ॥१८॥ भगवान्ले जन्म ग्रहण गरिसकेपछि उहाँले सम्पूर्ण जगतलाई सन्मार्गमा लगाइदिनु भयो। यस संसारमा अवतार लिनुभएका भगवान्का सोऱ्ह हजार एक सय पत्नीहरू थिए। ती पत्नीहरूमा रुक्मिणी, सत्यभामा, जाम्बवती र चारुहासिनी जस्ता आठ पत्नीहरू मुख्य थिए। आदि र मध्यबाट पूर्ण रूपमा अलग रहनुभएका परब्रह्म परमात्मा भगवान् श्रीकृष्णले ती पत्नीहरूबाट एक लाख असी हजार पुत्रहरू उत्पन्न गराउनुभयो ॥१९॥ ती पुत्रहरूमध्ये प्रद्युम्न, चारुदेष्ण र साम्ब आदि तेऱ्ह पुत्रहरू मुख्य थिए। प्रद्युम्नले रुक्मकी पुत्री ककुद्वतीसँग विवाह गरे। ककुद्वतीका गर्भबाट अनिरुद्ध जन्मिए। अनिरुद्धको पनि रुक्मिकी नातिनी सुभद्रासँग विवाह भयो। सुभद्राका गर्भबाट वज्र नाम भएका पुत्र जन्मिए। वज्रका पुत्ररत्नका रूपमा प्रतिबाहु

एवमेनकशतसहस्रपुरुषसङ्ख्स्य यदुकुलस्य पुरुषसंख्या वर्षशतैरपि ज्ञातुं न शक्यते। यतो हि श्लोकावत्र चरितार्थौ ॥२०॥

तिस्रः कोट्यः सहस्राणामष्टाशीतिशतानि च।
कुमाराणां गृहाचार्याश्चापयोगेषु ये रताः ॥२१॥

सङ्ख्यानं यादवानां कः करिष्यति महात्मनाम्।
यत्रायुतानामयुतं लक्षेणास्ते शताधिकम् ॥२२॥

देवासुरहता ये तु दैतेयाः सुमहाबलाः।
ते चोत्पन्ना मनुष्येषु जनोपद्रवकारिणः ॥२३॥

तेषामुत्सादनार्थाय भुवि देवो यदोः कुले।
अवतीर्णः कुलशतं यत्रैकाभ्यधिकं द्विज ॥२४॥

विष्णुस्तेषां प्रमाणे च प्रभुत्वे च व्यवस्थितः।
निदेशस्थायिनस्तस्य बभूवुः सर्वयादवाः ॥२५॥

प्रसूतिं वृष्णिवीराणां यः शृणोति नरः सदा।
स सर्वपातकैर्मुक्तो विष्णुलोकं प्रपद्यते ॥२६॥

उत्पन्न भए भने प्रतिबाहुका पुत्ररत्नका रूपमा सुचारु उत्पन्न भए। यसप्रकार अनेकौं हजारौं पुरुषहरूद्वारा सुशोभित यदुकुलका पुरुषहरूको संख्या एक हजार वर्षहरूमा पनि यकिन हुन सक्दैन। यसकारण यस स्थानमा यी दुई श्लोकहरू चरितार्थ हुन्छन्। जस्तै- यदुकुमारहरूलाई धनुर्विद्याको शिक्षा दिनका लागि तीन करोड अठासी लाख घरायसी शिक्षकहरू सधैं कार्यरत रहन्थे भने ती महात्मा यादवहरूको संख्याको गणना गर्ने सामर्थ्य कसमा रहेको हुन सक्छ ? यी यादवहरूको संख्या गणना गर्न नसकिने किसिमको थियो ॥२०-२२॥ जति सम्पूर्ण महाबली दैत्यहरू देवासुर-संग्राममा मारिएका थिए, ती सबैले नै उत्पात मच्चाउनका लागि मनुष्यलोकमा राजाका रूपमा अवतार लिएका थिए ॥२३॥ हे ब्राह्मणश्रेष्ठ ! तिनीहरूको पूर्ण रूपमा विनाश गर्नका लागि परब्रह्म परमात्मा श्रीपुरुषोत्तम वासुदेवले यदुकुलमा जन्म लिनुभएको हो। यी यदुबाट एक सय एक कुल भयो।यी यादवहरूको कार्य र अकार्यको नियन्त्रण र यिनीहरूको पालन-पोषण गर्ने पुरुषोत्तम भगवान् श्रीविष्णु हुनुहुन्थ्यो तथा सम्पूर्ण यादवहरू उहाँकै आदेशमा आधारित रहेका थिए ॥२५॥ जुन मनुष्यले अत्यन्त श्रद्धा र भक्तिपूर्वक यो वृष्णिवंशको कथा सुन्दछ, ऊ सबै पापहरूबाट पूर्ण रूपमा मुक्त हुन्छ तथा उसले विष्णुलोक प्राप्त गर्दछ ॥२६॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे पञ्चदशोऽध्यायः।

ॐ

## षोडशोऽध्यायः

## अध्याय – १६

### "तुर्वसुवंशकथनम्"

(तुर्वसु वंशको वर्णन)

पराशर उवाच

**इत्येष समासतस्ते यदोर्वंशः कथितः ।**

**अथ तुर्वसोर्वंशमवधारय ॥१॥**

**तुर्वसोर्वह्निरात्मजः वह्नेर्गोभानुः, ततश्च त्रैसाम्बः, तस्माच्च करन्धमः, तस्मादपि मरुत्तः । सोऽनपत्योऽभवत् । ततश्च स पौरवं दुष्यन्तं पुत्रमकल्पयत् । एवं ययातिशापात् तद्वंशः पौरवं वंशमाश्रितवान् ॥२॥**

**पराशरजीले भन्नुभयो–** यो यदुवंशको संक्षिप विवरणका विषयमा मैले तिमीलाई बताइदिएँ । अ तुर्वसुको वंशका विषयमा सुन ॥१॥ तुर्वसुका पुत्ररत्नक रूपमा वह्नि उत्पन्न भए भने वह्निका पुत्ररत्नका रूपम गोभानु उत्पन्न भए एवं गोभानुका पुत्ररत्नका रूपम त्रैसाम्ब उत्पन्न भए र त्रैसाम्बका पुत्ररत्नका रूपम करन्धम उत्पन्न भए तथा करन्धमका पुत्ररत्नका रूपम मरुत् उत्पन्न भए। यी मरुत्का कुनै सन्तान भएनन् त्यसैले यिनले पुरुवंशीय दुष्यन्तलाई आफ्नो पुः बनाए। यसकारण ययातिको श्रापले गर्दा तुर्वसुकं वंश पुरुवंशमा आश्रित भयो ॥२॥

**इति श्रीविष्णुमहापुराणे चतुर्थांशे षोडशोऽध्यायः।**

ॐ

सप्तदशोऽध्यायः अध्याय – १७

## "द्रुह्युवंशविवरणम्"

(द्रुह्यु वंशको वर्णन)

**पराशर उवाच**

द्रुह्योस्तु तनयो बभ्रुः ॥१॥

ततः सेतुः, सेतुपुत्र आरद्वान् नाम, तदात्मजो गान्धारः, ततो धर्मः, धर्माद् धृतः, धृताद् दुर्गमः, ततः प्रचेताः,प्रचेतसः पुत्रशतमधर्मबहुलानां म्लेच्छानामुदीच्यादीनामाधिपत्यमकरोत् ॥२॥

**पराशरजीले भन्नुभयो–** द्रुह्युका पुत्ररत्नका रूपमा ब्रभु उत्पन्न भएका थिए। बभ्रुका पुत्ररत्नका रूपमा सेतु उत्पन्न भए भने सेतुका पुत्ररत्नका रूपमा आरद्वान् उत्पन्न भए एवं आरद्वान्का पुत्ररत्नका रूपमा गान्धार उत्पन्न भए। यसरी नै गान्धारका पुत्ररत्नका रूपमा धर्म उत्पन्न भए भने धर्मका पुत्ररत्नका रूपमा धृत उत्पन्न भए एवं धृतका पुत्ररत्नका रूपमा दुर्गम उत्पन्न भए। यसैगरी दुर्गमका पुत्ररत्नका रूपमा प्रचेता उत्पन्न भए तथा प्रचेताका एक सय पुत्रहरू अधर्म बहुलले उदीच्य अर्थात् उत्तर दिशाका वा उत्तर दिशामा रहेका म्लेचछहरूमाथि आफ्नो आधिपत्य अर्थात् अधिकार स्थापित गरेका थिए ॥१–२॥

इति श्रीविष्णुमहापराणे चतुर्थांशे सप्तदशोऽध्यायः ।

ॐ

## अष्टादशोऽध्यायः

## अध्याय – १८

### "ययातिपुत्रस्यानोर्वंशवर्णनम्"

(ययातीका पुत्र अनुको वंशको वर्णन)

पराशर उवाच

ययातेश्चतुर्थस्य पुत्रस्य अनोः सभानर–चाक्षुष–परमेक्षुसंज्ञास्त्रयः पुत्र–बभूवुः; सभानर–पुत्रः कालनरः कालनरात् सृञ्जयः, सृञ्जयात् परञ्जयः, तस्माज्जनमेजयः, ततो महामणिः, तस्माच्च महामनाः, तस्मादप्युशीनरतितिक्षू द्वौ पुत्रावुत्पन्नौ। उशीनरस्यापि शिवि–नृप–नर–कृमिखर्वाख्याः पञ्च पुत्रा बभूवुः। वृसदर्भ–सुवीर–कैकय–भद्रकाश्चत्वारः शिविपुत्राः। तितिक्षोरुशद्रथः पुत्रोऽभूत्। ततो हेमः, हेमात् सुतपाः, तस्माद् बलिः, यस्य क्षेत्रे दीर्घतमसा अङ्ग–वङ्ग–कलिङ्ग–सुह्य–पुण्ड्राख्यं बालेयं क्षत्रमजन्यत ॥१॥

तन्नामसन्ततिसंज्ञाश्च पञ्च विषया बभवुः ॥२॥

अङ्गसुतः पारः, ततो दिविरथः, तस्माद् धर्मरथः, ततश्चित्ररथो रोमपादसंज्ञः, यस्य पुत्रो दशरथो जज्ञे। यस्मै अजपुत्रो दशरथः शान्तां नाम कन्यामनपत्याय दुहितृत्वे युयोज ॥३॥

**पराशरजीले भन्नुभयो–** ययातिका चारौं पुत्र अनुका पुत्ररत्नका रूपमा सभानर, चाक्षुष र परमेक्षु यी तीन पुत्रहरू उत्पन्न भएका थिए। सभानरका पुत्ररत्नका रूपमा कालनर उत्पन्न भए भने कालनरका पुत्ररत्नका रूपमा सृञ्जय उत्पन्न भए एवं सृञ्जयका पुत्ररत्नका रूपमा परञ्जय उत्पन्न भए। यसैगरी परञ्जयका पुत्ररत्नका रूपमा जनमेजय उत्पन्न भए भने जनमेजयका पुत्ररत्नका रूपमा महामणि उत्पन्न भए र महामणिका पुत्ररत्नका रूपमा महामना उत्पन्न भए। महामनाका पुत्ररत्नका रूपमा उशीनर र तितिक्षु यी दुई पुत्रहरू उत्पन्न भएका थिए। उशीनरका पाँच पुत्ररत्नका रूपमा शिवि, नृप, नर, कृमि र खर्व उत्पन्न भएका थिए। शिविका चार पुत्ररत्नका रूपमा वृषदर्भ, सुवीर, कैकय र भद्रक उत्पन्न भएका थिए। तितिक्षुका पुत्ररत्नका रूपमा उशद्रथ उत्पन्न भएका थिए भने उशद्रथका पुत्ररत्नका रूपमा हेम उत्पन्न भएका थिए। यसैगरी हेमका पुत्ररत्नका रूपमा सुतपा उत्पन्न भएका थिए र सुतपाका पुत्ररत्नका रूपमा बलि उत्पन्न भएका थिए। ती बलिका शरीरबाट दीर्घतमा नाम भएका ऋषिले अङ्ग, वङ्ग, कण्डूलिङ्ग, सुह्य र पुण्ड यी पाँच बालेय नाम भएका क्षत्रियहरूलाई उत्पन्न गराए॥१॥यी बलिका पुत्रहरूको नामका अनुसार अङ्ग, वङ्ग आदि पाँचोटा देशहरूका नाम भए॥२॥यिनीहरूमध्ये अङ्गका पुत्ररत्नका रूपमा पार उत्पन्न भए भने पारका पुत्ररत्नका रूपमा दिविरथ उत्पन्न भए। यसरी नै दिविरथका पुत्ररत्नका रूपमा चित्ररथ उत्पन्न भए भने चित्ररथका पुत्ररत्नका रूपमा दशरथ उत्पन्न भए। यी दशरथका अर्का एउटा रोमपाद नाम भएका पुत्ररत्न उत्पन्न भएका थिए। ती रोमपादका अनेकौं पुत्रहरू थिए तर कन्या थिइनन्। त्यसकारण अजपुत्र दशरथले उनलाई धर्मपुत्रीका रूपमा शान्ता नाम भएकी कन्या दिए॥३॥

रोमपादाच्च तुरङ्गः, तस्माच्च पृथुलाक्षः

ततश्चम्पः । यश्चम्पां निवेशयामास ॥४॥

चम्पस्य हर्यङ्गः, ततो भद्ररथो बृहद्रथो बृहत्कर्मा

च । बृहत्कर्मणश्च बृहद्भानुः, तस्माद् बृहन्मनाः,

ततो जयद्रथः, जयद्रथस्तु ब्रह्मक्षत्रान्तराल–

सम्भूत्यां पत्न्यां विजयं नाम पुत्रमजीजनत् ॥५॥

विजयश्च धृतिं पुत्रमवाप । तस्यापि धृतव्रतः

पुत्रोऽभूत् । धृतव्रतात् सत्यकर्मा,

सत्यकर्मणस्त्वधिरथः । योऽसौ गङ्गां गतो

मञ्जूषागतं पृथापविद्धं कर्णं पुत्रमवाप ॥६॥

कर्णाद् वृषसेन इत्येते अङ्गाः ॥७॥

अतश्च पुरोर्वंशं श्रोतुमर्हसीति ॥८॥

त्यसपछि रोमपादका एक पुत्ररत्न उत्पन्न भए, जसको नाम तुरङ्ग रहेको थियो । तुरङ्गका पुत्ररत्नका रूपमा पृथुलाक्ष उत्पन्न भए भने पृथुलाक्षका पुत्ररत्नका रूपमा चम्प उत्पन्न भए, जसले चम्पापुरी नाम भएको नगर बसाएका थिए ॥४॥ चम्पका पुत्ररत्नका रूपमा हर्यङ्ग उत्पन्न भए भने हर्यङ्गका पुत्ररत्नका रूपमा भद्ररथ, बृहद्रथ र बृहत्कर्मा यी तीन उत्पन्न भएका थिए । बृहत्कर्माका पुत्ररत्नका रूपमा बृहद्भानु उत्पन्न भए भने बृहद्भानुका पुत्ररत्नका रूपमा जयद्रथ उत्पन्न भएका थिए । जयद्रथले ब्राह्मण र क्षत्रियको संसर्ग अर्थात् सम्भोगबाट उत्पन्न भएकी पत्नीका गर्भबाट विजय नाम भएका एक पुत्ररत्न उत्पन्न गराए ॥५॥ विजयका पुत्ररत्नका रूपमा धृति नाम भएका एक पुत्र उत्पन्न भएका थिए भने धृतिका पुत्ररत्नका रूपमा धृतव्रत उत्पन्न भएका थिए । यसैगरी धृतव्रतका पुत्ररत्नका रूपमा सत्यकर्मा उत्पन्न भएका थिए भने सत्यकर्माका पुत्ररत्नका रूपमा अधिरथ उत्पन्न भएका थिए । यिनै अधिरथले गङ्गामा गएका बखत पृथाले अविवाहित अवस्थामा नै सूर्यबाट उत्पन्न गराएर काठको बाकसमा राखेर गंगाजीमा बगाइदिएका कर्णलाई पुत्रका रूपमा प्राप्त गरेका थिए ॥६॥यी कर्णका पुत्ररत्नका रूपमा वृषसेन नाम भएका पुत्र उत्पन्न भएका थिए । यहाँसम्म अङ्ग वंशका विषयमा वर्णन गरियो ॥७॥ यसपश्चात् म तिमीलाई पुरुको वंशका विषयमा बताउनेछु, तिमी त्यसलाई ध्यानपूर्वक सुन ॥८॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे अष्टदशोऽध्यायः ।

ॐ

## एकोनविंशोऽअध्यायः　　　　अध्याय – १९

### "पुरुवंशकथनम्"

(पुरुवंशको कथा)

पराशर उवाच

पुरोर्जनमेजयः पुत्रस्तस्यापि प्रचिन्वान्, प्रचिन्वतः प्रवीरः, तस्मान्मनस्युः, मनस्योश्चाभयदस्तस्यापि सुद्युम्नः, ततो बहुगवः, तस्य सम्पातिः, सम्पातेरहम्पातिस्ततो रौद्राश्वः। ऋतेयु–कृतेयु–कक्षेयु–स्थण्डिलेयु–धृतेयु–स्थलेयु–सन्ततेयु–धनेयु–वनेयुनामानो रौद्राश्वस्य दशात्मजा बभूवुः ॥१॥

ऋतेयो रन्तिनारः पुत्रोऽभूत्। तंसुमप्रतिरथं ध्रुवञ्च रन्तिनारः पुत्रानवाप। अप्रतिरथात् कण्वस्तस्यापि मेधातिथिः, यतः काण्वायना द्विजा बभूवुः। तंसोरैनिलः, ततो दुष्यन्ताद्याश्चत्वारः पुत्रा बभूवुः, दुष्यन्ताच्चक्रवर्ती भरतोऽभवत्। यन्नामहेतुर्देवैः श्लोको गीयते ॥२॥

**पराशरजीले भन्नुभयो**– पुरुका पुत्ररत्नका रूपमा जनमेजय उत्पन्न भएका थिए। जनमेजयका पुत्ररत्नका रूपमा प्रचिन्वान् उत्पन्न भएका थिए भने प्रचिन्वान्‌का पुत्ररत्नका रूपमा प्रवीर उत्पन्न भएका थिए। प्रवीरका पुत्ररत्नका रूपमा मनस्यु उत्पन्न भएका थिए भने मनस्युका पुत्ररत्नका रूपमा अभयद उत्पन्न भएका थिए। यसैगरी अभयदका पुत्ररत्नका रूपमा सुद्युम्न उत्पन्न भएका थिए भने सुद्युम्नका पुत्ररत्नका रूपमा बहुगव उत्पन्न भएका थिए एवं बहुगवका पुत्ररत्नका रूपमा सम्पाति उत्पन्न भएका थिए। यसरी नै सम्पत्तिबाट अहम्पाति उत्पन्न भए। अहम्पातिका पुत्ररत्नका रूपमा रौद्राश्व उत्पन्न भएका थिए भने रौद्राश्वका पुत्ररत्नका रूपमा ऋतेयु, कृतेयु, कक्षेयु, स्थण्डिलेयु, धृतेयु, स्थलेयु, सन्ततेयु र वनेयु यी दस पुत्रहरू उत्पन्न भएका थिए ॥१॥ ऋतेयुका पुत्ररत्नका रूपमा रन्तिनार उत्पन्न भएका थिए। रन्तिनारका तीन पुत्ररत्नका रूपमा तंशु, अप्रतिरथ र ध्रुव नाम भएका तीन पुत्रहरू उत्पन्न भएका थिए। अप्रतिरथका पुत्ररत्नका रूपमा कण्व उत्पन्न भएका थिए भने कण्वका पुत्ररत्नका रूपमा मेधातिथि उत्पन्न भएका थिए। यसरी नै मेधातिथिका पुत्ररत्नका रूपमा काण्वायन नाम भएका ब्राह्मणहरू उत्पन्न भए। तंशुका पुत्ररत्नका रूपमा अनिल उत्पन्न भएका थिए भने अनिलका पुत्ररत्नका रूपमा दुष्यन्त लगायतका चार पुत्रहरू उत्पन्न भएका थिए। दुष्यन्तका पुत्ररत्नका रूपमा अत्यन्त चक्रवर्ती राजा भरत उत्पन्न भएका थिए। जसको प्रशंसामा देवताहरूले निम्न श्लोकको स्मरण गर्दछन् ॥२॥ "माता केवल छालाको अर्थात्

माता भस्त्रा पितुः पुत्रो येन जातः स एव सः।

भरस्व पुत्रं दुष्यन्त मावमंस्थाः शकुन्तलाम् ॥३॥

रेतोधाः पुत्रो उनयति नरदेव ! यमक्षयात्।

त्वञ्चास्य धाता गर्भस्य सत्यमाह शकुन्तला ॥४॥

भरतस्य च पत्नीनां ये नव पुत्रा बभूवुः नैते

ममानुरूपाः पुत्रा इत्यभिहितास्तन्मातरो जघ्नुः

परित्यागभयात् ॥५॥

ततोऽस्य पुत्रजन्मनि वितथे पुत्रार्थिनो

मरूत्सोमयाजिनो दीर्घतमसः पाष्णर्यपास्त-बृहस्प

तिवीर्य्यादुतथ्यपत्न्यां ममतायांसमुत्पन्नो

भरद्वाजाख्यः पुत्रो मरुद्भिर्दत्तः। तस्यापि

नामनिर्वचनश्लोकः पठ्यते ॥६॥

मूढे. ! भर द्वाजमिमं, भर द्वाजं बृहस्पते।

यातौ यदुक्त्वा पितरौ भरद्वाजस्ततस्त्वयम् ॥७॥

भरद्वाजश्च तस्य वितथे पुत्रजन्मनि मरुद्भिर्दत्तः,

ततो वितथसंज्ञामवाप ॥८॥

छालाबाट बनाइएको सामान राख्ने भाँडो जस्ती मात्र हुन्छिन्, पुत्रमा पूर्ण रूपमा पिताको मात्र अधिकार रहेको हुन्छ, पुत्रले जसको औरस अर्थात् विवाहिता पत्नीबाट जन्म लिन्छ, त्यो उसैको स्वरूप हुन्छ। हे दुष्यन्त ! तिमीले आफ्नो पुत्रको पालन-पोषण गर, शकुन्तलाको अपमान नगर ! ॥३॥ हे राजा दुष्यन्त ! आफ्नो वीर्यबाट उत्पन्न भएको पुत्रले आफ्ना पिताको यमलोकबाट उद्धार गरेर स्वर्गलोकमा पुऱ्याउँछ। तिमीले यस युगका लागि वीर्यदान गरेका हौ, शकुन्तलाले यो कुरा सत्य बताएकी हुन्" ॥४॥राजा भरतका तीन पत्नीहरू थिए, जसबाट उनका नौ पुत्ररत्नहरू उत्पन्न भएका थिए। राजा भरतले यी पुत्रहरू म जस्ता छैनन् भनेर आफूलाई परित्याग गरिदिनेछन् भन्ने भयका कारणले गर्दा माताहरूले ती पुत्रहरूको वध अर्थात् हत्या गरिदिए ॥५॥ यसप्रकार पुत्रजन्म विफल भएपछि चक्रवर्ती राजा भरतले मरुत्सोम नाम भएको यज्ञ गरे। त्यस समयमा मरुद्गणहरूले उनलाई भरद्वाज नाम भएका एक पुत्र उपलब्ध गराइदिए। दीघतर्मा ऋषिको खुट्टाको प्रहारबाट क्षिप्त अर्थात् फ्याँकिएको वृहस्पतिको वीर्यद्वारा उतथ्यकी पत्नी ममताका गर्भबाट भरद्वाजको जन्म भएको थियो। ती भरद्वाजको प्रशस्तिमा यस्तो श्लोक प्रचलनमा रहेको छ... ॥६॥भरद्वाजको जन्म भइसके पछि बृहस्पतिले ममतासँग भने- "हे मूर्ख ममता! यो पुत्र द्वाज अर्थात् हामी दुईबाट उत्पन्न भएको हो, यसैले तिमीले यसको पालनपोषण गर।" त्यसपश्चात् ममताले भनिन्- "हे बृहस्पति! यो पुत्र हामी दुवैबाट उत्पन्न भएको हो। त्यसकारण तिमीले यसको पालन-पोषण गर।" यस प्रकारले एक-आपसमा विवाद गर्दागर्दै उसका माता-पिता बालकलाई छाडेर गए। यसकारणले गर्दा उनको नाम भरद्वाज रहन गएको हो ॥७॥त्यसपछि पुत्रहरूको जन्म वितथ अर्थात् असफल भएपछि मरुद्गणहरूले चक्रवर्ती राजा भरतलाई पुत्रका रूपमा यिनै बालक भरद्वाज दिएका थिए। भरतका पुत्रको जन्म असफल भएकाले यिनको नाम वितथ पनि रहेको थियो ॥८॥ वितथका पुत्ररत्नका रूपमा भवन्मन्यु

वितथस्य मन्युः पुत्रोऽभूत्। बृहत्क्षत्र–महावीर्य–नर–गर्गाद्याऽभवमन्युपुत्राः। नरस्य सङ्कृतिः, सङ्कृतेः रुचिरधी–रन्तिदेवौ। गर्गाच्छिनिस्ततो गार्ग्याः शैन्याः क्षत्रोपेता द्विजातयो बभूवुः ॥९॥

महावीर्यादुरुक्षयो नाम पुत्रोऽभूत्। तस्या त्रय्यारुणः, पुष्करिण्यो कपिलश्च पुत्रत्रयमभूत्। तच्च त्रितयमपि पश्चाद् विप्रतामुपजगाम। बृहत्–क्षत्रस्य सुहोत्रः, सुहोत्राद् हस्ती, य इदं हस्तिनापुरमारोपयामास। अजमीद–द्विमीढ–पुरुमीढास्त्रयो हस्तिनस्तनयाः, अजमीढात् कण्वः, कण्वाद् मेधातिथिः, यतः काण्वायना द्विजा ॥१०॥

अजमीढस्यान्यः पुत्रो बृहदिषुः, बृहदिशोबृहद्वसुः, ततश्च बृहत्कर्मा, तस्माज्जयद्रथः। ततोऽपि विश्वजित्, ततश्च सेनजित्। रुचिराश्व–काश्य–दृढधनुर्वत्सहनुसंज्ञाः सेनजितः पुत्राः। रुचिराश्वतः पृथुसेनः, तस्मात् पारः, पारात् नीपः। तस्यैकशतं पुत्राणाम्, तेषां प्रधानः काम्पिल्याधिपतिः समरः ॥११॥

उत्पन्न भएका थिए। भवमन्युका पुत्ररत्नहरूका रूपमा बृहक्षेत्र, महावीर्य, नर र गर्ग जस्ता अनेकौ पुत्र उत्पन्न भएका थिए। नरका पुत्ररत्नका रूपमा संकृति उत्पन्न भए भने संकृतिका दुई पुत्ररत्नहरू उत्पन्न भएका थिए, जसको नाम रुचिरधी र रन्तिदेव रहेको थियो। गर्गका पुत्ररत्नका रूपमा शिनि उत्पन्न भएका थिए तथा शिनिबाट गार्ग्य र शैन्य नाम भएका क्षत्रियको संस्कार भएका ब्राह्मणहरू उत्पन्न भएका थिए ॥९॥ महावीर्यका पुत्ररत्नका रूपमा उरुक्षय नाम भएको एक पुत्र उत्पन्न भएको थियो। यी उरुक्षयका पुत्ररत्नका रूपमा त्रय्यारुण, पुष्करिण्य र कपिल यी तीन पुत्रहरू उत्पन्न भएका थिए। त्यसपछि यी तीनवटैका पुत्रहरूले ब्राह्मणत्व प्राप्त गरेका थिए अर्थात् यिनीहरूका पुत्रहरू क्षत्रिय संस्कार भएका ब्राह्मण बनेका थिए। बृहत्क्षेत्रका पुत्ररत्नका रूपमा सुहोत्र उत्पन्न भएका थिए भने सुहोत्रका पुत्ररत्नका रूपमा हस्ती उत्पन्न भएका थिए। यिनै हस्तीले हस्तिनापुर नाम भएको एउटा नगर बसाएका थिए। हस्तीका पुत्ररत्नका रूपमा अजमीढ., द्विमीढ र पुरुमीढ नाम भएका तीन पुत्रहरू उत्पन्न भएका थिए। अजमीढका पुत्ररत्नका रूपमा कण्व उत्पन्न भएका थिए र कण्वका पुत्ररत्नका रूपमा मेधातिथि उत्पन्न भएका थिए। यिनै मेधातिथिबाट नै काण्वायन अर्थात् धनुषधारी ब्राह्मणहरू उत्पन्न भए ॥१०॥ अजमीढका अर्का एउटा पुत्रको नाम बृहदिषु थियो। बृहदिषुका पुत्ररत्नका रूपमा बृहद्वसु उत्पन्न भएका थिए भने बृहद्वसुका पुत्ररत्नका रूपमा बृहत्कर्मा उत्पन भएका थिए। बृहत्कर्माका पुत्ररत्नका रूपमा जयद्रथ उत्पन्न भएका थिए। जयद्रथबाट विश्वजित् उत्पन्न भएका थिए भने विश्वजित्का पुत्ररत्नका रूपमा सेनजित् उत्पन्न भएका थिए। सेनजित्का पुत्ररत्नका रूपमा रुचिराश्व, काश्य, दृढधनु र वत्सहनु यी चार पुत्रहरू उत्पन्न भएका थिए। रुचिराश्वका पुत्ररत्नका रूपमा पृथुसेन उत्पन्न भएका थिए। यसैगरी पारका पुत्ररत्नका रूपमा नीप उत्पन्न भएका थिए। नीपका एक सय पुत्रहरूमध्ये काम्पिल्य नरेश समर विजयी थिए ॥११॥ समरका

समरस्यापि पार–सम्पार–सदश्वास्त्रयः पुत्राः । पारात् पृथुः, पृथोः सकृतिः, सकृतेर्विभ्राजः, ततश्चानुहः । स च शुकदुहितरं कीर्तिं नामोपयेमे ॥१२॥

अनुहाद् ब्रह्मदतः, ततो विष्वक्सेनः, तस्योदकसेनः, ततो भल्लाटः, तस्यात्मजो द्विमीढः, द्विमीढस्य यवीनरसंज्ञः, तस्यापि धृतिमान्, ततः सत्यधृतिः, ततश्च दृढनेमिः, तस्माच्च सुपार्श्वः, ततः सुमतिः, ततश्च सन्नतिमान्, सन्नतिमतः कृतोऽभूत् । यं हिरण्यनाभो योगमध्यापयामास, यश्चतुर्विंशतिं प्राच्यसामगानां चकार संहिताः ॥१३॥

कृताच्चोग्रायुधः येन प्राचुर्येण नृपक्षयः कृतः ॥१४॥

उग्रायुधात् क्षेम्यः, तस्मात् सुवीरः, तस्य नृपञ्जयः, ततो बहुरथः । इत्येते पौरवाः । अजमीढस्य नलिनी नाम पत्नी, तस्यां नीलसंज्ञः पुत्रोऽभवत् । तस्मादपि शान्तिः, शान्तेः सुशान्तिः, सुशान्तेः पुरुजानुः,

पुत्ररत्नका रूपमा पार, सम्पार र सदश्व यी तीन पुत्रहरू उत्पन्न भएका थिए । पारका पुत्ररत्नका रूपमा पृथु उत्पन्न भएका थिए भने पृथुका पुत्ररत्नका रूपमा सुकृति उत्पन्न भएका थिए । सुकृतिका पुत्ररत्नका रूपमा विभ्राज उत्पन्न भएका थिए भने विभ्राजका पुत्ररत्नका रूपमा अनुह उत्पन्न भएका थिए। यिनै अनुहले शुककी कन्या कीर्तिसँग विवाह गरेका थिए ॥१२॥ अनुहका पुत्ररत्नका रूपमा ब्रह्मदत्त उत्पन्न भएका थिए भने ब्रह्मदत्तका पुत्ररत्नका रूपमा विष्वक्सेन उत्पन्न भएका थिए एवं विष्वक्सेनका पुत्ररत्नका रूपमा उदक्सेन उत्पन्न भएका थिए। यसैगरी उदक्सेनका पुत्ररत्नका रूपमा भल्लाट उत्पन्न भएका थिए भने भल्लाटका पुत्ररत्नका रूपमा द्विमीढ उत्पन्न भएका थिए एवं द्विमीढका पुत्ररत्नका रूपमा यवीनर उत्पन्न भएका थिए। यवीनरका पुत्ररत्नका रूपमा धृतिमान् उत्पन्न भएका थिए भने धृतिमान्का पुत्ररत्नका रूपमा सत्वधृति उत्पन्न भएका थिए एवं सत्यधृतिका पुत्ररत्नका रूपमा दृढनेमि उत्पन्न भएका थिए । दृढनेमिका पुत्ररत्नका रूपमा सुपार्श्व उत्पन्न भएका थिए। सुमितका पुत्ररत्नका रूपमा सन्नतिमान् उत्पन्न भएका थिए भने सन्नतिमान्का पुत्ररत्नका रूपमा कृत उत्पन्न भएका थिए । यिनै कृतलाई हिरण्यनाभले योगशास्त्रको शिक्षा दिनुभएको थियो । तथा उनले प्राच्यसामहरूका चौबीस संहिताहरूको निर्माण गरे अर्थात् रचना गरेका थिए ॥१३॥ कृतका पुत्ररत्नका रूपमा उग्रायुध उत्पन्न भएका थिए । यिनै उग्रायुधले अनेकौं राजवंशीय क्षत्रियहरूको विनाश गरेका थिए ॥१४॥ उग्रायुधका पुत्ररत्नका रूपमा क्षेम्य उत्पन्न भएका थिए। क्षेम्यका पुत्ररत्नका रूपमा सुवीर उत्पन्न भएका थिए भने सुवीरका पुत्ररत्नका रूपमा नृपञ्जय उत्पन्न भएका थिए एवं नृपञ्जयका पुत्ररत्नका रूपमा बहुरथ उत्पन्न भएका थिए । यी सबै पुरुवंशीय राजाहरू भए। अजमीढका पुत्ररत्नका रूपमा नील उत्पन्न भए। नीलका पुत्ररत्नका रूपमा शान्ति उत्पन्न भए भने शान्तिका पुत्ररत्नका रूपमा सुशान्ति उत्पन्न भए। सुशान्तिका पुत्ररत्नका रूपमा पुरुजानु उत्पन्न भए भने पुरुजानुका पुत्ररत्नका रूपमा चक्षु उत्पन्न भए। चक्षुका

ततश्चक्षुः, ततो हर्यश्वः, तस्माद् मुद्गलसृञ्जय–बृहदिषु–प्रवीर–काम्पिल्याः। पञ्चानामेतेषां विषयाणां रक्षणायालमेते मत्पुत्राः, इति पित्राभिहिताः, अतस्ते पाञ्चालाः ॥१५॥

मुद्गलाच्च मौद्गल्याः क्षत्रोपेता द्विजातयो बभूवुः। मुद्गलाद् वृहदश्वः, वृहदश्वाद् दिवोदासः, अहल्या च मिथुनमभूत्। शरद्वतोऽहल्यायां शतानन्दोऽभवत्। शतानन्दात् सत्यधृतिः धनुर्वेदान्तगो जज्ञे। सत्यधृतेस्तु वराप्सरसमुर्वशीं दृष्ट्वा रेतः स्कन्नं शरस्तम्बे पपात ॥१६॥ तच्च द्विधागतमपत्यद्वयं कुमारः कन्यका च अभवत्। मृगयामुपागतः शन्तनुर्दृष्ट्वा कृपया जग्राह ॥१७॥ ततः स कुमारः कृपः, कन्या चाश्वत्थाम्नो जननी कृपी द्रोणपत्न्यभवत्। दिवोदासस्य मित्रायुः, मित्रयोश्च्यवनो नाम राजा, च्यवनात् सुदासः, ततः सौदासः सहदेवः, तस्यापि सोमकः, ततो जन्तुः शतपुत्रज्येष्ठोऽभवत्। तेषां यवीयान् पृषतः, पृषताद् द्रुपदः, तस्माद् धृष्टद्युम्नः, तस्माद् धृष्टकेतुः।

पुत्ररत्नका रूपमा हर्यश्व उत्पन्न भए भने हर्यश्वका पुत्ररत्नका रूपमा मुद्गल, सृञ्जय, बृहदिषु, प्रवीर एवं काम्पिल्य यी पाँच उत्पन्न भए। एक समयमा यिनीहरूका पिताले आफ्ना पुत्रहरू आफ्नो आधिपत्यमा रहेका पाँचोटै देशहरूको रक्षा गर्नका लागि पूर्ण रूपमा समर्थ भएको बताए। यसैले पाँच पुत्रहरूका कारणले पाञ्चालका नामबाट प्रसिद्ध भए ॥१५॥ मुद्गलबाट उत्पन्न भएका क्षत्रियहरूले कुनै कारणले ब्राह्मणत्व प्राप्त गरेकाले मौद्गल्यका नामबाट प्रसिद्ध भए। मुद्गलका पुत्ररत्नका रूपमा वृहदश्व उत्पन्न भए भने वृहदश्वका पुत्ररत्नका रूपमा दिवोदास उत्पन्न भए तथा अहल्या नाम भएकी एक कन्या उत्पन्न भइन्। अहल्याका गर्भबाट गौतमका आत्मज (विधिपूर्वक विवाह गरिएकी पत्नीबाट उत्पन्न) पुत्ररत्नका रूपमा शतानन्द उत्पन्न भए। शतानन्दका पुत्ररत्नका रूपमा सत्यधृति उत्पन्न भए। यी सत्यधृति धनुर्वेदका विशेषज्ञ थिए। एक दिन अप्सराहरूमध्ये परमसुन्दरी उर्वशीलाई देखेर सत्यधृतिको वीर्य स्खलन भएर सगरखण्डमा पऱ्यो ॥१६॥ त्यसपछि त्यो वीर्य दुई भागमा विभाजित भएर एक पुत्र र एक कन्याका रूपमा परिणत भयो। यसै समयमा राजा शन्तनु मृगको सिकार खेल्न आए। उनले पुत्र र कन्यालाई देखेपछि कृपापूर्वक ती दुवैलाई स्वीकार गरे ॥१७॥ त्यसपछि ती कुमार कृपका नामबाट प्रसिद्ध भए र कन्या कृपीका नामबाट। यिनै कृपी अश्वत्थामाकी माता र द्रोणचार्यकी पत्नी थिइन्। दिवोदासका पुत्ररत्नका रूपमा मित्रेयु उत्पन्न भए भने मित्रेयुका पुत्ररत्नका रूपमा राजा च्यवन उत्पन्न भए। च्यवनका पुत्ररत्नका रूपमा सुदास उत्पन्न भए भने सुदासका पुत्ररत्नका रूपमा सौदास उत्पन्न भए। सौदासका पुत्ररत्नका रूपमा सहदेव उत्पन्न भए भने सहदेका पुत्ररत्नका रूपमा सोमक उत्पन्न भए। सोमकका एक सय पुत्रहरूमा सबैभन्दा जेठा जह्नु र सबैभन्दा कान्छा पृषत थिए। पृषतका पुत्ररत्नका रूपमा द्रुपद उत्पन्न भए भने द्रुपदका पुत्ररत्नका रूपमा धृष्टद्युम्न उत्पन्न भए एवं धृष्टद्युम्नका पुत्ररत्नका रूपमा धृष्टकेतु उत्पन्न भए। अजमीढका अर्का एउटा

अजमीढस्यान्यो ऋक्षनामा पुत्रोऽभूत्। ऋक्षात् संवरणः, संवरणात् कुरुः, य इदं धर्मक्षेत्रं कुरुक्षेत्रं चकार ॥१८॥

सुधनुजह्नु–परीक्षित्–प्रमुखाः कुरोः पुत्रा बभूवुः। सुधनुषः सुहोत्रः, तस्माच्च्यवनः, च्यवनात् कृतकः, ततश्चोपरिचरो वसुः। बृहद्रथ–प्रत्यग्र–कुशाम्ब–मावेल्ल–मत्स्यप्रमुखा वसोः पुत्रा सप्ताजायन्त। बृहद्रथात् कुशाग्रः, तस्माद्वृषभः, ततः पुष्पवान्, तस्मात् सुधन्वा, तस्य च जम्भः। बृहद्रथाच्चान्यः शकलद्वयजन्मा जरया सन्धितो जरासन्धो नाम। तस्मात् सत्यधृतः, तस्मात् सत्यधृतः, तस्मात् सहदेवः, ततः सोमपः ततः श्रुतश्रवाः इत्येते मागधा भूभृतः ॥१९॥

ऋक्ष नाम भएका पुत्र थिए। ऋक्षका पुत्ररत्नका रूपमा संवरण उत्पन्न भए भने संवरणकापुत्ररत्नका रूपमा कुरु उत्पन्न भए एवं यिनै कुरुले धर्मक्षेत्र कुरुक्षेत्रको स्थापना गरे ॥१८॥ कुरुका पुत्ररत्नहरू सुधनु, जह्नु र परीक्षित जस्ता अनेकौं पुत्रहरू उत्पन्न भएका थिए। सुधनुका पुत्ररत्नका रूपमा सुहोत्र उत्पन्न भएका थिए भने सुहोत्रका पुत्ररत्नका रूपमा च्यवन उत्पन्न भएका थिए। च्यवनका पुत्ररत्नका रूपमा कृतक उत्पन्न भएका थिए भने कृतकका पुत्ररत्नका रूपमा उपरिचर वसु उत्पन्न भएका थिए। उपरिचर वसुका सात पुत्ररत्न उत्पन्न भएका थिए, जसमा बृहद्रथ, प्रत्यग्र, कुशाम्ब, मावेल्ल र मत्स्य मुख्य थिए। बृहद्रथका पुत्ररत्नका रूपमा कुशाग्र उत्पन्न भएका थिए भने कुशाग्रका पुत्ररत्नका रूपमा ऋषभ उत्पन्न भएका थिए। वृषभका पुत्ररत्नका रूपमा पुष्पवान् उत्पन्न भएका थिए भने पुष्पवान्का पुत्ररत्नका रूपमा सत्यधृत उत्पन्न भएका थिए। सत्यधृतका पुत्ररत्नका रूपमा सुधन्वा उत्पन्न भएका थिए भने सुधन्वाका पुत्ररत्नका रूपमा जम्भ उत्पन्न भएका थिए। बृहद्रथका अर्का एउटा पुत्ररत्न उत्पन्न भएका थिए, जुन जन्मदाकै समयमा दुई भागमा विभाजित भएका थिए। त्यसपश्चात् जरा नाम भएकी राक्षसीले त्यो दुवै भागलाई अर्थात् खण्डलाई एउटैमा समायोजन गरिदिई। त्यसकारण यी पुत्रको नाम जरासन्ध भयो। जरासन्धका पुत्ररत्नका रूपमा सत्यधृत उत्पन्न भए भने सत्यधृतका पुत्ररत्नका रूपमा सहदेव उत्पन्न भएका थिए। सहदेवका पुत्ररत्नका रूपमा सोमप उत्पन्न भएका थिए भने सोमपका पुत्ररत्नका रूपमा श्रुतश्रवा उत्पन्न भएका थिए। यसरी मैले तिमीलाई मगध राजाहरूका विषयमा बताइदिएँ ॥१९॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे एकोनविंशोऽध्यायः।

ॐ

## विंशोऽध्यायः

## अध्याय – २०

### "कुरुवंशवर्णनम्"

(कुरु–वंशको वर्णन)

पराशर उवाच

परीक्षितो जनमेजय–श्रुतसेनोग्रसेन–भीमसेनाश्चत्वारः पुत्राः ॥१॥

जह्नोस्तु सुरथो नामात्मजो बभूव ॥२॥

तस्य विदूरथः विदूरथस्य सार्वभौमः, सार्वभौमाज्जयसेनः, तस्मादारावी, ततश्चायुतायुः, अयुतायोरक्रोधनः, तस्माद् देवातिथिः, ततश्च ऋक्षोऽन्यः ॥३॥

ऋक्षाद् भीमसेनः, ततश्च दिलीपः दिलीपात् प्रतीपः, तस्यापि देवापि–शान्तनु–बाह्लीकसंज्ञास्त्रयः पुत्रा बभूवुः। देवापिर्बाल्य एवारण्यं विवेश ॥४॥

शान्तनुरवनीपतिरभवत्। अयञ्च तस्य श्लोकः पृथिव्यां गीयते

यं यं कराभ्यां स्पृशति जीर्णं यौवनमेति सः।
शान्तिञ्चाप्नोति येनाग्र्यां कर्मणा तेन शान्तनुः ॥५॥

तस्य शान्तनो राष्ट्रे द्वादशवर्षाणि देवो न ववर्ष ॥६॥

**पराशरजीले भन्नुभयो–** राजा परीक्षित्का पुत्ररत्नका रूपमा जनमेजय, श्रुतसेन, उग्रसेन र भीमसेन नाम भएका चार पुत्रहरू उत्पन्न भएका थिए ॥१॥ जह्नुका पुत्ररत्नका रूपमा सुरथ उत्पन्न भएका थिए ॥२॥ सुरथका पुत्ररत्नका रूपमा विदूरथ उत्पन्न भएका थिए भने विदूरथका पुत्ररत्नका रूपमा सार्वभौम उत्पन्न भएका थिए। सार्वभौमका पुत्ररत्नको रूपमा जयसेन उत्पन्न भएका थिए भने जयसेनका पुत्ररत्नका रूपमा आरावी उत्पन्न भएका थिए। आरावीका पुत्ररत्नका रूपमा अयुतायु उत्पन्न भएका थिए भने अयुतायुका पुत्ररत्नका रूपमा अक्रोधन उत्पन्न भएका थिए। अक्रोधनका पुत्ररत्नका रूपमा देवातिथि उत्पन्न भएका थिए भने देवातिथिका पुत्ररत्नका रूपमा ऋक्ष उत्पन्न भएका थिए। यी ऋक्ष अजमीढका पुत्र ऋक्षभन्दा अलग थिए ॥३॥ ऋक्षका पुत्ररत्नका रूपमा भीमसेन उत्पन्न भएका थिए भने भीमसेनका पुत्ररत्नका रूपमा दिलीप उत्पन्न भएका थिए। दिलीपका पुत्ररत्नका रूपमा प्रतीप उत्पन्न भएका थिए भने प्रतीपका पुत्ररत्नहरूका रूपमा देवापि, शान्तनु र बाह्लीक यी तीन उत्पन्न भएका थिए। देवापिले बाल्यावस्थामा नै सबै त्याग गरेर जङ्गल पसे ॥४॥ त्यसकारण शान्तनु राजा भए। संसारमा ती शान्तनुका विषयमा एउटा श्लोक अत्यन्त प्रसिद्ध रहेको छ। जसमा भनिएको छ– "राजा शान्तनुले आफ्नो दुवै हातहरूबाट ज–जसलाई छोइदिन्थे अर्थात् स्पर्श गरिदिन्थे, ती वृद्ध पुरुषले पनि युवावस्था प्राप्त गर्दथे। उनको स्पर्शबाट प्राणीमात्रले अत्यन्त उत्तम शान्ति प्राप्त गरेका थिए यसैले उनको नाम शान्तनु भएको थियो" ॥५॥ एक समयमा ती शान्तनु राजाका राज्यमा बाह्र वर्षसम्म वर्षाद भएन अर्थात् पानी परेन ॥६॥ त्यसपछि राज

ततश्चाशेषराष्ट्रविनाशमवेक्ष्यासौ राजा ब्राह्मणानपृच्छत् भोः! कस्मादस्मिन् राष्ट्रे देवो न वर्षति, को ममापराध इति। ते तमूचुः– अग्रजस्य तेऽर्हेयमवनिस्त्वया भुज्यते, परिवेत्ता त्वम्, इत्युक्तः। स पुनस्तानपृच्छत्, किं मया विधेयमिति। ते तस्मैः– यावद् देवापिर्न पतनादिभिर्दोषैरभिभूयते, तावत्तस्यार्हं राज्यं तदलमेतेन, तस्मै दीयताम्। इत्युक्ते तस्य मन्त्रिप्रवरेणाश्मसारिणा तत्रारण्ये तपस्विनो वेदवादविरोधवक्तारः प्रयोजिताः ॥७॥

तैरप्यत्यृजुमतेर्महीपतिपुत्रस्य बुद्धिर्वेदविरोधमार्गानुसारिण्यक्रियत ॥८॥

राजा च शान्तनुर्द्विजवचनोत्पन्नपरिवेदन– शोकस्तान् ब्राह्मणानग्रणीकृत्य अग्रजराज्यप्रदा– नायारण्यं जगाम। तदाश्रममुपगताश्च तमवनीपतिपुत्रं देवापिमुपतस्थुः। ते ब्राह्मणा वेदवादानुबद्धानि वचांसि राज्यमग्रजेन कर्त्तव्यमित्यर्थवन्ति तमूचुः। असावपि वेदवादविरोधियुक्तिदूषितमनेकप्रकारं तानाह। ततस्ते ब्राह्मणः शान्तनुमूचुः आगच्छ भो राजन्! अलमत्रातिनिर्बन्धेन, प्रशान्त एवसावनावृष्टिदोषः पतितोऽयनमादिकाल हतवेदवचनदूषणोच्चारणात्। पतिते चाग्रजे नैव परिवेद्यं भवति, इत्युक्तः शान्तनुः स्वपुरमागत्य

शान्तनुले सम्पूर्ण राष्ट्रको विनाश भइरहेको देखेर ब्राह्मणहरूसँग सोधे– हे ब्राह्मणदेवताहरू ! हाम्रो राज्यमा किन वर्षा भइरहेको छैन ? मैले के अपराध गरेको थिएँ र राज्यमा यस्तो भइरहेको हो ? त्यसपछि ब्राह्मणहरूले भने, यो सबै राज्य तपाईंका जेठा दाजुको हो र तपाईंले यसको उपभोग गरिरहनु भएको छ। त्यसकारण तपाईं परिवेत्ता अर्थात् दाजुको भन्दा पहिला विवाह गर्ने भाइ हुनुहुन्छ, यसकारणले गर्दा वर्षा नभएको हो अर्थात् पानी नपरेको हो। त्यसपछि राजा शान्तनुले भने– अब मैले के गर्नुपर्दछ ? यसरी फेरि ब्राह्मणहरूसँग सोधेपछि ब्राह्मणहरूले भने– जबसम्म तपाईंका जेठा दाजुको कुनै कारणले पतन हुँदैन, त्यस समयसम्म यो राज्य उनेकै हो। त्यसकारण यो राज्य उनैलाई सुम्पिदिनुहोस्। यो राज्यसँग तपाईंको के प्रयोजन ? ब्राह्मणहरूले यसरी बताइसकेपछि राजा शान्तनुका मन्त्री अश्मसारीले जङ्गलमा निवास गरिरहेका देवापिका नजिकमा वेदवादका विरुद्धको आचरण भएका तपस्वीहरूलाई पठाइदिए ॥७॥ उनीहरूले ती अत्यन्त सरल स्वभाव भएका राजकुमार देवापिको बुद्धिलाई वेदवादको विरोधी मार्गमा प्रवृत्त गराइदिए अर्थात् उनलाई असत् कार्यमा लगाइदिए ॥८॥ यता राजा शान्तनु पनि ब्राह्मणहरूका वचन सुनेर अत्यन्त दुःखित र शोकाकुल भएर ब्राह्मणहरूलाई अगाडि लगाएर आफ्ना जेठो दाजुलाई राज्य समर्पण गर्नका लागि जङ्गलमा गए। त्यहाँ पुगिसकेपछि ब्राह्मणहरू राजकुमार देवापिका नजिकमा उभिएर "जेठो दाजुले नै राज्य सञ्चालन गर्न उचित हुन्छ" यस प्रकारका वेदसम्मत अनेकौं कुराहरू बताउन थाले। त्यसपछि देवापिले अयुक्तियुक्त र वेदमार्गका विरोधी अनेकौं किसिमका कुराहरू बताए। त्यसपछि ब्राह्मणहरूले भने– "हे राजन् ! यस सम्बन्धमा धेरै आग्रह गरिरहनुको कुनै प्रयोजन छैन। तपाईं हिँड्नुहोस्, अब अनावष्टि दोष शान्त भयो। यो व्यक्ति अनादिकालदेखि पूजनीय रहेका वेदका वचनहरूका विरुद्धमा बोलेकाले पतित भइसक्यो। त्यसकारण जेठो

राज्यमकरोत्। वेदवादविरोधवचनोच्चारणदूषिते च ज्येष्ठेऽस्मिन् भ्रातरि देवापावखिलसस्यनिष्पत्तये ववर्ष भगवान् पर्जन्यः ॥९॥

बाह्लीकस्य सोमदत्तः पुत्रोऽभूत्। सोमदत्तस्यापि भूरि-भूरिश्रवः शल्यसंज्ञास्त्रय पुत्रा बभूवुः। शान्तनोरप्यमरनद्यां गङ्गायामुदारकीर्तिर-शेषशास्त्रार्थविद् भीष्मः पुत्रोऽभूत्। सत्यवत्याञ्च चित्राङ्गदविचित्रवीर्यौ पुत्रावजनयत् शान्तनुः। चित्राङ्गदस्तु बाल एव चित्राङ्गदेन गन्धर्वेणाहवे विनिहतः। विचित्रवीर्योऽपि काशिराजतनये अम्बिकाम्बालिके उपयेमे। तदुपभोगादिखेदाच्च यक्ष्मणा गृहीतः पञ्चत्वमगमत्। सत्यवतीनियोगाच्च मत्पुत्रः कृष्णद्वैपायनो मातुर्वचनमनतिक्रमणीयमिति विचित्रवीर्यक्षेत्रे धृतराष्ट्र-पाण्डू तत्प्रहितभुजिष्यायाञ्च विदुरमुत्पादयामास ॥१०॥

धृतराष्ट्रेऽपि दुर्य्योधन-दुःशासनादिप्रधानं पुत्रशतं

दाजु पतित भइसकेपछि भाइलाई परिवेत्ताको दोष लाग्दैन। ब्राह्मणहरूले बताइसकेपछि राजा शान्तनु फर्किएर आफ्नो नगरमा आएर फेरि राज्यको कार्य सञ्चालन गर्न थाले। यस प्रकार जेठा दाजु देवापि देववाक्यका विरोधी वचन उच्चारण गरेर दूषित भएपछि उनको राज्यमा पूर्ण रूपमा कृषि उपज अर्थात् अन्नबाली उत्पन्न हुनका लागि मेघले पनि जल वर्षाउन आरम्भ गरिदिए। त्यसपछि उनको राज्य अत्यन्त समुन्नत बन्यो ॥९॥ बाह्लीकका पुत्ररत्नका रूपमा सोमदत्त उत्पन्न भए। सोमदत्तका पुत्ररत्नहरूका रूपमा क्रमशः भूरि, भूरिश्रवा र शल्य यी तीन उत्पन्न भए। शान्तनुका पुत्ररत्नका रूपमा देवनदी गङ्गाका गर्भबाट अत्यन्त उदार एवं सम्पूर्ण शास्त्रहरूका ज्ञाता अर्थात् तत्त्वज्ञानी भीष्म नाम भएका एक पुत्र उत्पन्न भए। तथा शान्तनुकी अर्की पत्नी सत्यवतीका गर्भबाट विचित्रवीर्य र चित्राङ्गद नाम भएका दुई पुत्रहरू उत्पन्न भए। चित्राङ्गद बाल्यावस्थामा नै चित्राङ्गद नाम भएका गन्धर्वबाट मारिए। विचित्रवीर्यले काशिराजकी कन्या अम्बिका र अम्बालिकासँग विवाह गरे। तर यी दुवै कन्याहरूसँग अत्यधिक रूपमा भोगविलास गरेका कारणले गर्दा असमयमा नै क्षीण भएर क्षयरोगबाट ग्रसित भएर विचित्रवीर्यको मृत्यु भयो। त्यसपछि सत्यवतीले आज्ञा दिएपछि आफ्नी माताको आज्ञा उल्लङ्घन गर्न नहुने सम्झिएर कृष्णद्वैपायन अर्थात् वेदव्यासले विचित्रवीर्यका पत्नीहरूबाट धृतराष्ट्र र पाण्डु नाम भएका दुई पुत्र उत्पन्न गराइदिए तथा उनीहरूले पठाएकी दासीका गर्भबाट विदुरलाई उत्पन्न गराइदिए॥१०॥ धृतराष्ट्रले आफ्नी पत्नी गान्धारीका गर्भबाट दुर्योधन, दुःशासन आदि एक सय पुत्रहरू उत्पन्न गराए।

(गान्धार्याम) उत्पादयामास। पाण्डोरप्यरण्ये मृगशापोपहतप्रजाजननसामर्थ्यस्य धर्म–वायुशक्रैर्युधिष्ठिर–भीमसेनार्जुनाः कुन्त्यां नकुल–सहदेवौ च अश्विभ्यां माद्र्यां पञ्च पुत्राः समुत्पादिताः। तेषां द्रौपद्यां पञ्च पुत्रा बभूवुः। युधिष्ठिरात् प्रतिविन्ध्यः, भीमसेनात् सुतसोमः, श्रुतकीर्तिरर्जुनात्, शतानीको नकुलात्, श्रुतकर्मा सहदेवात्। अपरे च पाण्डवानामात्मजाः, तद्यथा– यौधेयी युधिष्ठिरात् देवकं पुत्रमवाप। हिडिम्बा घटोत्कचं भीमसेनात् पुत्रमवाप। काशी च भीमसेनादेव सर्वत्रगं पुत्रमवाप। सहदेवाच्च विजया सुहोत्रं नाम पुत्रं प्राप्तवती। रेणुमव्याञ्च नकुलोऽपि निरमित्रमजीजनत्। अर्जुनस्याप्युलूप्यां नागकन्यायामिरावान् नाम पुत्रोऽभूत्। मणिपुरपतिपुत्र्याञ्च पुत्रिकाधर्मेणबभ्रु वाहनं नाम पुत्रमाजीजनत् ॥११॥

सुभद्रायाञ्चार्भकत्वेऽपि योऽसावतिबलपरा–क्रममसमस्तारातिरथविजेता सोऽभिमन्युरजायत।

पाण्डु वनमा शिकार खेल्दाका अवस्थामा ऋषिको श्राप पाएर त्यसको प्रभावले सन्तानोपति गराउनमा सामर्थ्यहीन भएका थिए। त्यसकारण कुन्तीका गर्भबाट धर्म, वायु र इन्द्रले क्रमशः युधिष्ठिर, भीम र अर्जुनलाई उत्पन्न गराए एवं उनकी पत्नी माद्रीका गर्भबाट अश्विनीकुमारहरूले नकुल र सहदेवलाई उत्पन्न गराए। ती युधिष्ठिर आदि पाँच पाण्डवहरूले द्रौपदीका गर्भबाट पाँच आत्मज (अर्थात् विवाहिता पत्नीबाट उत्पन्न भएका) पुत्रहरू उत्पन्न गराए। तिनीहरूमा युधिष्ठिरका पुत्ररत्नका रूपमा प्रतिविन्ध्य, भीमसेनका पुत्ररत्नका रूपमा सुतसोम, अर्जुनका पुत्ररत्नका रूपमा श्रुतकीर्ति, नकुलका पुत्ररत्नका रूपमा शतानीक र सहदेवका पुत्ररत्नका रूपमा श्रुतकर्मा उत्पन्न भएका थिए। पाण्डवहरूका अन्य पनि अनेकौं पुत्रहरू थिए। जस्तै– यौधेयीका गर्भबाट युधिष्ठिरका देवक नाम भएका पुत्र उत्पन्न भएका थिए। भीमसेनका हिडिम्बाका गर्भबाट घटोत्कच र काशीका गर्भबाट सर्वत्रग नाम भएका पुत्र उत्पन्न भएका थिए। विजयाका गर्भबाट सहदेवका सुहोत्र नाम भएका पुत्र उत्पन्न भएका थिए। रेणुमतीका गर्भबाट नकुलका निरमित्र नाम भएका पुत्र उत्पन भएका थिए। अर्जुनले नागकन्या उलूपीका गर्भबाट इरावान् नाम भएका पुत्र उत्पन्न गराएका थिए तथा मणिपुरका राजाकी पुत्रीबाट अर्जुनले पुत्रिका–धर्मानुसार बभ्रुवाहन नाम भएका एक पुत्र उत्पन्न गराएका थिए ॥११॥ तथा सुभद्राका गर्भबाट बाल्यकालमा नै अत्यन्त पराक्रमशाली र आफ्ना शत्रुहरूमाथि विजय प्राप्त गर्न सक्ने अभिमन्यु नाम भएका एक पुत्र उत्पन्न गराएका थिए। त्यसपश्चात् कुरूकुल क्षीण भएपछि अश्वत्थामाद्वारा प्रहार गरिएको ब्रह्मास्त्रबाट उत्तराका गर्भमा नै जो पूर्ण रूपमा भष्म

**अभिमन्योरुत्तरायां परिक्षीणेषु कुरुष्वश्वत्थामप्रयुक्त-ब्रह्मास्त्रेण गर्भ एव भस्मीकृतो भगवतः सकलसुरासुरवन्दितचरणयुगलस्यात्मेच्छा-कारणमानुषरूपधारिणोऽनुभावात् पुनर्जीवितमवाप्य परीक्षित् जज्ञे ॥१२॥ योऽयं साम्प्रतमेतद् भूमण्डलमखण्डितायति धर्मेण पालयतीति ॥१३॥**

भएका थिए, तर सम्पूर्ण देवता र दैत्यहरूले जसका चरणको चिन्तन र प्रार्थना गर्दछन् तथा जसले स्वेच्छापूर्वक मायामानव स्वरूप धारणा गर्नुभएको थियो, उहाँ परब्रह्मपरमात्मा भगवान् श्रीकृष्णको प्रभावले त्यो गर्भ जीवित भएपछि अभिमन्युका पुत्ररत्नका रूपमा परीक्षित् उत्पन्न भए ॥१२॥ यिनै परीक्षित् अगाडिको समयका लागि पनि शुभमय छन् तथा अहिले पनि धर्मपूर्वक सम्पूर्ण भूमण्डलमा शासन गरिरहेका छन् ॥१३॥

**इति श्रीविष्णुमहापुराणे चतुर्थांशे विंशोऽध्यायः ।**

ॐ

## एकविंशोऽध्यायः

## अध्याय – २१

### "भाविनृपतीनां विवरणम्"

(भविष्यमा हुने राजाहरूको विवरण)

**पराशर उवाच**

**अतः परं भविष्यानहं भूमिपालान् कीर्तयिष्ये। योऽयं साम्प्रतमवनीपतिः, तस्यापि जनमेजयश्रुतसेनोग्रसेनभीमसेनाः पुत्राश्चत्वारो भविष्यन्ति ॥१॥**

**तस्यापरः शतानीको भविष्यति। योऽसौ याज्ञवल्क्याद् वेदमधीत्य कृपादस्त्राण्यवाप्य विषयविरक्तवृतिश्च शौनकोपदेशादात्मविज्ञा- नप्रवणः परं निर्वाणमवाप्स्यति ॥२॥**

**शतानीकादश्वमेधदत्तो भविता, तस्मादप्या- धिसीमकृष्णः, अधिसीमकृष्णाद् निचक्षिः, यो गङ्गयापहृते हस्तिनापुरे कौशाम्ब्यां निवत्स्यति। तस्याप्युष्णः पुत्रो भविता। उष्णाच्चित्ररथः, ततः शुचिरथः, तस्माद् वृष्णिमान्, ततः सुषेणः, तस्मादपि सुनीथः, सुनीथादृचः, ततो नृचक्षुः,**

**पराशरजीले भन्नुभयो–** यसपछि म तिमीलाई भविष्यमा हुने राजाहरूका विषयमा बताउनेछु। यस समयमा जुन परीक्षित् राजा भएका छन, तिनका पुत्ररत्नका रूपमा जनमेजय, श्रुतसेन, उग्रसेन र भीमसेन यी चार उत्पन्न हुनेछन् ॥१॥जनमेजयका पुत्ररत्नका रूपमा शतानीक उत्पन्न हुनेछन्। यी शतानीकले याज्ञवल्क्यबाट वेदको अध्ययन गरेर कृपाचार्यबाट अस्त्रविद्याको अध्ययन गरिसकेपछि विषयवासनाबाट पूर्ण रूपमा विरक्त भएर एवं शौनकको उपदेशबाट आत्मज्ञान प्राप्त गरिसकेपछि परमनिर्वाण पद प्राप्त गर्नेछन्॥२॥ शतानीकका पुत्ररत्नका रूपमा अश्वमेधदत्त नाम भएका एक पुत्र उत्पन्न हुनेछन्। अश्वमेधदत्तका पुत्ररत्नका रूपमा अधिसीमकृष्ण उत्पन्न हुने छन् र अधिसीमकृष्णका पुत्ररत्नका रूपमा निचक्षी उत्पन्न हुनेछन्। यी निचक्षी गङ्गाजीले हस्तिनापुर डुबाएपछि कौशाम्बी नगरमा गएर बस्नेछन्। निचक्षुका पुत्ररत्नका रूपमा उष्ण उत्पन्न हुनेछन्। उष्णका पुत्ररत्नका रूपमा चित्ररथ उत्पन्न हुनेछन्। चित्ररथका पुत्ररत्नका रूपमा शुचिरथ र शुचिरथका पुत्ररत्नका रूपमा वृष्णिमान् उत्पन्न हुनेछन्। वृष्णिमान्का पुत्ररत्नका रूपमा सुषेण उत्पन्न हुनेछन् एवं सुषेणका पुत्ररत्नका रूपमा सुनीथ उत्पन्न हुनेछन्। यसरी नै सुनीथका पुत्ररत्नका रूपमा ऋच उत्पन्न हुनेछन् तथा ऋचका पुत्ररत्नका रूपमा नृचक्षु उत्पन्न हुनेछन् एवं नृचक्षुका पुत्ररत्नका रूपमा सुखाबल उत्पन्न हुनेछन्। यसैगरी सुखाबलका पुत्ररत्नका रूपमा परिप्लव उत्पन्न हुनेछन्। परिप्लवका पुत्ररत्नका रूपमा सुनय उत्पन्न हुनेछन् एवं सुनयका पुत्ररत्नका रूपमा मेधावी उत्पन्न हुनेछन् तथा मेधावीका पुत्ररत्नको रूपमा नृपञ्जय उत्पन्न हुनेछन्। नृपञ्जयका

तस्यापि सुखाबलः, तस्मात् परिप्लवः, ततश्च

सुनयः, ततो मेधावी, मेधाविनो नृपञ्जयः, ततो

मृदुः, तस्मात् तिग्मः, तिग्माद् बृहद्रथः, तस्माद्

वसुदानः, ततोऽप्यपरः शतानीकः ॥३॥

तस्माच्च उदयनः, उदयनादहीनरः, ततश्च

खण्डपाणिः, ततो निरमित्रः तस्माच्च क्षेमकः ।

तत्रायं श्लोकः-

ब्रह्मक्षत्रस्य यो योनिर्वंशो राजर्षिसत्कृतः ।

क्षेमकं प्राप्य राजानं स संस्थां प्राप्स्यते कलौ ॥४॥

पुत्ररत्नका रूपमा मृदु उत्पन्न हुनेछन् एवं मृदुका पुत्ररत्नका रूपमा तिग्म उत्पन्न हुनेछन् तथा तिग्मका पुत्ररत्नका रूपमा बृहद्रथ उत्पन्न हुनेछन्। बृहद्रथका पुत्ररत्नका रूपमा वसुदान उत्पन्न हुनेछन् भने वसुदानका पुत्ररत्नका रूपमा शतानीक उत्पन्न हुनेछन्। यी शतानीक जनमेजयका पुत्र शतानीकभन्दा अलग हुन् ॥३॥ शतानीकका पुत्ररत्नका रूपमा उदयन उत्पन्न हुनेछन् भने उदयनका पुत्ररत्नका रूपमा अहिनर उत्पन्न हुनेछन्। अहिनरका पुत्ररत्नका रूपमा खण्डपाणि उत्पन्न हुनेछन् भने खण्डपाणिका पुत्ररत्नका रूपमा निरमित्र उत्पन्न हुनेछन् तथा निरमित्रका पुत्ररत्नका रूपमा क्षेमक उत्पन्न हुनेछन्। यी क्षेमकका सम्बन्धमा एउटा श्लोक बताउँदछु - जुन वंश ब्राह्मण र क्षत्रियहरूको उत्पत्तिका कारक तत्त्वका रूपमा रहेको तथा जुन वंशमा अनेकौं राजर्षिहरू उत्पन्न भइसकेका छन्, त्यही वंश क्षेमक राजाका पालामा पूर्ण रूपमा नष्ट हुनेछ ॥४॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे एकविंशोऽध्यायः ।

ॐ

## द्वाविंशोऽध्यायः अध्याय – २२

### "भावि–कालीनेक्ष्वाकुवंशीय नृपाणां वर्णनम्"

(भविष्यमा उत्पन्न हुने इक्ष्वाकुवंशीय राजाहरूको वर्णन)

पराशर उवाच

**अतश्चेक्ष्वाकवो भविष्याः पार्थिवाः कथ्यन्ते।**

**बृहद्बलस्य पुत्रो बृहत्क्षणः ॥१॥**

**तस्मादुरुक्षयः, ततो वत्सः, वत्साद् वत्सव्यूहः,**

**ततः प्रतिव्योमः, तस्यापि दिवाकरः, तस्मात्**

**सहदेवः ॥२॥**

**ततो बृहदश्वःतत्सुनुर्भानुरथः, तस्यापि सुप्रतीकः**

**ततो मरुदेवः, मरुदेवात् सुनक्षत्रः, तस्मात्**

**किन्नरः, किन्नरादन्तरिक्षः, तस्मात् सुवर्णः,**

**ततश्चामित्रजित्, ततश्च बृहद्राजः, तस्यापि धर्मी,**

**धर्मिणः, कृतञ्जयः, कृतञ्जयाद् रणञ्जयः,**

**रणञ्जयात् सञ्जयः, तस्मात् शाक्यः, शाक्यात्**

**शुद्धोदनः, तस्माद् राहुलः, ततः प्रसेनजित्, ततश्च**

**पराशरजीले भन्नुभयो–** यसपछि म तिमीलाई भविष्यमा इक्ष्वाकुवंशीय राजाहरूका विषयमा बताउनेछु। तिनीहरूमा बृहद्बलका पुत्ररत्नका रूपमा बृहत्क्षण नाम भएका एक पुत्र उत्पन्न हुनेछन् ॥१॥ बृहत्क्षणका पुत्ररत्नका रूपमा उरुक्षय उत्पन्न हुनेछन् भने उरुक्षयका पुत्ररत्नका रूपमा वत्स उत्पन्न हुनेछन्। वत्सका पुत्ररत्नका रूपमा वत्सव्यूह उत्पन्न हुनेछन्। वत्सव्यूहका पुत्ररत्नका रूपमा प्रतिव्योम उत्पन्न हुनेछन् भने प्रतिव्योमका पुत्ररत्नका रूपमा दिवाकर तथा दिवाकरका पुत्ररत्नका रूपमा सहदेव उत्पन्न हुनेछन् ॥२॥ सहदेवका पुत्ररत्नका रूपमा बृहदश्व उत्पन्न हुनेछन्। बृहदश्वका पुत्ररत्नका रूपमा भानुरथ उत्पन्न हुनेछन् भने भानुरथका पुत्ररत्नका रूपमा सुप्रतीक उत्पन्न हुनेछन्। सुप्रतीकका पुत्ररत्नका रूपमा मरुदेव उत्पन्न हुनेछन्। तथा मरुदेवका पुत्ररत्नका रूपमा सुनक्षत्र उत्पन्न हुनेछन्। सुनक्षत्रका पुत्ररत्नका रूपमा किन्नर उत्पन्न हुनेछन् एवं किन्नरका पुत्ररत्नका रूपमा अन्तरिक्ष उत्पन्न हुनेछन्। अन्तरिक्षका पुत्ररत्नका रूपमा सुवर्ण उत्पन्न हुनेछन् एवं सुवर्णका पुत्ररत्नका रूपमा अमित्रजित् उत्पन्न हुनेछन् तथा अमित्रजित्का पुत्ररत्नका रूपमा बृहद्राज र उनका पुत्ररत्नका रूपमा धर्मी उत्पन्न हुनेछन्। धर्मीका पुत्ररत्नका रूपमा कृतञ्जय उत्पन्न हुनेछन् एवं कृतञ्जयका पुत्ररत्नका रूपमा रणञ्जय उत्पन्न हुनेछन्। रणञ्जयका पुत्ररत्नका रूपमा सञ्जय उत्पन्न हुनेछन् भने सञ्जयका पुत्ररत्नका रूपमा शाक्य उत्पन्न हुनेछन् एवं शाक्यका पुत्ररत्नका रूपमा शुद्धोदन उत्पन्न हुनेछन्। शुद्धोदनका पुत्ररत्नका रूपमा राहुल उत्पन्न हुनेछन् एवं राहुलका

क्षुद्रकः, ततः कुण्डकः, तस्मादपि सुरथः, ततश्च

सुमित्रोऽन्त्यः, इत्येते चेक्ष्वाकवो बृहद्बलान्वयाः।

अत्रानुवंशश्लोकः-

इक्ष्वाकूणामयं वंशः सुमित्रान्तो भविष्यति।

यतस्तं प्राप्य राजानं स संस्थां प्राप्स्यते कलौ ॥३॥

पुत्ररत्नका रूपमा प्रसेनजित् उत्पन्न हुनेछन् र प्रसेनजितका पुत्ररत्नका रूपमा क्षुद्रक उत्पन्न हुनेछन्। क्षुद्रकका पुत्ररत्नका रूपमा कुण्डक उत्पन्न हुनेछन् एवं कुण्डकका पुत्ररत्नका रूपमा सुरथ उत्पन्न हुनेछन् भने सुरथका पुत्ररत्नका रूपमा सुमित्र उत्पन्न हुनेछन्। यी सबै इक्ष्वाकुका वंशमा बृहद्बलका सन्तान हुनेछन्। यस वंशको सम्बन्धमा यो श्लोक प्रसिद्ध रहेको छ। जसमा भनिएको छः- "यो इक्ष्वाकुवंश राजा सुमित्रसम्म मात्र रहने छ। किनकि कलियुगमा राजा सुमित्रले शासन गरेपछि यो वंश पूर्ण रूपमा समाप्त हुनेछ ॥३॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे द्वाविंशोऽध्यायः।

ॐ

## त्रयोविंशोऽध्यायः　　अध्याय – २३

### "मगधवंशवर्णनम्"

(मगधवंशको वर्णन)

पराशर उवाच

मागधानां बार्हद्रथानां भविष्याणामनुक्रमं कथयामि ॥१॥

अत्र हि वंशे महाबला जरासन्धप्रधाना बभूवुः ॥२॥

जरासन्धसुतात् सहदेवात् सोमापिः, तस्मात् श्रुतवान्, तस्याप्युतायुः, ततश्च निरमित्रः, तत्तनयः सुक्षत्रः, तस्मादपि बृहत्कर्मा, ततश्च सेनजित्, तस्माच्च श्रुतञ्जयः, ततो विप्रः, तस्य च पुत्रःशुचिनामा भविष्यति। तस्यापि क्षेम्यः, ततश्च सुव्रत सुव्रताद् धर्मः, ततः सुश्रमः, ततो दृढसेनः, ततः सुमतिः, तस्मात् सुबलः, तस्मात् सुनीतो भविता। ततः सत्यजित्, सत्यजितो विश्वजित्, तस्यापि रिपुञ्जयः, इत्येते बार्हद्रथा भूपतयो वर्षसहस्रमेकं भविष्यन्ति ॥३॥

**पराशरजीले भन्नुभयो–** अब म तिमीलाई मगधदेशमा निवास गर्ने बृहद्रथका भावी सन्तानहरूका सम्बन्धमा क्रमबद्ध रूपमा बताउनेछु। यो मगधवंशमा अत्यन्त बलशाली र पराक्रमी जरासन्ध जस्ता राजाहरूको बाहुल्यता रहनेछ ॥२॥जरासन्धका पुत्ररत्नका रूपमा सहदेव उत्पन्न हुनेछन् भने सहदेवका पुत्ररत्नका रूपमा सोमापि उत्पन्न हुनेछन्। सोमापिका पुत्ररत्नका रूपमा श्रुतवान् उत्पन्न हुनेछन् एवं श्रुतवान्का पुत्ररत्नका रूपमा अयुतायु उत्पन्न हुनेछन् र अयुतायुका पुत्ररत्नका रूपमा निरमित्र उत्पन्न हुनेछन्। निरमित्रका पुत्ररत्नका रूपमा सुक्षेत्र उत्पन्न हुनेछन् भने सुक्षेत्रका पुत्ररत्नका रूपमा बृहत्कर्मा उत्पन्न हुनेछन् एवं बृहत्कर्माका पुत्ररत्नका रूपमा सेनजित् उत्पन्न हुनेछन्। सेनजित्का पुत्ररत्नका रूपमा श्रुतञ्जय उत्पन्न हुनेछन् भने श्रुतञ्जयका पुत्ररत्नका रूपमा विप्र उत्पन्न हुनेछन् एवं विप्रका पुत्ररत्नका रूपमा शुचि उत्पन्न हुनेछन्। शुचिका पुत्ररत्नका रूपमा क्षेम्य उत्पन्न हुनेछन् भने क्षेम्यका पुत्ररत्नका रूपमा सुव्रत उत्पन्न हुनेछन् एवं सुव्रतका पुत्ररत्नका रूपमा धर्म उत्पन्न हुनेछन्। धर्मका पुत्ररत्नका रूपमा सुश्रय उत्पन्न हुनेछन् भने सुश्रयका पुत्ररत्नका रूपमा दृढसेन उत्पन्न हुनेछन् एवं दृढसेनका पुत्ररत्नका रूपमा सुमति उत्पन्न हुनेछन् तथा सुमतिका पुत्ररत्नका रूपमा सुबल उत्पन्न हुनेछन् र सुबलका पुत्ररत्नका रूपमा सुनीति उत्पन्न हुनेछन्। सुनीतका पुत्ररत्नका रूपमा सत्यजित् उत्पन्न हुनेछन् एवं सत्यजित्का पुत्ररत्नका रूपमा विश्वजित् उत्पन्न हुनेछन् तथा विश्वजित्का पुत्ररत्नका रूपमा रिपुञ्जय उत्पन्न हुनेछन्। यसरी बृहद्रथवंशीय राजाहरूले एक हजार वर्षसम्म मगधमा राज्य गर्ने छन् ॥३॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे त्रयोविंशोऽध्यायः

ॐ

## चतुर्विंशोऽध्यायः

## अध्याय – २४

### "कलिकालस्थितनृपाणां कलिधर्मस्य च वर्णनं राजवंशवर्णनोपसंहारश्च"

(कलियुगको राजाहरू र कलिधर्मको वर्णन तथा राजवंशीय वर्णनको उपसंहार)

राशर उवाच

**ाऽयं रिपुञ्जयो नाम बार्हद्रथोऽन्त्यः, तस्य**
**ुनिको नामामात्यो भविष्यति ॥१॥**

**। चैनं स्वामिनं हत्वा स्वपुत्रं**
**द्योतनामानमभिक्ष्यति। तस्यापि पालकनामा**
**त्रो भविता। ततश्च विशाखयूपः। तत्पुत्रो**
**ानकः, तस्य च नन्दिवर्द्धनः। इत्येते**
**ष्ट्यत्रिंशदुत्तरमब्दशतं पञ्च प्रद्योताः पृथिवीं**
**ोक्ष्यन्ति ॥२॥**

**तपश्च शिशुनागः, तत्पुत्रश्च काकवर्णो भविता ।**
**त्पुत्रः क्षेमधर्मा, तस्यापि क्षत्रौजाः, तत्पुत्रो**
**ाद्मसारः, ततश्चाजातशत्रुः, तस्माच्च दर्भकः,**
**र्भकाच्चोदयाश्वः, तस्मादपि नन्दिवर्द्धनः, ततो**
**हानन्दी, इत्येते शैशुनागा दश भूमिपालास्त्रीणि**
**र्षशतानि द्विषट्यधिकानि भविष्यन्ति ॥३॥**

**हान्दिसुतः शूद्रागर्भोद्भवोऽतिलुब्धो**
**हापद्मानन्दः परशुराम इवापरोऽखिलक्ष**
**ान्तकारी भविता ॥४॥**

**पराशरजीले भन्नुभयो**– बृहद्रथका वंशमा जुन अन्तिम राजा रिपुञ्जय हुनेछन्, उनका सुनिक नाम भएका एउटा मन्त्री हुनेछन् ॥१॥ यी मन्त्रीले आफ्ना स्वामी अर्थात् राजा रिपुञ्जयको हत्या गरेर आफ्नो पुत्र प्रद्योतको राज्याभिषेक गरिदिनेछन्। प्रद्योतका पुत्ररत्नका रूपमा पालक उत्पन्न हुनेछन् भने पालकका पुत्ररत्नका रूपमा विशाखयूप उत्पन्न हुनेछन्। विशाखयूपका पुत्ररत्नका रूपमा जनक उत्पन्न हुनेछन् तथा जनकका पुत्ररत्नका रूपमा नन्दिवर्धन उत्पन्न हुनेछन्। यी पाँच प्रद्योतवंशीय राजाहरूले एक सय अडतीस वर्षसम्म पृथ्वीको पालन–पोषण एवं उपभोग गर्नेछन् ॥२॥ नन्दिवर्धनका पुत्ररत्नका रूपमा शिशुनाग उत्पन्न हुनेछन्। शिशुनागका पुत्ररत्नका रूपमा काकवर्ण उत्पन्न हुनेछन् एवं काकवर्णका पुत्ररत्नका रूपमा क्षेमधर्मा उत्पन्न हुनेछन्। क्षेमधर्माका पुत्ररत्नका रूपमा क्षत्रौजा उत्पन्न हुनेछन् एवं क्षत्रौजाका पुत्ररत्नका रूपमा विद्मसार उत्पन्न हुनेछन्। विद्मसारका पुत्ररत्नका रूपमा अजातशत्रु उत्पन्न हुनेछन् एवं अजातशत्रुका पुत्ररत्नका रूपमा दर्भक उत्पन्न हुनेछन्। दर्भकका पुत्ररत्नका रूपमा उदयाश्व उत्पन्न हुनेछन् भने उदयाश्वका पुत्ररत्नका रूपमा नन्दिवर्द्धन उत्पन्न हुनेछन् एवं नन्दिवर्द्धनका पुत्ररत्नका रूपमा महानन्दी उत्पन्न हुनेछन्। यी शिशुनाभवंशीय राजाहरूले तीन सय वयसठ्ठी वर्षसम्म पृथ्वीमा शासन गर्नेछन् ॥३॥ महानन्दीका शूद्राका गर्भबाट उत्पन्न भएका महापद्मानन्द नाम भएका एक पुत्ररत्न हुनेछन्। यिनी दोस्रा परशुराम जस्तै नै सम्पूर्ण क्षत्रियहरूको विनाश गराउनमा कारकतत्त्व हुनेछन् अर्थात् यिनले सम्पूर्ण क्षत्रियहरूको सर्वनाश गरिदिनेछन् ॥४॥ त्यस

ततः प्रभृति शूद्रा भूमिपाला भविष्यन्ति। स चैकच्छत्रामनुल्लङ्घितशासनो महापद्मः पृथिवीं भोक्ष्यति ॥५॥

तस्याप्यष्टौ सुताः सुमाल्याद्या भवितारः। तस्य च महापद्मस्यानुते पृथिवीं भोक्षन्ति। महापद्मस्तत्पुत्राश्च एकं वर्षशतमवनीपतयो भविष्यान्ति। नवैव तान् नन्दान् कौटिल्यो ब्राम्हणः समुद्धरिष्यति ॥६॥

तेषामभावे मौयश्चि पृथिवीं भोक्ष्यन्ति। कौटिल्य एवं चन्द्रगुप्तं राज्येऽभिषेक्ष्यति ॥७॥

तस्यापि पुत्रो बिन्दुसारो भविष्यति। तस्यापि अशोकवर्द्धनः, ततः सुयशाः, ततो दशरथः, ततः सङ्गतः ततः शालिशूकः, तस्मात् सोमशर्मा, तस्मात् शतधन्वा, तस्याप्यनु बृहद्रथनामा भविता। एवं मौर्या दश भूपतयो भविष्यन्ति अब्दशतं सप्तत्रिंशदुत्तरम्। तेषामन्ते पृथिवीं शुङ्गा भोक्ष्यन्ति ॥८॥

ततः पुष्यमित्रः सेनापतिः स्वामिनं हत्वा राज्यं करिष्यति ॥९॥

अस्यात्मजोऽग्निमित्रः, तस्मात् सुज्येष्ठः, ततो वसुमित्रः, तस्मादप्यार्द्रकः, ततः पुलिन्दकः, ततो

समयदेखि पृथ्वीमा शूद्रजातिले शासन गर्नेछन्। ती महापद्मले शास्त्रहरूमा प्रतिपादन गरिएको राजधर्मलाई तिरस्कार गर्दै स्वेच्छाचारितापूर्वक सम्पूर्ण पृथ्वीमा शासन गर्नेछन् अर्थात् राजधर्मविरुद्ध लागेर उपभोग गर्नेछन् ॥५॥ उनका पुत्ररत्नका रूपमा सुमाली आदि आठ पुत्रहरू उत्पन्न हुनेछन् र महापद्मको मृत्युपश्चात् तिनीहरूले नै सम्पूर्ण पृथ्वीको उपभोग गर्नेछन् अर्थात् पृथ्वीमा शासन गर्नेछन्। महापद्म र उनका पुत्रहरूले सय वर्षसम्म पृथ्वीमा आफ्नो आधिपत्य स्थापित गरिरहनेछन्। अन्त्यमा कौटिल्य अर्थात् चाणक्य नाम भएका एक ब्राम्हणले यिनीहरू सबैको पूर्ण रूपमा विनाश गरिदिनेछन् ॥६॥ यसरी नन्दवंशको पूर्ण रूपमा विनाश भइसकेपछि मौर्य शूद्रहरूले पृथ्वीमा शासन गर्नेछन् अर्थात् पृथ्वीको उपभोग गर्नेछन्। कौटिल्यले नै मौर्यवंशीय राजा चन्द्रगुप्तको राज्याभिषेक गरिदिनेछन् ॥७॥ चन्द्रगुप्तका पुत्ररत्नका रूपमा विन्दुसार नाम भएका एक पुत्र उत्पन्न हुनेछन्। विन्दुसारका पुत्ररत्नका रूपमा अशोकवर्द्धन उत्पन्न हुनेछन् भने अशोकवर्द्धनका पुत्ररत्नका रूपमा सुयशा उत्पन्न हुनेछन्। सुयशाका पुत्ररत्नका रूपमा दशरथ उत्पन्न हुनेछन् एवं दशरथका पुत्ररत्नजका रूपमा सङ्गत उत्पन्न हुनेछन्। सङ्गतका पुत्ररत्नका रूपमा शालिशूक उत्पन्न हुनेछन् तथा शालिशूकका पुत्ररत्नका रूपमा सोमशर्मा उत्पन्न हुनेछन्। सोमशर्माका पुत्ररत्नका रूपमा शतधन्वा उत्पन्न हुनेछन् एवं शतधन्वाका पुत्ररत्नका रूपमा बृहद्रथ उत्पन्न हुनेछन्। यसप्रकार दश मौर्य राजाहरूले एक सय सैंतीस वर्षहरूसम्म पृथ्वीमा शासन गर्नेछन्। त्यसपछि शुङ्गवंशीय राजाहरूले पृथ्वीको उपभोग गर्नेछन् अर्थात् शासन गर्नेछन् ॥८॥ त्यसपछि पुष्यमित्र नाम भएका सेनापतिले आफ्ना स्वामी अर्थात् राजाको हत्या गरिदिएर आफैंले शासन गर्नेछन्। अर्थात् राज्य-सञ्चालन गर्नेछन् ॥९॥ यी पुष्यमित्रका पुत्ररत्नका रूपमा अग्निमित्र उत्पन्न हुनेछन् एवं अग्निमित्रका पुत्ररत्नका रूपमा सुज्येष्ठ उत्पन्न हुनेछन्। सुज्येष्ठका पुत्ररत्नका रूपमा वसुमित्र

घोषवसुः, तस्मादपि वज्रमित्रः, ततो भागवतः ॥१०॥

तस्माद् देवभूतिः, इत्येते दश शुङ्गा द्वादशोत्तरं

वर्षशतं पृथिवीं भोक्ष्यन्ति। ततः कण्वानेषा

भूर्यास्यति ॥११॥

देवभूतिं तु शुङ्गराजानं व्यसनिनं तस्यैवामात्यः

काण्वो वसुदेवनामा निपात्य स्वयमवनीं भोक्ता।

तस्य पुत्रो भूमिमित्रः, तस्यापि

नारायणः, नारायणस्य सुशर्मा, एते काण्वायनाश्चत्वारः

पञ्चचत्वारिंशद्वर्षाणि भूपतयो भविष्यन्ति।

सुशर्माणं तु काण्वं भृत्यो बलात् शिप्रकनामा हत्वा

अन्ध्रजातीयो वसुधां भोक्ष्यति। ततश्च कृष्णनामा

तद्भ्राता भूपतिर्भावी। तस्य श्रीकान्तकर्णिः,

तस्यापि पूर्णोत्सङ्गः, तत्पुत्रश्च शातकर्णिः, तस्माच्च

लम्बोदरः, तस्मात् द्विविलकः, ततो मेघस्वातिः, ततः

पटुमान्, ततश्च अरिष्टकर्मा, ततो हालः, हालात्

पुत्तलकः, ततः प्रविल्लसेनः, ततः सुन्दरः शातकर्णि,

तस्माच्चकोरः शातकर्णि ॥१२॥

उत्पन्न हुनेछन् एवं वसुमित्रका पुत्ररत्नका रूपमा आर्द्रक उत्पन्न हुनेछन्। यसरी नै आर्द्रकका पुत्ररत्नका रूपमा पुलिन्दक उत्पन्न हुनेछन् एवं पुलिन्दकका पुत्ररत्नका रूपमा घोसवसु उत्पन्न हुनेछन्। यसैगरी घोषवसुका पुत्ररत्नका रूपमा वज्रमित्र उत्पन्न हुनेछन् तथा वज्रमित्रका पुत्ररत्नका रूपमा भागवत उत्पन्न हुनेछन् ॥१०॥ यसरी नै भागवतका पुत्ररत्नका रूपमा देवभूति उत्पन्न हुनेछन्। यी दश शुङ्गवंशीय राजाहरूले एक सय बाह्र वर्षहरूसम्म पृथ्वीमा राज्य गर्नेछन् अर्थात् पृथ्वीको उपभोग गर्नेछन्। त्यसपछि यो पृथ्वी कण्ववंशीय राजाहरूको आधिपत्यमा रहनेछ ॥११॥ त्यसपछि कण्व वंशको मन्त्री वसुवदेवले शुङ्गवंशका देवभूति नाम भएका दुराचार र धूम्रपान, मादकपदार्थको सेवनजस्ता कुराका लतमा लागेका राजाको हत्या गरेर आफैँले पृथ्वीको उपभोग गर्नेछन् अर्थात् शासन गर्नेछन्। देवभूतिका पुत्ररत्नका रूपमा भूमिमित्र, भूमिमित्रका पुत्ररत्न नारायण एवं नारायणका पुत्ररत्न सुशर्मा कण्ववंशीय यी चार राजाहरूले यथासम्भव पैंतालीस वर्षहरूसम्म राज्य गर्नेछन्। आन्ध्रजातीय शिप्रक नाम भएका एक दासले कण्ववंशीय सुशर्माको हत्या गरेर स्वयं राजा हुनेछन्। त्यसपछि शिप्रकका भाइ कृष्ण राजा हुनेछन्। कृष्णका पुत्ररत्नका रूपमा श्रीकान्तकर्णि उत्पन्न हुनेछन् एवं श्रीकान्तकर्णिका पुत्ररत्नका रूपमा पूर्णोत्सङ्ग उत्पन्न हुनेछन्। पूर्णोत्सङ्गका पुत्ररत्नका रूपमा शातकर्णि उत्पन्न हुनेछन् एवं शातकर्णिका पुत्ररत्नका रूपमा लम्बोदर उत्पन्न हुनेछन्। यसैगरी लम्बोदरका पुत्ररत्नका रूपमा द्विविलक उत्पन्न हुनेछन् तथा द्विविलकका पुत्ररत्नका रूपमा मेघस्वाति उत्पन्न हुनेछन्। हालका पुत्ररत्नका रूपमा पुत्तलक उत्पन्न हुनेछन् एवं पुत्तलकका पुत्ररत्नका रूपमा प्रविल्लसेन उत्पन्न हुनेछन्। प्रविल्लसेनका पुत्ररत्नका रूपमा सुन्दर उत्पन्न हुनेछन् एवं सुन्दरका पुत्ररत्नका रूपमा शातकर्णि उत्पन्न हुनेछन् तथा शतकर्णिका पुत्ररत्नका रूपमा चकोर शातकर्णि उत्पन्न हुनेछन् ॥१२॥ चकोर शातकर्णिका पुत्ररत्नका

ततः शिवस्वातिः, ततश्च गोमतीपुत्रः, तत्पुत्रः पुलिमान्, तस्यापि शातकर्णि शिवश्रीः, ततः शिवस्कन्धः, ततो यज्ञश्रीः, ततो विजयः, ततश्चन्द्रश्रीः, तस्यापि पुलोमाचिः, एवमेते त्रिंशच्चत्वार्यब्दशतानि षट्पञ्चाशदधिकानि पृथिवीं भोक्ष्यन्ति आन्ध्रभृत्याः। सप्ताभीरा दश गर्दभिलाश्चभूभुजो भविष्यन्ति ॥१३॥

ततः षोडश शका भूजुजो भवितारः। ततश्च अष्टौ यवनाः चतुर्दश तुरुष्काः, मुण्डाश्च त्रयोदश, एकादश मौनाः, एते पृथिवीं त्रयोदश वर्षशतानि नवनवत्यधिकनि भोक्ष्यन्ति ॥१४॥

ततश्च एकादश पौरा भूपतयोऽब्दशतानि त्रीणि महीं भोक्ष्यन्ति ॥१५॥ तेषूच्छन्नेषु कैलकिला यवना भूपतयो भविष्यन्ति। मूर्द्धाभिषिक्तस्तेषां विन्ध्यशक्तिः ॥१६। ततः पुरञ्जयः, ततो र ामचन्द्रः,तस्माद्धर्मः, धर्माद् वराङ्गः, कृतनन्दनः, सुषिनन्दिः, नन्दियशाः, शिशकप्रवारी च। एते वर्षशतं षड्वर्षाणि च भविष्यन्ति।

ततस्तत्पुत्रास्त्रयोदशैव, बाह्लीकाश्च त्रयः। ततः पुष्पमित्रपट्टमित्र–पद्ममित्रास्त्रयः, दश मेकलाश्च सप्तकोशलायान्तु नवैव भूपतयो भविष्यन्ति। नैषधास्तु त एव भूपतयो भविष्यन्ति ॥१७॥

रूपमा शिवस्वाति उत्पन्न हुनेछन् एवं शिवस्वातिका पुत्ररत्नका रूपमा गोमतीपुत्र उत्पन्न हुनेछन्। गोमतीपुत्रका पुत्ररत्नका रूपमा पुलिमान् उत्पन्न हुनेछन् तथा पुलिमान्का पुत्ररत्नका रूपमा शातकर्णि शिवश्री उत्पन्न हुनेछन्। शातकर्णि शिवश्रीका पुत्ररत्नका रूपमा शिवस्कन्ध उत्पन्न हुनेछन् एवं शिवस्कन्धका पुत्ररत्नका रूपमा यज्ञश्री उत्पन्न हुनेछन् तथा यज्ञश्रीका पुत्ररत्नका रूपमा विजय उत्पन्न हुनछेन्। विजयका पुत्ररत्नका रूपमा चन्द्रश्री उत्पन्न हुनेछन् एवम् चन्द्रश्रीका पुत्ररत्नका रूपमा पुलोमाचि उत्पन्न हुनेछन्। यी आन्ध्रजातीय भृत्य अर्थात् दास वंशका तीस राजाहरूले यथासम्भव चार सय छपन्न वर्षहरूसम्म राज्य गर्नेछन्। त्यसपछि सात आभीर राजाहरू र दश गर्धमिल संज्ञा भएका राजाहरूले राज्य गर्नेछन् ॥१३॥ त्यसपछि सोऱ्ह शक राजाहरूको अभ्युदय हुनेछ। त्यसपछि आठ यवन, चौध तुर्कर, तेऱ्ह मुण्ड र एघार मौन जातीय राजाहरूले पृथ्वीमा शासन गर्नेछन्। यी सबैले तेऱ्ह सय उनान्सय वर्षहरूसम्म शासन गर्नेछन् अर्थात् पृथ्वीको उपभोग गर्नेछन् ॥१४॥त्यसपछि एघार पौरवंशीय राजाहरूले तीन सय वर्षहरूसम्म पृथ्वीको उपभोग गर्नेछन् अर्थात् साम्राज्य स्थापित गर्नेछन् ॥१५॥ अन्त्यमा उनीहरूको पूर्ण रूपमा विनाश भइसकेपछि कैलकिल नाम भएका यवनहरू राज्याभिषेक नगरी राजा हुनेछन् अर्थात् उनीहरूले शासन गर्नेछन्। तिनीहरूमा विन्ध्यशक्ति नाम भएका राजा मुख्य हुनेछन् ॥१६॥ विन्ध्यशक्तिका पुत्ररत्नका रूपमा पुरञ्जय उत्पन्न हुनेछन् एवं पुरञ्जयका पुत्ररत्नका रूपमा रामचन्द्र उत्पन्न हुनेछन्। रामचन्द्रका पुत्ररत्नका रूपमा धर्म उत्पन्न हुनेछन् तथा धर्मका पुत्ररत्नका रूपमा वराङ्ग, कृतनन्दन, सुषिनन्दि, निन्दशया र शिशकप्रवारी यी पाँच उत्पन्न हुनेछन्। यी सबैले यथासम्भव छ सय वर्षहरूसम्म राज्य गर्नेछन्। त्यसपछि तेऱ्ह पुष्पमित्र, पट्टमित्र एवं पद्ममित्र आदि तथा मेकल देशमा उत्पन्न भएका सात राजाहरूले राज्य गर्नेछन्। नौ राजाहरूले क्रमशः कोशल देशमा राज्य गर्नेछन्। त्यसपछि निषध देशमा पनि तिनीहरू नै राजा हुनेछन् ॥१७॥ त्यसपछि मगधदेशमा

ागधायां विश्वस्फटिकसंज्ञोऽन्यान् वर्णान् करि
यति कैवर्त–कटु–पुलिन्द ब्राह्मणान् राज्ये
थापयिष्यत्युत्साद्याखिलां क्षत्रजातिम्। नव
ागाः पद्मावत्यां कान्तिपुर्यां मथुरायामागङ्गाप्रयागं
ागधा गुप्ताश्च भोक्ष्यन्ति। कोशलोड्र (पुराण्ड्रक)
ाम्रलिप्तान् समुद्रतटपुरीश्च देवरक्षितो रक्षिष्यति।
कलिङ्गमाहिषिकमाहेन्द्रभीमा गुहां भोक्ष्यन्ति।
ाषाद–नैनीषिक–कालतोयान् जनपदान्
ाणिधाखंशा भोक्ष्यन्ति। स्त्रीराज्य (त्रैराज्य)
ूषिक जनपदान् कनकाह्वया भोक्ष्यन्ति।
ौराष्ट्रवन्तिशूद्रानर्वुदमरुमूभिविषयांश्च व्रात्या
द्विजा आभीरशूद्राद्याश्च भोक्ष्यन्ति।
सिन्धुतटदार्वीकोर्वी–चन्द्रभागाकाश्मीरविषयान्
ात्या म्लेच्छादयः शूद्राः भोक्ष्यन्ति। एते च
ुल्यकालाः सर्वे पृथिव्यां भूभृतो भविष्यन्ति।
ल्पप्रसादा बृहत्कोपाः सर्वकालमनृताऽधर्मरुचयः
त्री–बाल–गोवधकर्तारः परस्वादानरुचयोऽल्पसारा
दितास्तमितप्रायाः स्वल्पायुषो महेच्छा
त्यल्पधर्माश्च भविष्यन्ति ॥१८॥
श्च विमिश्रा जनपदास्तच्छीलवर्तिनो
ाजाश्रयशुष्मिणो म्लेच्छाश्चार्याश्च विपर्ययेण वर्तमानः
जाः क्षपयिष्यन्ति ॥१९॥
तश्चानुदिनमल्पाल्पह्रासाद् व्यवच्छेदाद्
र्मार्थयोर्जगतः संक्षेपो भविष्यति ॥२०॥
तश्चार्थ एवाभिजनहेतुः, धनमेवाशेषधर्महेतुः
भिरुचिरेव दाम्पत्यसम्बन्ध हेतुः, अनृतमेव

विश्वस्फटिक नाम भएका एक राजाले अन्य वर्णहरूलाई प्रवर्तित गरेर सम्पूर्ण क्षत्रियहरूको उन्मूलन (विनाश) गरेर कैवर्त, कटु, पुलिन्द र ब्राह्मणहरूलाई राज्यमा स्थापित गराउनेछन्। पद्मावतीपुरमा नागवंशीय नौ राजाले गङ्गा र प्रयागका नजिकमा कान्तिपुरी तथा मथुरामा मगधहरू तथा गुप्त राजाहरूले पृथ्वीको उपभोग गर्नेछन् अर्थात् पृथ्वीमा राज्य गर्नेछन्। देवरक्षित नाम भएका एक व्यक्तिले कोशल, आन्ध्र, पुण्ड्र, ताम्रलिप्त र समुद्रका किनारमा रहेको पुरको रक्षा गर्नेछन्। नैषध, नैनिषिक र कालतोय जस्ता जनपदको मणिधारवंशीय राजाहरूले उपभोग गर्नेछन्। त्रैराज्य र मूषिक देशहरूमा कनकवंशीय राजाहरूले राज्य गर्नेछन्। पतित भएका ब्राह्मणहरू आभीर र शूद्रजस्ताले त्यस समयमा सौराष्ट्र, अवन्ति, शूद्र, अर्बुद, मरुभूमि आदि राज्यको उपभोग गर्नेछन्। सिन्धुको किनार, दार्वीकोवी, चन्द्रभाग, काश्मीर आदि सबै देशहरूको म्लेच्छ, व्रात्य र शूद्रहरूले उपभोग गर्नेछन्। यी सबैले एकै समयमा पृथ्वीमा राज्य गर्नेछन्। यी सबै राजाहरू सधैं अप्रसन्न, अत्यन्त क्रोधी, सधैं पूर्ण रूपमा असत्य र अधर्ममा तल्लीन, स्त्री, बालक एवं गाईको हत्या गर्ने, अर्काको धनलाई आफ्नो बनाउने प्रयासमा लाग्ने तथा सूर्यको उदय र अस्तका जसरी नै अत्यन्त अल्प (कम) आयु भएका हुनेछन्। यिनीहरूको कामना अत्यन्त ठूलो रहेको हुनेछ। तर धर्मकर्म अत्यन्त कम मात्रामा गर्नेछन् ॥१८॥ यिनीहरूद्वारा सबै राज्यहरू एकापसमा समायोजित हुनेछन् र ती राजाहरूको आश्रयका प्रभावले बलवान् भएका र उनीहरूकै स्वभावको अनुसरण गर्नेहरू म्लेच्छ तथा आर्यका प्रतिकूल आचरण गर्दै सबै प्रजाहरूलाई नष्ट गरिदिनेछन् ॥१९॥ त्यसपछि प्रत्येक दिन धर्म र अर्थको अलिअलि ह्रास एवं विनाश हुँदै जाने भएकाले अन्त्यमा संसार पूर्ण रूपमा नष्ट हुनेछ ॥२०॥ त्यस समयमा धनमात्र कुलीनताको परिचायक हुनेछ। बल नै सबै धर्महरूको मेरुदण्ड हुनेछ। एकापसको अभिरुचि नै दाम्पत्य सम्बन्धको आधारशिला हुनेछ। असत्य वचनमात्र व्यवहार गर्ने आधार हुनेछ। स्त्रीलाई

व्यवहारजयहेतुः, स्त्रीत्वमेवोपभोगहेतुः
रत्नताम्रभागितैव पृथिवीहेतुः, ब्रह्मसूत्रमेव
विप्रत्वहेतुः, लिङ्गधारणमेवाश्रमहेतुः, अन्याय एव
वृत्तिहेतुः ॥२१–२२॥
दौर्बल्यमेव अवृत्तिहेतुः भयगर्भोच्चारणमेव
पण्डित्यहेतुः ॥२३॥
दानमेव धर्महेतुः, अनाढ्यतैव साधुत्वहेतुः ॥२४॥
स्नानमेव प्रसाधनहेतुः, स्वीकरणं विवाहहेतुः,
सद्वेशधार्य्येव पात्रम्, दूरायतनोदकमेव
तीर्थमित्येवमनेकदोषोत्तरे भूमण्डले सर्ववर्णेष्वेव यो
यो वलवान् स स भूपतिर्भविष्यति।
एवञ्चातिलुब्धकरभारासहाः
शैलानामन्तरद्रोणीः प्रजाः संश्रयिष्यन्ति।
मधुशाकमूलफलपत्रपुष्पाहाराश्च भविष्यन्ति,
तरुवल्कलचीरप्रावरणश्चातिबहुप्रजाः
शीतवातातपवर्षसहा भविष्यन्ति। न च कश्चित्
त्रयोविंशतिवर्षाणि जीविष्यति। अनवरतं चात्र
कलियुगे क्षयमायाष्यत्यखिल एवैष जनः ॥२५॥
श्रौतस्मार्तधर्मे विप्लवमत्यन्तमुपगते क्षीणप्राये च
कलावशेष जगत्स्रष्टुश्चराचरगुरोरनादि मध्यामयस्य
सर्वमयस्य ब्रह्ममयास्यात्मस्वरूपिणो भगवतो
वासुदेवस्यांशः सम्भलग्रामप्रधानब्राह्मण

उपभोगका लागि मात्र प्रयोग गरिनेछ। अर्थात् त्यस समयमा स्त्रीको जात, कुल आदिको विचार रहने छैन। रत्न र ताम्र (अर्थ) जोसँग जति मात्रामा रहेको हुन्छ, त्यसले त्यति मात्रामा नै पृथ्वीको उपभोग गर्नेछ। यज्ञोपवित अर्थात् जनै मात्र ब्राह्मणहरूको परिचायक हुनेछ। आश्रमका नाममा चिन्हमात्र धारण हुनेछ र अन्य सबै कार्य जीवननिर्वाहका लागि मात्र गरिनेछन् ॥२१–२२॥ दुर्बलता नै अवृत्ति अर्थात् बेरोजगारको कारक तत्त्व हुनेछ र अत्यन्त भयभीत भएर चीत्कार गर्नु नै पाण्डित्यको कारक तत्त्व हुनेछ ॥२३॥ दानमात्र धर्मको कारक तत्व हुनेछ, विपन्नता मात्र साधुत्वको कारकतत्व हुनेछ ॥२४॥ स्नान केवल प्रसाधन अर्थात् सजावटको कारकतत्व हुनेछ, स्वीकार गर्नु केवल विवाहको साधनमात्र हुनेछ अर्थात्. संस्कारादिको अभिलाषा नराखेर पारस्परिक प्रेम सम्बन्धका आधारमा मात्र दाम्पत्य सम्बन्ध स्थापित हुनेछ। सुकिलो–मुकिलोलाई मात्र सुपात्र सम्झिइनेछ, अत्यन्त टाढाको जललाई मात्र तीर्थको जल अर्थात् गङ्गाजल मानिनेछ, देखावटी सजावटमात्र गौरवको कारकतत्त्व हुनेछ। यसप्रकार सम्पूर्ण पृथ्वी अनेकौं किसिमका दोषहरूबाट पूर्ण रूपमा आवृत्त (ढाकिएको) भइसकेपछि जो बलवान् हुन्छ, त्यही राजा हुन्छ। सबै जनता अत्यन्त लोभी राजाले लगाएको करको भार थाम्न नसकेर अर्थात् असमर्थ भएर पहाड–पर्वतका फेदीमा गएर बस्न थाल्नेछन् र मह, साग, कन्दमूल, फल, पात एवं फूल खान थाल्नेछन्। त्यस समयमा मनुष्यहरूले रुखका बोक्राको कपडा लगाउनेछन् एवं जाडो–गर्मी र हावा एवं वर्षा आदिको कष्ट सहन गर्नेछन्। कुनै पनि मनुष्य तेईस वर्षभन्दा धेरै जीवित रहनेछैन। यसरी कलियुग जतिजति अन्त्यतिर गइरहेको हुन्छ, त्यति मात्रामा नै पृथ्वीको क्रमबद्ध रूपमा विनाश भइरहनेछ ॥२५॥ यसरी श्रौत र स्मार्त धर्मको पनि पूर्ण रूपमा विनाश भएपछि एवं कलियुगको अन्तिम चरणमा जो चराचरका परम गुरु हुनुहुन्छ, सम्पूर्ण जगत्को आदि र अन्त्य हुनुहुन्छ, जो अनन्तमय, सर्वमय, ब्रह्ममय र परमात्मास्वरूप हुनुहुन्छ, उहाँ परब्रह्म परमात्मा भगवान् श्रीवासुदेवको अंश सम्भल गाउँका ख्यातिप्राप्त अर्थात्

विष्णुयशसो गृहे अष्टगुणर्द्धिसमन्वितः,

कल्किरूपो जगत्यत्रावतीर्य

सकलम्लेच्छदस्युदुष्यचरणचेतसा

मशेषाणामपरिछिन्नमाह्मत्म्यशक्तिः क्षयं करिष्यति ॥२६॥

स्वधर्मेषु चाखिलं जगत् संस्थापयिष्यतीति।

अनन्तरं चाशेषकलेरवसाने प्रबुद्धानां तेषां मेव

जनपदानाममलस्फटिकविशुद्धा मतयो

भविष्यन्ति ॥२७॥

तेषाञ्च बीजभूतानामशेषमनुष्याणां परिणतानामपि

तत् कालकृतापत्यप्रसूतिर्भविष्यति ॥२८॥

तानि च तदपत्यानि कृतयुगधर्मानुसारीणि

भविष्यन्तीति ॥२९॥

यदा चन्द्रश्च सूर्यश्च तथा तिष्येबृहस्पतिः।

एकराशौ समेष्यन्ति भविष्यति तदा कृतम् ॥३०॥

अतीता वर्तमानाश्च तथैवानागताश्च ये।

एते वंशेषु भूपालाः कथिता मुनिसत्तम ॥३१॥

यावत् परीक्षितो जन्म यावन्नन्दाभिषेचनम्।

एतद्वर्षसहस्रन्तु ज्ञेयं पञ्चदशोत्तरम् ॥३२॥

सप्तर्षीणाञ्च यौ पूर्वौ दृश्येते ह्युदितौ दिवि।

तयोस्तु मध्ये नक्षत्रं दृश्यते यत् समं निशि।

तेन सप्तर्षयो युक्तास्तिष्ठन्त्यब्दशतं नृणाम् ॥३३॥

विख्यात ब्राह्मण विष्णुयशाका घरमा सम्पूर्ण ऐश्वर्यहरूबाट सम्पन्न, असीम शक्तिसम्पन्न एवं अत्यन्त प्रभावशाली महात्मा कल्किको रूपमा अवतरित भएर सम्पूर्ण म्लेच्छ, अत्याचारी एवं पापात्माहरूको संहार गर्नुहुनेछ अर्थात् तिनीहरूको पूर्ण रूपमा विनाश गरिदिनुहुनेछ ॥२६॥ भगवान्ले कल्किस्वरूप धारण गर्नुभएर सबै मनुष्यहरूलाई आआफ्नो धर्ममा स्थापित गराइदिनुहुनेछ। त्यसपछि कलियुग पूर्ण रूपमा समाप्त भइसकेपछि सम्पूर्ण मनुष्यहरू फेरि प्रबुद्ध अर्थात् बुझ्नुपर्ने कुरालाई राम्ररी बुझ्न सक्ने हुनेछन् एवं उनीहरूको बुद्धि स्यमन्तकमणि जस्तै अत्यन्त विशुद्ध हुनेछ ॥२७॥ त्यसपछि तत्काल उत्पन्न भएका ती सम्पूर्ण बीजस्वरूप सबै मनुष्यहरूको अभिवृद्धि हुनेछ र त्यस समयमा उनीहरूका सन्तानहरू पनि उत्पन्न हुनेछन् ॥२८॥ त्यसपछि यसरी उत्पन्न भएका तिनीहरूका सबै सन्तानले त्यस समयमा सत्ययुगकै धर्महरूको अनुसरण गर्नेछन् अर्थात् व्यवहारमा ल्याउनेछन् ॥२९॥ त्यस विषयमा यसरी वर्णन गरिन्छ, जुन समयमा चन्द्रमा, सूर्य एवं बृहस्पति पुष्य नक्षत्रमा अवस्थित भएर एउटै राशिमा आउँछन्, त्यसै समयमा सत्ययुगको आरम्भ हुनेछ अर्थात् त्यस समयदेखि सत्ययुग आउनेछ ॥३०॥ हे मुनिश्रेष्ठ! मैले तिमीलाई यी सम्पूर्ण वंशहरूको भूत, भविष्य र वर्तमानका राजाहरूका विषयमा सविस्तार बताइदिएँ ॥३१॥ राजा परीक्षित्को जन्म भएदेखि नन्दको अभिषेक हुँदासम्मको समयावधि एक हजार पाँच सय वर्षको समय रहेको बुझ्नुपर्दछ अर्थात् तिनीहरूले एक हजार पाँच सय वर्षको अवधिसम्म पृथ्वीको उपभोग गर्नेछन् ॥३२॥ सप्तर्षिहरूमध्ये जुन पुलस्त्य र क्रतु दुई नक्षत्र आकाशमा सबैभन्दा पहिला देखिन्छन्, तिनीहरूका बीचमा रात्रिका समयमा जुन दक्षिणी रेखामा समान्तरमा अवस्थित अश्विनी आदि नक्षत्र रहेका छन् तिनीहरूमध्ये प्रत्येक नक्षत्रमा सप्तर्षिहरूले एक-एक सय वर्षसम्म निवास गर्दछन् ॥३३॥ हे ब्राह्मण श्रेष्ठ! राजा परिक्षित्का समयमा ती सप्तर्षिहरूले मघा नक्षत्रमा निवास गरेका

ते तु पारीक्षिते काले मघास्वासन् द्विजोत्तम।

तदा प्रवृत्तश्च कलिर्द्वादशाब्दाशतात्मकः ॥३४॥

यदैव भगवद्विष्णोरंशो यातो दिवं द्विज।

वसुदेवकुलोद्भूतस्तदैव कलिरागतः ॥३५॥

यावत् स पादपद्मभ्यां पस्पर्शेमां वसुन्धराम्।

तावत् पृथ्वीपरिष्वङ्गे समर्थो नाभवत् कलिः ॥३६॥

गते सनातनस्यांशे विष्णोस्तत्र भुवो दिवम्।

तत्यज सानुजो राज्यं धर्मपुत्रो युधिष्ठिरः ॥३७॥

विपरीतानि दृष्ट्वा च निमित्तानि स पाण्डवः।

याते कृष्णे चकाराथ सोऽभिषेकं परीक्षितः ॥३८॥

प्रयास्यन्ति यदा ते च पूर्वाषाढां महर्षयः।

तदा नन्दात् प्रभृत्येष कलिर्वृद्धिं गमिष्यति ॥३९॥

यस्मिन् कृष्णो दिवं यातस्तस्मिन्नेव तदाहनि।

प्रतिपन्नं कलियुगं तस्य संख्यां निबोध मे ॥४०॥

त्रीणि लक्षाणि वर्षाणां द्विज! मानुषसंख्यया।

षष्टिश्चैव सहस्राणि भविष्यत्येष वै कलिः ॥४१॥

शतानि तानि दिव्यानि सप्त पञ्च च संख्यया।

निःशेषेण गते तस्मिन् भविष्यति पुनः कृतम् ॥४२॥

थिए। त्यसै समयदेखि बाह्र सय वर्ष आयु भएको कलियुग आरम्भ भएको थियो ॥३४॥ हे ब्राह्मण! जुन समयमा श्रीविष्णुका अंशवतार एवं वसुदेवका सुपुत्र भगवान् श्रीकृष्ण आफ्नो परमधाममा जानुभएको थियो, त्यसै समयमा पृथ्वीमा कलियुगको आगमन अर्थात् प्रवेश भएको थियो ॥३५॥ परब्रह्म परमात्मा श्रीकृष्णले जुन दिनसम्म आफ्ना चरणकमलहरूद्वारा पृथ्वीलाई स्पर्श गरिरहनुभएको थियो, त्यस दिनसम्म कलियुग पृथ्वीलाई स्पर्श गर्न समर्थ भएको थिएन अर्थात् कलियुगले पृथ्वीमा प्रवेश गर्न सकेको थिएन ॥३६॥ त्यसपश्चात् जुन समयमा सनातन भगवान् श्रीविष्णुका अंशावतार भगवान् श्रीकृष्णले पृथ्वीको परित्याग गरिसकेपछि अर्थात् उहाँ आफ्नो परमधाममा जानुभएपछि धर्मका पुत्र राजा युधिष्ठिरले आफ्ना भाइहरूसहित आफ्नो राज्यको परित्याग गरिदिएका थिए ॥३७॥ परब्रह्म परमात्मा श्रीकृष्ण अन्तर्ध्यान हुनुभएपछि अर्थात् आफ्नो परमधाममा जानु भएपछि राजा युधिष्ठिरले अमङ्गलसूचक सबै विपरीत लक्षणहरू देखिसकेपछि आफ्नो राज्यमा परीक्षित्लाई राज्याभिषेक गरिदिए अर्थात् उनलाई राजा बनाइदिए ॥३८॥ त्यस समयमा सप्तर्षिहरू यसभन्दा पहिले बताइएको क्रमानुसार पूर्वाषाढा नक्षत्रमा जानेछन्। त्यस समयबाट आरम्भ भएर राजा नन्दको राज्यकालसम्म कलियुगको प्रभाव बढ्नेछ ॥३९॥ जुन दिन परब्रह्म परमात्मा भगवान् श्रीकृष्ण आफ्नो परमधाममा जानुभएको थियो, त्यसै दिन कलियुगले पृथ्वीमा प्रवेश गरेको थियो। अब तिमी मबाट कलियुगको वर्षगणनाका विषयमा अर्थात् त्यसका वर्षको संख्याका सम्बन्धमा सुन ॥४०॥ हे ब्राह्मणश्रेष्ठ! मनुष्यहरूका वर्षहरूको संख्याअनुसार कलियुग तीन लाख साठी हजार वर्षहरूसम्म विद्यमान रहन्छ अर्थात् यो समयसीमासम्म यसले पृथ्वीमा निवास गर्नेछ ॥४१॥ त्यसपछि कलियुगको समयावधि समाप्त भइसकेपछि दिव्य संख्याका अनुसार बाह्र सय वर्षहरूसम्म सत्ययुग विद्यमान रहनेछ अर्थात् यो समयसीमासम्म सत्ययुगले पृथ्वीमा आफ्नो प्रभाव पार्नेछ ॥४२॥ हे ब्राह्मणश्रेष्ठ मैत्रेय! प्रत्येक युगमा

ब्राह्मणः क्षत्रिया वैश्याः शूद्राश्च द्विजसत्तम ।

युगे युगे महात्मानः समतीताः सहस्रशः ॥ ४३॥

बहुत्वान्नामधेयानां परिसंख्या कुले कुले ।

पुनरुक्तबहुत्वात्तु न मया परिकीर्तिता ॥४४॥

देवापिः पौरवो राजा मरुश्चेक्ष्वाकुवंशजः ।

महायोगबलोपेतौ कलापग्रामसंश्रयौ ॥४५॥

कृते युग इहागत्य क्षत्रप्रवर्तकौ हि तौ ।

भविष्यतो मनोर्वंशे बीजभूतौ व्यवस्थितौ ॥४६॥

एतेन क्रमयोगेन मनुपुत्रैर्वसुन्धरा ।

कृतत्रेतादिसंज्ञानि युगानि त्रीणि भुज्यते ॥४७॥

कलौ तु बीजभूतास्ते केचित् तिष्ठन्ति भूतले ।

यथैव देवापिमरु साम्प्रतं समवस्थितौ ॥४८॥

एष तूद्देशतो वंशस्तवोक्तो भूभुजा मया ।

निखिलो गदितुं शक्यो नैव जन्मशतैरपि ॥४९॥

एते चान्ये च भूपाला यैरत्र क्षितिमण्डले ।

कृतं ममत्वं मोहान्धैर्नित्येऽनित्यकलेवरैः ॥५०॥

कथं ममेयमचला मत्पुत्रस्य कथं मही ।

मद्वंशस्येति चिन्तार्त्ता जग्मुरन्तमिमे नृपाः ॥५१॥

हजारौंका संख्यामा ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र माहात्मा भइसकेका छन् ॥४३॥ तिनीहरूको संख्या अत्यधिक भएका कारणले तथा ती सबैमा समानता रहेकाले कुलहरूमा पुनरुक्ति हुने आशंकाबाट भयभीत भएर मैले तिनीहरूको नामका विषयमा वर्णन नगरेको हो ॥४४॥ महायोगी पुरुवंशीय राजा देवापि र इक्ष्वाकुकुलमा उत्पन्न भएका राजा मरु यी दुवै योगबलबाट पूर्णरूपमा सम्पन्न भएर रहेका छन् र यिनीहरूले कलाप नाम भएको गाउँमा निवास गर्नेछन् ॥४५॥ सत्य युगको आरम्भ भएपछि यिनीहरूले फेरि मर्त्यलोकमा आएर क्षत्रिय वंश प्रवर्द्धन गर्नेछन् अर्थात् क्षत्रियहरूको अभिवृद्धि गराउनेछन् । यिनीहरू भविष्यमा उत्पन्न हुने मनुवंशको बीजस्वरूप भएर रहेका छन् ॥४६॥ यसरी यी मनुका पुत्रहरूले सत्ययुग, त्रेतायुग र द्वापर युग यी तीनोटै युगहरूमा पृथ्वीको उपभोग गर्नेछन् अर्थात् पृथ्वीमा आफ्नो शासन स्थापित गराउनेछन् ॥४७॥ त्यसपश्चात् कलियुगमा तिनीहरूमध्ये कोहीकोही भविष्यमा मनुका सन्तानको बीजका स्वरूपमा अवस्थित रहनेछन्, जसरी वर्तमान अवस्थामा देवापि र मरु विद्यमान रहेका छन् ॥४८॥ यसप्रकार मैले तिम्रा लागि सम्पूर्ण राजका वंशहरूका विषयमा संक्षेपमा बताइदिएँ । यिनीहरूका सम्बन्धमा पूर्ण रूपमा वर्णन गर्ने कार्य त सय जन्महरूमा पनि सम्भव छैन अर्थात् यिनीहरूको सविस्तारपूर्वक वर्णन गर्ने कार्य सय जन्ममा पनि सकिँदैन ॥४९॥ अनित्य शरीरको आवरणमा रहेका यी सबै राजाहरूले पूर्ण रूपमा मोहका नियन्त्रणमा परेर आफूलाई नित्य र अविनाशी सम्झँदै कल्पकल्पान्तसम्म स्थायी रहने यस भूमण्डललाई ममत्व गर्दै अर्थात् आफ्नो सम्झँदै यहाँबाट गइसकेका छन् ॥५०॥ यो पृथ्वी अर्थात् राज्य कस्तो नीति अपनाउँदा सधैं मेरा पुत्रहरू तथा मेरा वंशजहरूका अधीनमा रहिरहला, यस प्रकारको चिन्तन गर्दागर्दै अर्थात् यस्तो चिन्ताबाट व्याकुल भइरहेका सबै राजाहरूको विनाश अर्थात् मृत्यु भइसकेको छ ॥५१॥ तथा यिनीहरूभन्दा पहिलेका सबै राजाहरू पनि यस्तै किसिमको चिन्ता

तेभ्यः पूर्वतराश्चान्ये तेभ्यस्तेभ्यस्तथापरे।

भविष्याश्चैव यास्यन्ति तेषामन्ये च येऽप्यनु ॥५२॥

विलोक्यात्मजयोद्योग–यात्राव्यग्रान् नराधिपान्।

पुष्पप्रहासैः शरदि हसतीव वसुन्धरा ॥५३॥

मैत्रेय! पृथिवीगीतान् श्लोकांश्चात्र निबोध मे।

यानाह धर्मध्वजिने जनकायासितो मुनिः ॥५४॥

पृथिव्युवाच

कथमेष नरेन्द्राणां मोहो बुद्धिमतामपि।

येन फेनसधर्माणोऽप्यतिविश्वस्तचेतसः ॥५५॥

पूर्वमात्मजयं कृत्वा जेतुमिच्छन्ति मन्त्रिणः।

ततो भृत्यांश्च पौरांश्च जिगीषन्ते तथा रिपून् ॥५६॥

क्रमेणानेन जेष्यामो वयं पृथ्वीं ससागराम्।

इत्यासक्तधियो मृत्युं न पश्यन्त्यविदूरगम ॥५७॥

समुद्रावरणं याति मन्मण्डलमथो वशम्।

कियदात्यजयादेतन्मुक्तिरात्मजये फलम् ॥५८॥

उत्सृज पूर्वजा याता यां नादाय गतः पिता।

तां ममेति विमूढत्वाज्जेतुमिच्छन्ति पार्थिवाः ॥५९॥

गर्दै मृत्युका मुखमा समाहित भएका थिए र भविष्यका राजाहरू पनि यसै किसिमको चिन्ता गर्दागर्दै मृत्युका मुखमा समाहित हुनेछन् अर्थात् उनीहरू पनि पृथ्वीको परित्याग गरेर जानेछन् ॥५२॥ यसप्रकार आफ्नो विजयका लागि प्रत्येक क्षेत्रमा अत्यन्त व्यग्र भइरहेका राजाहरूलाई देखेर पृथ्वी शरद् ऋतुमा पूर्ण रूपमा फुलेको फूलहरूका रूपमा हाँसिरहेकी जस्तै देखिन्छिन् ॥५३॥ मैत्रेय! यस विष्यामा म पृथ्वीद्वारा बताइएका केही श्लोकहरू बताउनेछु, तिनीहरूलाई तिमी सुन। प्राचीनकालमा असित मुनिले धर्मात्मा राजा जनकलाई केही श्लोकका विषयमा बताएका थिए ॥५४॥ **पृथ्वीले भनिन्**– अहो! अत्यन्त बुद्धिमान् भए तापनि यी राजाहरूमा यो कस्तो मोह उत्पन्न भइरहेको छ, जसका प्रभावले गर्दा पानीको फोकाजस्तो अल्पकालीन अर्थात् क्षणिक भए पनि आफ्नो स्थिरतामा यस्तो विश्वास राख्दछन् अर्थात् आफूलाई नित्य र अविनाशी सम्भिरहेका हुन्छन् ॥५५॥ यी राजाहरूले सबैभन्दा पहिले आफैँमाथि विजय प्राप्त गर्दछन्, त्यसपछि आफ्ना मन्त्रीहरूमाथि विजय प्राप्त गर्दछन् तथा यसपछि क्रमबद्ध रूपमा आफ्ना भृत्य अर्थात् आफूले पालनपोषण गर्न योग्य, नगरवासी एवं शत्रुहरूमाथि विजय प्राप्त गर्ने अभिलाषा राख्दछन् ॥५६॥ 'यसैअनुसार म समुद्रसहित यो सम्पूर्ण पृथ्वीमा विजय प्राप्त गर्दछु अर्थात् सम्पूर्ण समुद्रसहित पृथ्वीमा आफ्नो आधिपत्य स्थापित गराउँछु' यसरी बुद्धिबाट अत्यन्त मोहित भएका यी राजाहरूले आफ्नै नजिकमा विद्यमान रहेको मृत्युलाई देख्न सक्दैनन् अर्थात् त्यसलाई देखिरहेका हुँदैनन् ॥५७॥ यदि समुद्रद्वारा घेरिएको सम्पूर्ण पृथ्वीमण्डल आफ्नो नियन्त्रणमा भए तापनि आत्म–विजयीका अगाडि यसको कुनै मूल्य रहँदैन। किनकि मोक्ष प्राप्त गर्नका लागि सबैभन्दा पहिले आफ्नै आत्मामाथि अनिवार्य रूपमा विजय गर्नुपर्दछ ॥५८॥ जुन पृथ्वीलाई परित्याग गरेर यिनीहरूका पूर्वजहरू गएका थिए तथा जसलाई यिनका पिताहरूले पनि आफैँसँग लैजान सकेनन् र परित्याग गरेर गए, यस प्रकारको मलाई आफ्नो व्यक्तिगत सम्भिएर अत्यन्त मूर्ख बन्दै यी राजाहरूले ममाथि विजय प्राप्त गर्ने कामना राख्दछन् ॥५९॥ यो पृथ्वी मेरो हो, यसरी

मत्कृते पितृपुत्राणां भ्रातृणाञ्चापि विग्रहाः ।

जायन्तेऽत्यन्तमोहेन ममताधृतचेतसाम् ॥६०॥

पृथ्वी ममेयं सकला ममैषा

ममान्वयस्यापि च शाश्वतेयम् ।

यो यो मृतो ह्यत्र बभूव राजा

कुबुद्धिरासीदिति तस्य तस्य ॥६१॥

दृष्ट्वा ममत्वादृतचित्तमेकं

विहाय मां मृत्युपथं व्रजन्तम् ।

तस्यानु यस्तस्य कथं ममत्वं

हृद्यास्पदं मत्प्रभवं करोति ॥६२॥

पृथ्वी ममैशाषु परित्यजैनां

वदन्ति ये दूतमुखैः स्वशत्रुम् ।

नराधिपास्तेषु ममातिहासः

पुनश्च मूढेषु दयाभ्युपैति ॥६३॥

पराशर उवाच

इत्येते धरणीगीता श्लोका मैत्रेय ! यैः श्रुताः ।

ममत्वं विलयं याति तापन्यस्तं यथा हिमम् ॥६४॥

इत्येष कथितः सम्यङ् मनोर्वंशो मया तव ।

यत्र स्थितिप्रवृत्तस्य विष्णोरंशांशका नृपाः ॥६५॥

पृथ्वीप्रति अन्यन्त आसक्त भएर राजाहरू अत्यन्त मोहित भएका कारणले गर्दा उनीहरूले बाबु, छोरा, दाजुभाइ र आफन्तहरूसँग एकापसमा युद्ध गर्दछन् अर्थात् पृथ्वी प्राप्त गर्ने सिलसिलामा उनीहरूले आफूबाहेक अन्य सबैलाई आफ्नो शत्रु सम्झन्छन् ॥६०॥ यस पृथ्वीमा जो जो राजा भइसकेका छन्, ती सबैमा यस किसिमको कुबुद्धि रह्यो, जसको प्रभावले गर्दा यी सबैले "यो सम्पूर्ण पृथ्वी मेरो मात्र हो एवं यसमा अर्थात् पृथ्वीमा सधैं मेरा वंशजहरूको मात्र आधिपत्य कायम रहनेछ अर्थात् म र मेरा सन्तानहरूले मात्र पृथ्वीमा शासन गर्नेछन् ।" यस प्रकारको भावना राख्दछन् ॥६१॥ यस प्रकार ममा अत्यन्त ममतापूर्ण भाव राख्ने एक राजालाई मलाई परित्याग गरेर मृत्युका मुखमा गइरहेका देखिसकपछि पनि उसको उत्तराधिकारीले आफ्नो बुद्धि अत्यन्त मोहित भएका कारणले आफ्नो अन्तरात्मामा मप्रति अत्यन्त आसक्तिपूर्ण भावा राखिरहेको हुन्छ ॥६२॥ जुन राजाहरूले आफ्नो दूतका माध्यमद्वारा आफ्ना शत्रुहरूलाई 'यो भूमिमा मेरो मात्र स्वामित्व रहेको छ, त्यसकारण तिमीहरू आफ्नो जीवनको रक्षा गर्न चाहन्छौ भने यो भूमि परित्याग गरेर भाग' यसरी खबर पठाउँछ, त्यसका प्रति मलाई अत्यधिक रूपमा हाँस्न मन लाग्दछ र त्यो मूर्ख राजाप्रति ममा दयाको भाव पनि उत्पन्न हुन्छ ॥६३॥ **पराशरजीले भन्नुभयो–** हे मैत्रेय ! पृथ्वीद्वारा बताइएका यी श्लोकहरूमा जसले ध्यान पुऱ्याउँछ अर्थात् यी श्लोकहरूको अभिप्राय मनन गर्दछ, त्यसमा उत्पन्न भएको ममता त्यसरी नै विलीन भएर जान्छ, जसरी सूर्यको तातो प्रकाशमा राखिएको वा रहेको बरफ वा हिउँ पग्लिएर जान्छ ॥६४॥ यसप्रकार मैले तिमीलाई मनुको वंशका सम्बन्धमा यथार्थ रूपमा बताइदिएँ । जुन वंशका सबै राजाहरू परब्रह्म परमात्मा भगवान् श्रीविष्णुका अंशबाट उत्पन्न भएका थिए अर्थात् उनीहरूले जन्म लिएका थिए ॥६५॥ जुन मनुष्यले

श्रृणुयाद् य इमं मक्त्या मनुवंशमनुक्रमात्।
तस्य पापमशेषं वै प्रणश्यत्यमलात्मनः ॥६६॥
धनधान्यर्द्धिमतुलां प्राप्नोत्यव्याहतेन्द्रियः।
श्रुत्वैवमखिलं वंशं प्रशस्तं शशिसूर्ययोः ॥६७॥
इक्ष्वाकुजह्नुमान्धातृसगराविक्षितान् रघून्।
ययातिनहुषाद्यांश्च ज्ञात्वा निष्ठामुपागतान्।
महाबलान् महावीर्याननन्तधनसञ्चयान् ॥६८॥
कृतान् कालेन बलिना कथाशेषान् नराधिपान्।
श्रुत्वा न पुत्रदारादौ गृहक्षेत्रादिके तथा।
द्रव्यादौ च कृतप्रज्ञो ममत्वं कुरुते नरः ॥६९॥
तप्तं तपो यैः पुरुषप्रवीरै-
रुद्बाहुभिर्वर्षगणाननेकान्।
इष्ट्याश्च यज्ञा बलिनोऽतिवीर्याः
कृतास्तु कालेन कथावशेषाः ॥७०॥
पृथुः समस्तान् प्रचचार लोका
नव्याहतो योऽरिविदारिचक्रः।
स कालवाताभिहतो विनष्टः
क्षिप्तं यथा शाल्मलितूलमग्नौ ॥७१॥
यः कार्तवीर्यो बुभुजे समस्तान्
द्वीपान् समाक्रम्य हतारिचक्रः।
कथा प्रसङ्गेष्वभिधीयमानः
स एव सङ्कल्पविकल्पहेतुः ॥७२॥

अत्यन्त श्रद्धा र भक्तिपूर्वक यी मनुवंशीय राजाहरूको कथाका बारेमा सुन्दछ, उसको बुद्धि यथार्थ रूपमा अत्यन्त निर्मल हुन्छ र सम्पूर्ण पापहरू पूर्ण रूपमा नष्ट हुनेछन् ॥६६॥ जुन मनुष्यले इन्द्रियविजयी भएर अर्थात् इन्द्रियहरूलाई पूर्ण रूपमा आफ्नो नियन्त्रणमा राखेर यी चन्द्र र सूर्यवंशको अत्यन्त मङ्गलदायक कथा सुन्दछ, उसले अतुलनीय रूपमा धनधान्य प्राप्त गर्छ अर्थात् ऊ यथार्थ रूपमा अत्यन्त सम्पन्नशाली हुनेछ ॥६७॥ अत्यन्त बलशाली, पराक्रमशाली अत्यधिक रूपमा धन सञ्चय गर्ने, परम निष्ठान् इक्ष्वाकु, जह्नु, मान्धाता, सगर, अविक्षित अर्थात् मरुत, रघुवंशीय राजाहरू तथा नहुष र ययाति आदिको चरित्रका विषयमा सुनेर, जुन समयको प्रभावले गर्दा यस समयमा कथामात्र बाँकी रहेका छन्, तिनीहरूलाई धारण गर्ने प्रज्ञावान् मनुष्य कृतकृत्य हुन्छ र पुत्र, स्त्री, घर, शरीर आदिमा उसको कुनै किसिमको ममता वा अपनत्व रहँदैन अर्थात् उसले कुनै पदार्थ वा वस्तुप्रति ममतापूर्ण भाव राख्दैन ॥६८-६९॥ जुन सबै उत्तम पुरुषहरूले उर्ध्वबाहु भएर अनेकौं वर्षहरूसम्म तपस्या तथा अनेकौं यज्ञहरूको अनुष्ठान गरेका थिए, आज ती अत्यन्त बलबान् र पराक्रमी राजाहरूको समयानुसार कथामात्र शेष अर्थात् बाँकी रहेको छ ॥७०॥ जुन राजा पृथु आफ्ना सबै शत्रुहरूमाथि पूर्ण रूपमा विजय प्राप्त गरेर अन्यन्त स्वच्छन्दतापूर्वक सबै लोकहरूमा विचरण अर्थात् भ्रमण गर्दथे, आज ती पनि कालरूपवायुबाट अभिप्रेरित भएर अग्निकुण्डमा हालिएको सिमलका रुखको रुवाको जसरी नै विनष्ट भए ॥७१॥ जुन कार्तवीर्य अर्जुनले आफ्नो पराक्रमद्वारा सम्पूर्ण शत्रुहरूको विनाश गरेर सातोटै द्वीपहरूको उपभोग गरेका थिए, यस समयमा कथाको प्रसङ्गमा उनका नामको उच्चारण गर्दा मनमा अनेकौं किसिमका सङ्कल्प-विकल्पहरू उत्पन्न हुन्छन् अर्थात् यथार्थमा यस्तो भएको थियो कि थिएन भन्ने द्विविधा उत्पन्न हुन्छ ॥७२॥ सबै दिशाहरूलाई आफ्नो सामर्थ्यको प्रकाशले देदीप्यमान बनाउने रावण, अविक्षित अर्थात् मरुत र भगवान् श्रीरामचन्द्र आदिको

दशाननाविक्षितराघवाणा-
मैश्वर्यमुद्धासितदिङ्मुखानाम्।
भस्मापि शिष्टं न कथं क्षणेन
भ्रूभङ्गपातेन धिगन्तकस्य ॥७३॥
कथाशरीरत्वमवाप यद् वै
मान्धातृनामा भुवि चक्रवर्ती।
श्रुत्वापि तत् कोऽपि करोति साधु-
र्ममत्मन्यपि मन्दचेतात्वमाः ॥७४॥
भगीरथाद्याः सगरः ककुत्स्थो
दशनानो राघव लक्ष्मणौ च।
युधिष्ठिराद्याश्च बभूवुरेते
सत्यं न मिथ्या क्व नु ते न विद्मः ॥७५॥
ये साम्प्रतं ये च नृपा भविष्याः
प्रोक्ता मया विप्रवरोग्रवीर्य्याः।
ये ते तथान्ये च तथाभिधेयाः
सर्वे भविष्यन्ति यथैव पूर्वे ॥७६॥
एतद् विदित्वा न नरेण कार्यं
ममत्वमात्मन्यपि पण्डितेन।
तिष्ठन्तु तावत् तनयात्मजाद्याः
क्षेत्रदयो ये च शरीरिणोऽन्ये ॥७७॥

ऐश्वर्यलाई पनि यमराजले आँखिभौँ टेढो पार्दा क्षणमात्रमा पूर्णरूपमा समाप्त भयो। त्यसकारण यस किसिमको ऐश्वर्यलाई धिक्कार छ ॥७३॥ जुन राजा मान्धाता सम्पूर्ण भूमण्डलका चक्रवर्ती राजा भएका थिए, वर्तमान अवस्थामा उनको कथा पढेपछि मात्र उनी भएको अनुभूति हुन सक्दछ भने यस किसिमको कुरा सुनेपछि कुन मन्दबुद्धि भएकाले आफ्नो शरीरको ममता गर्दछ अर्थात् शरीरलाई आफ्नो सम्झिएर त्यसमा आसक्त हुन्छ ॥७४॥ भगीरथ, सगर, ककुत्स्थ, रावण, राम, लक्ष्मण र युधिष्ठिर आदि राजाहरू भएका थिए। यो यथार्थ सत्य भएकोमा कुनै द्विविधा रहेको छैन। तर यस समयमा ती सबै कहाँ रहेका छन्, त्यसका विषयमा कसैले स्पष्ट पार्न सक्दैन ॥७५॥ हे ब्राह्मणश्रेष्ठ! वर्तमान एवं भविष्यमा हुने जति राजाहरूका सम्बन्धको कथा मैले तिमीलाई सुनाएँ। ती सबै र तिनीहरूबाहेक पनि जति राजाहरू हुनेछन्, यसभन्दा पहिलेका राजाहरूका जसरी नै ती सबैको निश्चित रूपमा मृत्यु हुनेछ अर्थात् कोही पनि अजर, अमर र अविनाशी छैनन् ॥७६॥ यसरी ज्ञान प्राप्त गरिसकेपछि छोरा, छोरी र शरीर, श्रीमती आदि तथा प्राणीको कुरा त अलग रह्यो, विवेकशील मनुष्यले आफ्नो शरीरसँग पनि ममता र आसक्ति राख्नु हुँदैन अर्थात् मनुष्यले यथार्थ रूपमा निर्विकार हुनुपर्दछ ॥७७॥

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे चतुर्विंशोऽध्यायः।

इति श्रीविष्णुमहापुराणे चतुर्थांशे सम्पूर्णम्।

ॐ

## पञ्चमांशः

### प्रथमोऽध्यायः　　　　अध्याय– १

### 'वसुदेव–देवक्योर्विवाहः, ब्राह्मणः समीपे पृथिव्या गमनम्, विष्णोः स्तोत्रम्, कंसादीन् हन्तु विष्णोरङ्गीकारश्च'

(वसुदेव र देवकीको विवाह, पृथ्वी ब्रह्माजीका समीपमा गएकी, भगवान् विष्णुको स्तुति)

**मैत्रेय उवाच**

**नृपाणां कथितः सर्वो भवता वंशविस्तरः।**
**वंशानुचरितञ्चैव यथावदनुवर्णितम् ॥१॥**
**अंशावतारो ब्रह्मर्षे योऽयं यदुकुलोद्भवः।**
**विष्णोस्तं विस्तरेणाहं श्रोनुमिच्छाम्यशेषतः ॥२॥**
**चकार यानि कर्माणि भगवान् पुरुषोत्तमः।**
**अंशांशेनावतीर्योर्व्यां तत्र तानि मुने! वद ॥३॥**

**पराशर उवाच**

**मैत्रेय! श्रूयतामेतद् यत् पृष्टोऽहमिदं त्वया।**
**विष्णोरंशांशसम्भूतिचरितं जगतो हितम् ॥४॥**
**देवकस्य सुतां पूर्वं वसुदेवो महामुने।**
**उपयेमे महाभागां देवकीं देवतोपमाम् ॥५॥**
**कंसस्तयोर्वररथं चोदयामास सारथिः।**
**वसुदेवस्य देवक्याः संयोगे भोजनन्दनः ॥६॥**
**अथान्तरिक्षे वागुच्चैः कंसमाभाष्य सादरम्।**
**मेघगम्भीरनिर्घोषं समाभाष्येदमब्रवीत् ॥७॥**
**यामेतां बहसे मूढ! सह भर्त्रा रथे स्थिताम्।**
**अस्यास्ते चाष्टमो गर्भः प्राणानपहरिष्यति ॥८॥**

**मैत्रेयले भने –** हे भगवन् ! हजुरले राजाहरूका सम्पूर्ण वंशहरूका सम्बन्धमा विस्तारपूर्वक तथा उनीहरूको चरित्रका विषयमा क्रमशः यथार्थ रूपमा बताइदिनुभयो ॥१॥ हे ब्रह्मर्षि! अब म यदुकुलमा जुन भगवान्‌को अंशावतार भएको थियो, त्यसको कथा तत्त्वतः र यथार्थरूपमा अत्यन्त विस्तारपूर्वक सुन्न चाहन्छु। ममा दया गरेर त्यो कथा स्पष्ट रूपमा बताइदिनुहोस् ॥२॥हे मुनीश्वर! भगवान् पुरुषोत्तमले आफ्नो अंशांश अर्थात् अंशको पनि अंश वा कुनै अंशको हिस्साबाट पृथ्वीमा अवतीर्ण भएर अर्थात् अवतार लिएर जुन–जुन कर्म गर्नुभएको थियो, ती सबैका विषयमा हजुरले मलाई यथार्थ रूपमा बताइदिनुहोस् ॥३॥ **पराशरजीले भन्नुभयो –** हे मैत्रेय! तिमीले मसँग जे सोधेका छौ, त्यो संसारमा परम मङ्गलदाय भगवान् विष्णुको अंशावतारको चरित्रका विषयमा विस्तारपूर्वक सुन ॥४॥ हे महामुनि! प्राचीन समयमा देवककी अत्यन्त भाग्यशालिनी पुत्री देविस्वरूपा देवकीसँग वसुदेवजीले विवाह गर्नुभयो ॥५॥ वसुदेव र देवकीको वैवाहिक कार्यक्रम समाप्त भइसकेपछि उनीहरूलाई बिदा गर्दाका समयमा राजा भोजका पुत्र कंसले स्वयं सारथि बनेर उनीहरूको माङ्गलिक रथ हाँक्न थाले ॥६॥ त्यस समयमा आकाशमा आदरपूर्वक मेघका समान गर्जना भएको देववाणी अर्थात् भविष्यवाणी भयो। त्यसमा कंसलाई सम्बोधन गर्दै भनिएको थियो ॥७॥ 'हे मूर्ख अर्थात् अविवेकी! आफ्ना पतिसँग रथमा बसेकी जुन देवकीलाई तँ स–सम्मान उनको घरमा पुऱ्याउन गइरहेको छस्, यिनैको आठौं गर्भबाट उत्पन्न भएको बालकका हातबाट निश्चित रूपमा तेरो मृत्यु हुनेछ' ॥८॥ **पराशरजीले भन्नुभयो –** यस

पराश उवाच

इत्याकर्ण्य समादाय खड्गं कंसो महाबलः ।
देवकीं हन्तुमारब्धो वसुदेवोऽब्रवीदिदम् ॥९॥
न हन्तव्या महाबाहो! देवकी भवता तव ।
समर्पयिष्ये सकलान् गर्भानस्योदरोद्भवान् ॥१०॥
तथेत्याह च तं कंसो वसुदेवं द्विजोत्तम ।
न घातयामास च तां देवकीं तस्य गौरवात् ॥११॥
एतस्मिन्नेव काले तु भूरिभारावपीडिता ।
जगाम धरणी मेरौ समाजे त्रिदिवौकसाम् ॥१२॥
सब्रह्मकान् सुरान् सर्वान् प्रणिपत्याह मेदिनी ।
कथयामास तत्सर्वं खेदात् करुणभाषिणी ॥१३॥

पृथिव्युवाच

अग्निः सुवर्णस्य गुरुर्गवां सूर्यः परो गुरुः ।
ममाप्यखिललोकानं गुरुर्नारायणो गुरुः ॥१४॥
प्रजापतिपतिर्ब्रह्मा पूर्वेषामपि पूर्वजः ।
कलाकाष्ठानिमेषात्मा कालश्चाव्यक्तमूर्तिमान् ॥१५॥
तदंशभूतः सर्वेषां समूहो वः सुरोत्तमाः ।
आदित्या मरुतः साध्या रुद्रा वस्वश्विवह्नयः ॥१६॥
पितरो ये च लोकानां स्रष्टारोऽत्रिपुरोगमाः ।
एतत् तस्याप्रमेयस्य रूपं विष्णोर्महात्मनः ॥१७॥
यक्षराक्षसदैतेयपिशचोरगदानवाः ।
गन्धर्वाप्सरसश्चैव रूपं विष्णोर्महात्मनः ॥१८॥
ग्रहर्क्षतारकाचित्रगगनाग्निजलानिलाः ।
अहञ्च विषयाश्चैतत् सर्वं विष्णुमयं जगत् ॥१९॥

प्रकारको भविष्यवाणी सुनिसकेपछि अत्यन्त पराक्रमशाली कंस म्यानबाट तरबार निकालेर देवकीको हत्या गर्नका लागि तयार भयो। कंस यसरी आवेगमा आएको देखेर वसुदेवजीले कंससँग भन्नुभयो... ॥९॥ हे महाबाहो! तपाइँ देवकीको हत्या नगर्नुहोस्। यिनका गर्भबाट जति बालक उत्पन्न हुन्छन्, म ती सबै तपाइँलाई समर्पण गरिदिनेछु अर्थात् सुम्पिदिनेछु ॥१०॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि कंसले वसुदेवजीसँग सत्यपूर्ण र गौरवयुक्त 'ल हुन्छ' भनेर देवकीको हत्या गरेन अर्थात् वसुदेवजीको प्रस्तावलाई सहर्ष स्वीकार गऱ्यो ॥११॥ यसै समयमा अत्यन्त गह्रुङ्गो भार थाम्नुपरेकाले ज्यादै पीडित भएर गाईको स्वरूप धारण गरेर पृथ्वी सुमेरु पर्वतमा निवास गरिरहेका देवताहरूका नजिकमा गइन् ॥१२॥ त्यहाँ पुगेपछि पृथ्वीले ब्रह्मजीका सहित सम्पूर्ण देवताहरूलाई अत्यन्त नम्रतापूर्वक प्रणाम गर्दै ज्यादै करुण स्वरमा बोल्दै आफूमाथि आइलागेको पीडाका विषयमा यथार्थ रूपमा बताइन् ॥१३॥ **पृथ्वीले भनिन्–** जसरी अग्नि सुवर्ण अर्थात् सुनको तथा सूर्यको किरणहरूको परम गुरु हुनुहुन्छ, त्यसरी नै सम्पूर्ण लोकहरूको सर्वोत्कृष्ट गुरु भगवान् श्रीनारायण मेरो परम गुरु हुनुहुन्छ ॥१४॥ उहाँ प्रजापतिहरूका पनि परम पति र पूर्वजहरूका पूर्वज ब्रह्मजी हुनुहुन्छ; उहाँ नै कला, काष्ठा र निमेष आदिका स्वरूपमा प्रतीत हुने अव्यक्त कालस्वरूप पनि हुनुहुन्छ ॥१५॥ हे देवश्रेष्ठहरू! तपाइंहरू सबै उहाँकै अंशबाट उत्पन्न हुनुभएको हो। आदित्य, मरुत्हरू, साध्यहरू, रुद्र, वसु, अश्विनिकुमार, अग्नि, पितृहरू एवं सृष्टिकर्ता अत्रि आदि प्रजापतिहरू यी सबै उहाँ अविनाशी, अव्यक्त एवं अप्रमेय अर्थात् यथार्थ रूप जान्न नसकिने महात्मा एवं सम्पूर्ण जगत्का परमगुरु तथा उत्पत्तिकर्ता परब्रह्मपरमात्मा भगवान् श्रीविष्णुकै स्वरूप हुन् ॥१६–१७॥ यक्ष, राक्षस, दैत्य, पिशाच, सर्प, दानव, गन्धर्व एवं अप्सराहरू आदि पनि उहाँ परब्रह्मपरमात्मा एवं महात्मा भगवान् श्रीविष्णुकै स्वरूप हुन् ॥१८॥ ग्रह, नक्षत्र तथा ताराहरूबाट पूर्ण रूपमा सजिएको आकाश, अग्नि, जल, वायु एवं म अर्थात् पृथ्वी र सम्पूर्ण इन्द्रियहरूका सबै विषयहरूसहित यो सम्पूर्ण जगत् परब्रह्मपरमात्मा श्रीविष्णुमय नै छ ॥१९॥ तथापि अनेकौं किसिमका

तथाप्यनेकरूपस्य तस्य रूपाण्यहर्निशम् ।

बाह्यबाधकतां यान्ति कल्लोला इव सागरे ॥२०॥

तत् साम्प्रतमिमे दैत्याःकालनेमिपुरोगमाः ।

मर्त्यलोकं समाक्रम्य बाधन्तेऽहर्निशं प्रजाः ॥२१॥

कालनेमिर्हतो योऽसौ विष्णुना प्रभविष्णुना ।

उग्रसेनसुतः कंसः सम्भूतः स महासुरः ॥२२॥

अरिष्टो धेनुकः केशी प्रलम्बो नरकस्तथा ।

सुन्दोऽसुरस्तथात्युग्रो वाणश्चापि बलेः सुतः ॥२३॥

तथान्ये च महावीर्या नृपाणां भवनेषु ये ।

समुत्पन्ना दुरात्मानस्तान् न संख्यातुमुत्सहे ॥२४॥

अक्षौहिण्योऽत्र बहुला दिव्यमूर्तिधृतां सुराः ।

महाबलानां दृप्तानां दैत्येन्द्राणां ममोपरि ॥२५॥

तद्भूरिभारपीडार्ता न शक्नोम्यमरेश्वराः ।

विभर्तुमात्मानमहमिति विज्ञापयामि वः ॥२६॥

क्रियतां तन्महाभागा मम भारावतारणम् ।

यथा रसातलं नाहं गच्छेयमतिविह्वला ॥२७॥

पराशर उवाच

इत्याकर्ण्य धरावाक्यमशेषं त्रिदशैस्ततः ।

भुवो भारावतारार्थं ब्रह्म प्राह प्रचोदितः ॥२८॥

ब्रह्मेवाच

यथाह वसुधा सर्वं सत्यमेतद्दिवौकसः ।

अहं भवो भवन्तश्च सर्वं नारायणात्मकम् ॥२९॥

स्वरूपहरू धारण गर्नुहुने परब्रह्मपरमात्मा भगवान् श्रीविष्णुका यी स्वरूपहरू समुद्रमा उत्पन्न भएका तरङ्गहरू जस्तै रात–दिन एक–अर्काका बाध्य एवं बाधक भइरहेका हुन्छन् ॥२०॥यस समयमा कालनेमि आदि नाम भएका दैत्यहरूले मर्त्यलोकमा आफ्नो अधिकार स्थापित गरेर दिन–रात निरन्तर रूपमा त्यहाँका निवासी प्राणीमात्रलाई अत्यन्त पीडा दिइरहेका छन् ॥२१॥पूर्वकालमा यसै कालनेमिको सर्वशक्तिसम्पन्न परब्रह्मपरमात्मा भगवान् श्रीविष्णुले विनाश गरिदिनुभएको थियो अर्थात् त्यसलाई मारिदिनुभएको थियो। त्यही महान् असुरले यस समयमा उग्रसेनको पुत्र कंसका स्वरूपमा जन्म लिएको छ ॥२२॥अरिष्टनेमि, धेनुक, केशी, प्रलम्ब, नरक, सुन्द एवं बलिका पुत्र वाणासुर र महापराक्रमी दुरात्माहरूले राजाहरूका घरमा जन्म लिएका छन्। म उनीहरूको गणना गर्नसम्म पनि अत्यन्त असमर्थ भइसकेकी छु ॥२३–२४॥हे दिव्यमूर्ति धारण गर्नुभएका देवताहरू! यस समयमा ममाथि अत्यन्त बलवान् र अभिमानबाट पूर्ण रूपमा सम्पन्न भएका दैत्यहरूका अनेकौं अक्षौहिणी सेनाहरूको भार परिरहेको छ, जसको प्रभावले गर्दा म अत्यन्त पीडित भएकी छु ॥२५॥हे अमरेश्वरहरू! म तपाईंहरू समक्ष उनीहरूद्वारा अत्यन्त पीडित भएकाले अब आफैंलाई धारण गर्न पनि पूर्ण रूपमा असमर्थ भइसकेकी हुनाले सोही कुराको जानकारी गराउनका लागि तपाईंहरूका नजिकमा आएकी हुँ ॥२६॥ त्यसकारण हे महाभाग अर्थात् धर्मात्माहरू! तपाईंहरूले ममा परिरहेको पीडा हटाउने यस्तो कुनै उपाय गर्नुहोस्, जसले गर्दा मैले अत्यन्त व्याकुल भएर रसातलमा जान बाध्य नहुनुपरोस् अर्थात् मलाई आफैंलाई धारण गर्न सहज अवस्था सृजना होस् ॥२७॥ **पराशरजीले भन्नुभयो–** पृथ्वीका यस प्रकारका अत्यन्त पीडादायक वचन सुनिसकेपछि पृथ्वीमा परिरहेको भार हटाउनका लागि सबै देवताहरूबाट अभिप्रेरित भएर पितामह प्रजापति ब्रह्मजीले भन्न आरम्भ गर्नुभयो ॥२८॥ **ब्रह्मजीले भन्नुभयो–** हे देवताहरू! पृथ्वीले जे–जे भनिरहेकी छिन्, त्यो यथार्थ रूपमा सत्य हो, वास्तवमा म, शङ्कर र तपाईंहरू सबै परब्रह्म परमात्मा भगवान् श्रीनारायणकै स्वरूप हौं। यसमा कुनै किसिमको द्विविधा रहेको छैन ॥२९॥ परब्रह्म परमात्मा श्रीनारायणका जति पनि

विभूतयस्तु यास्तस्य तासामेव परस्परम् ।
आधिक्यन्यूनता बाध्यबाधकत्वेन वर्तते ॥३०॥
तदागच्छत गच्छाम क्षीराब्धेस्तटमुत्तमम् ।
तत्राराध्य हरिं तस्मै सर्वं विज्ञापयाम वै ॥३१॥
सर्वदैव जगत्यर्थे स सर्वात्मा जगन्मयः ।
स्वल्पांशेनावतीर्योर्व्यां धर्मस्य कुरुते स्थितिम् ॥३२॥
पराशर उवाच
इत्युक्त्वा प्रययौ विप्र! सह देवैः पितामहः ।
समाहितमतिश्चैवं तुष्टाव गरुडध्वजम् ॥३३॥
ब्रह्मोवाच
द्वे विद्ये त्वमनाम्नाय परा चैवापरा तथा ।
ते एव भवतो रूपे मूर्तामूर्तात्मके प्रभो ॥३४॥
द्वे ब्रह्मणी त्वणीयोऽतिस्थूलात्मन् ! सर्व सर्ववित् ।
शब्दब्रह्म परञ्चैव ब्रह्म ब्रह्ममयस्य यत् ॥३५॥
ऋग्वेदस्त्वं यजुर्वेदः सामवेदस्त्वथर्वणः ।
शिक्षा कल्पो निरुक्तञ्च छन्दो ज्योतिषमेव च ॥३६॥
इतिहासपुराणे च तथा व्याकरणं प्रभुः ।
मीमांसा न्यायकं तत्त्वं धर्मशास्त्राण्यधोक्षज ॥३७॥
आत्मात्मदेहगुणवद् विचाराचारि यद्वचः ।
तदप्यादिपते नान्यदध्यात्मात्मस्वरूपवत् ॥३८॥

विभूतिहरू रहेका छन्, तिनीहरूमा परस्पर थोरै र धेरै मात्र बाध्य अर्थात् नियम, विधि, वचन आदिले बाँधिएको वा नगरी नहुने स्थितिमा परेको र बाधक अर्थात् काममा बाधा पुऱ्याउने वा रोक्ने रूपबाट रहेका हुन्छन् ॥३०॥यसैले तपाईंहरू आउनुहोस्, अब हामी सबै क्षीरसागरको अत्यन्त पवित्र किनारमा जाऔं, त्यहाँ परब्रह्मपरमात्मा श्रीहरिको आराधना गरेर यी सम्पूर्ण पीडादायक कुराहरू उहाँका चरणाविन्दमा श्रद्धा र भक्तिपूर्वक निवेदन गरौं ॥३१॥उहाँ परब्रह्म परमात्मा विश्वरूप एवं सर्वात्मा अर्थात् सबैका आत्मा भगवान् श्रीहरिले पूर्ण रूपमा संसारको कल्याण गर्नका लागि मात्र आफ्नो परम शुद्ध सत्त्वांशबाट अवतार धारण गर्नु भएर पृथ्वीमा अधर्मको विनाश एवं धर्मको स्थापना गर्नुहुन्छ ॥३२॥ **पराशरजीले भन्नुभयो** – यति भनिसकेपछि सबै देवताहरूसहित पितामह ब्रह्म क्षीर सागरको अत्यन्त पवित्र किनारमा जानुभयो र अत्यन्त एकाग्रचित्त भएर भगवान् श्रीगरुडध्वजको यसरी स्तुति गर्न थाल्नुभयो ॥३३॥ **ब्रह्मजीले भन्नुभयो** – हे प्रभु! हे अनाम्नाय! वेदबाट अनुभव हुन नसक्ने परा र अपरा यी दुवै विद्याहरू हजुरकै मूर्त एवं अमूर्तात्मक स्वरूप हुन् ॥३४॥ हे अत्यन्त सूक्ष्म परब्रह्म परमात्मा! हे विराट्स्वरूप! हे सर्वात्मा! हे सर्वज्ञ पुरुषोत्तम! शब्दब्रह्म र परब्रह्म यी दुवै किसिमका ब्रह्म हजुरकै स्वरूप हुन् ॥३५॥ हे सर्वात्मा भगवान्! हजुर नै ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेद हुनुहुन्छ तथा हजुर नै शिक्षा, कल्प, निरुक्त, छन्द र ज्योतिषशास्त्रस्वरूप हुनुहुन्छ ॥३६॥हे प्रभु! हे परब्रह्म परमात्मा! हजुर नै इतिहास, पुराण, व्याकरण, मीमांसा न्यायशास्त्र र धर्मशास्त्र हुनुहुन्छ ॥३७॥ जुन जीवात्मा, परमात्मा, स्थूल, सूक्ष्म शरीर छ र जो तिनीहरूको अव्यक्त कारण छ, यी सबै विचारहरूबाट सम्पन्न अन्तरात्मा र परमात्माका स्वरूपको बोधक अर्थात् ज्ञान गराउने वेदान्तवाक्य अर्थात् तत्त्वसिद्धि छ, त्यो पनि हजुरभन्दा अलग रहेको छैन ॥३८॥ हजुर अव्यक्त, अनिर्वाच्य अर्थात् वचनका